॥ श्रीः ॥

# पारस्करगृह्यसूत्रम्

## (शुक्लयजुर्वेदाध्यायीहरूको मूल कर्मकाण्ड-ग्रन्थ)



तस्बिर श्रोतः detechter.com

सङ्कलन एवं भावानुवाद : मोहन प्रसाद सापकोटा

(भाषा : संस्कृत-नेपाली)

## दुई शब्द

अग्निसँग सम्बन्धित भएर गृहस्थबाट गरिने विविध प्रकारका संस्कार र अन्य केही विषय समेतलाई समेटी छोटकरीमा सूत्रकारूपमा लेखिएका ग्रन्थलाई गृह्यसूत्र भनिन्छ । शुक्ल यजुर्वेद शाखा अन्तर्गत पारस्कर गृह्यसूत्र र वैजवाप गृह्यसूत्र गरी दुई गृह्यसूत्र छन् । पारस्कर गृह्यसूत्रलाई वाजसनेय गृह्यसूत्र वा कातीय गृह्यसूत्र पनि भनिन्छ ।

पारस्कर गृह्यसूत्र पारस्कर ऋषिले कहिले लेखे भन्ने विषयमा मतैक्यता पाइन्न । विभिन्न विद्वानहरुले यसको रचनाकाल ई.पू. छ सयदेखि ई.पू. दुई सयसम्म बताएका छन् । पारस्कर ऋषिको परिचय धेरै पाइन्न, कसैले उनी कात्यायन ऋषिका शिष्य थिए पनि भनेका छन् । पारस्कर ऋषि तत्कालीन सिन्धदेश आसपासका भएको अनुमान गरिन्छ । उनको यो मत तत्कालीन उत्तर भारतवर्षभर प्रचलित थियो भनिन्छ ।

गृह्यसूत्रमा सम्बन्धित सम्प्रदायको संस्कार विधिलाई प्रमुखरूपमा लिपिवद्ध गरिएको हुन्छ । हरेक शास्त्रले अग्निसँग सम्बद्ध भई गर्नुपर्ने हरेक धर्मकर्म आफ्नै गृह्यसूत्र अनुसार गर्नु पर्दछ, अर्कोको गृह्यसूत्र अनुसार गर्न हुँदैन भनेका छन् ।

सबैतिरका विधि घुसाएर खिचडी बनाइएका हाम्रा संस्कारका विधिलाई केही हदसम्म शुद्ध बनाउन सकिन्छ कि, मन्त्रको अर्थ समेत बुझेपछि कुन संस्कारको कुन विधि किन गरिएको हो भनेर थोरै भएपनि थाहा दिन सकिन्छ कि भन्ने उद्देश्यले मबाट यो प्रयाश भएको हो । आफ्ना सीमन्तोन्नयन आदि जस्ता संस्कारलाई बोझ मान्दै अरुका अझ बोझिला बेबी-सावर आदि जस्ता संस्कार भित्र्याउन पल्केको समाज थोरै भएपनि झस्कन्छ कि भन्ने उद्देश्यले पनि यो ग्रन्थ सर्वसुलभ बनाएर पस्किएको हुँ । संस्कार शुद्ध र सफा बनाउन गरिने वैदिक विधि हुन् । अझ अशुद्ध बनाउने खालका कुनै पनि विधिलाई संस्कार भनिन्न ।

मैले यो ग्रन्थ सङ्कलन र भावानुवाद गर्ने क्रममा डा. हरिदत्त शास्त्री र डा.जगदीशचन्द्र मिश्रको यस ग्रन्थको भाष्य, शिवराज आचार्यका केही ग्रन्थ र अन्य थुप्रै ग्रन्थको पनि धेरथोर सहयोग लिएँ । जसरी यसलाई प्रकाशन गर्ने मन थियो त्यसरी विस्तार गरी प्रकाशन गर्न सकिन । सकेसम्म सरल र छोटकरीतिर नै लागें । एक विद्यार्थीबाट संकलित यस ग्रन्थमा भएका भूललाई सबै गुरूजनबाट क्षमादान हुनेछ र आवश्यक सल्लाह र सुझाव प्राप्त पनि हुनेछ भन्ने दृढ विश्वास लिएको छु । म यो ग्रन्थ सम्पूर्ण मेरा पूर्वजहरूका नाममा समर्पण गर्न चाहन्छु ।



**sapkotamps731@gmail.com**

## विषयानुक्रमणिका

# ॥ श्रीः ॥

# पारस्करगृह्यसूत्रम्

## प्रथमकाण्डम्

### प्रथमा कण्डिका

**अथातो गृह्यस्थालीपाककर्म ॥१॥**

भावार्थ : अब यसपछि यज्ञमा हवन गरिने सातु आदि कुरा तयार गरिने आदि विधिका बारेमा बताइन्छ ।

**परिसमुह्योपलिप्योल्लिख्योद्धृत्याम्भुक्ष्याऽग्निमुपसमाधाय, दक्षिणतो ब्रह्मासनमास्तीर्य प्रणीय परिस्तीर्यार्थवदासाद्य, पवित्रे कृत्वा प्रोक्षणीः संस्कृत्यार्थवत् प्रोक्ष्य निरूपाज्यमधिश्रित्य पर्यग्नि कुर्यात् ॥२॥**

भावार्थ : (क) सत्ताईस अमलको घेरो (मण्डल) बनाउनू र त्यो मण्डललाई परिसमुहन गर्नू ( परिसमुह्य) । (ख) त्यसपछि गोबर-पानीले लिप्नू (उपलिप्य) । (ग) सुरोको फेद वा स्फ्यले वेदीको बीचमा पर्नेगरी तीन वटा रेखा खिँच्नू (उल्लिख्य) । (घ) रेखा कोर्दा निक्लेको माटो हातले उठाउनू (उद्धृत्य) । (ङ)वेदीमा जल छर्कनू (अम्भुक्ष्य) । (च) काँस वा तामाको भाँडामा आगो लिई श्रौत वा स्मार्त अग्नि बाल्नू वा अग्निको स्थापना गर्नू (अग्निमुपसमाधाय) । (छ) यसरी पञ्चभूसंस्कार गरेपछि वेदीको दक्षिणतिर ब्रह्माका लागि पवित्र आसन ओछ्याउनू (दक्षिणतो ब्रह्मासनमास्तीर्य) । ( ज) प्रणितालाई बायाँ हातमा लिई त्यसलाई पवित्र जलले भर्नू र यथास्थानमा राख्नू (प्रणीय) । (झ) वेदीको चारैतिर कुश ओछ्याउनू (परिस्तीर्य) । (ञ) त्यसपछि यज्ञमा चाहिने सामान जम्मा गर्नू (अर्थवदासाध्य) । (ट) त्यसपछि पवित्र बनाउनू (पवित्रे कृत्वा) । (ठ) पवित्रलाई प्रोक्षणीपात्रको जलले सेचन गर्नू । प्रोक्षण कर्म उत्तानो हातले र अभ्युक्षण कर्म घोप्टो हातले गरिन्छ (उत्तानेन तु हस्तेन प्रोक्षणं समुदाहृतम् । तिरश्चावीक्षणं कुर्यान्नीचैरभ्युक्षणं कृतम्) । प्रणिताको जललाई प्रोक्षणीपात्रमा तीन पटक हाल्नू । प्रणिताको जलले प्रोक्षणीपात्रलाई पुछ्नू । प्रोक्षणी संस्कारको क्रममा पहिले प्रोक्षणीपात्रलाई प्रणीतापात्रको नजिकै राखी प्रणीताको पवित्र जल त्यसमाथि छर्की तथा अन्य जम्मा गरिएका यज्ञीय सामानमा जल छर्की यज्ञाग्नि र प्रणितापात्रको बीचमा प्रोक्षणीपात्र (प्रोक्षणीः संस्कृत्य) राख्नू । (ड) अनि अन्य यज्ञीय सामानहरुमा पनि जल छर्कनू । जलसेचन गर्नुपूर्व दाहिने हातले प्रोक्षणीपात्रलाई देब्रे हातमा राखेर नै जलसेचन गर्नु पर्दछ (अर्थवत् प्रोक्ष्य) । (ढ) यसपछि घिउलाई हेर्नू र आज्यस्थालीमा घिउ हाल्नू (निरूपाज्य) । (ण)

आज्यस्थालीलाई आगोमा राख्नू वा सेकाउनू (अधिश्रित्य) । (त) त्यसपछि बलिरहेको समिधालाई आज्यस्थालीको चारैतिर घुमाउनू (पर्यग्नि कुर्यात्) ।

शब्दार्थ : (१) **परिसमुहनः**- पाँचप्रकारका जमिनका संस्कारमध्येको एक । यसमा तीन वटा कुशले होम गरिने वेदीमाथि धुलो बढारी, त्यो कुशलाई ईशानकोणमा फालिन्छ । (२) **स्फ्यः**- यज्ञको वेदीमा रेखा कोर्ने तरबारका आकारको काठको सामान । (३) **ब्रह्माः**- यज्ञकर्म सम्पन्न गर्न कर्मकाण्डमा निष्ठावान् एवं पवित्र ब्राह्मणलाई ब्रह्मा भनिन्छ । यसको अभावमा पचास वटा कुशले बनेको ब्रह्मालाई नै वरण गर्नु पर्दछ । (४) **प्रणिताः**- मन्त्र पढ्दै संस्कार गरेर जल राख्ने, पलाश आदिको काठले बनेको, बाह्र अमल लामो, चार अमल चौडा, एक अमलको बिँड भएको, होम गरिने अग्निको उत्तरतिर प्रोक्षणीपात्रको पछाडि राखिने यज्ञपात्र विशेष । (५) **यज्ञसामग्रीः**-तीन वटा सग्ला कुश, तरुणकुश (दुई वटा कुशका फेद), प्रोक्षणीपात्र, आज्यस्थाली, चरुस्थाली, सम्मार्जन कुश (वेदी बढार्ने कुश), उपनयन कुश (यज्ञीय कार्यमा प्रयोग गरिने कुशको संग्रह), समिधा (होमको आगो बाल्ने दाउरा), उमयमन कुश ( अग्निलाई यज्ञीय भूमीमा स्थापना गर्ने कुश), सुरो (काठले बनेको चम्चा), गाईको घिउ, पूर्णपात्र (चामलले भरिएको भाँडो) र दक्षिणा वा गाई । (६) **पवित्रः**-एक कुरेत लामो कुश बटारेर दोब्र्याई एक पटकमात्र एउटा टुप्पो घुमाएर अर्को टुप्पो बाँधिने गरी गाँठो पार्दा बन्न जाने पवित्र नामको कुश । यो भित्रैसम्म गुभो भएको टुप्पो सहितको र एक कुरेत लामो हुन्छ । यस्तो पवित्र चार वर्णका लागि क्रमशः चार, तीन, दुई र एक कुशको अथवा सबैका लागि दुई वटा कुशको बनाउने विधान छ । (७) **प्रोक्षणीपात्रः**- यज्ञमा होम गरिने अग्निको उत्तरतिर प्रणितादेखि अगाडि रहने सिप्लिकानको काठले बनेको यज्ञपात्र विशेष । यो पात्र बाह्र अमल लामो, चार अमल चौडा, चार अमल गहिरो, एक अमलको बिँड भएको, बाटुलो छाँटको र अगिल्तिर कमलको कोपिलाजस्तै आकार भएको हुन्छ । कसैले यो पात्र मिहेलको काठको एक बित्ता लामो हाँसको चुच्चो जस्तै परेको चार अमल गहिरो हुनु पर्दछ पनि भनेका छन् । यसमा जल हालेर सेचन गर्ने गरिन्छ । (८) **अग्निः**- अग्निको अर्थ पारस्कर गृह्य सूत्र अनुसार अग्निहोत्रको आगो भनी बुझ्नु पर्दछ । यसलाई ननिभाई राख्नु प्रत्येक ब्राह्मणको कर्तव्य हो । यहाँ गृह्याग्नि भन्नाले आवसथ्याग्नि, शालाग्नि र औपासनाग्नि गरी तीन थरी आगोलाई बुझ्नु पर्दछ । (९) **स्थालिपाकः**- स्थाली भन्नाले पकाउने भाँडो वा माटोको हाँडी सम्झिनु पर्दछ । स्थालिपाकको अर्थ एउटा धार्मिक कर्म जसको अनुष्ठान प्रत्येक हिन्दूको घरमा हुन्छ भनी जान्नू । सन्दर्भ अनुसार यसको अर्थ आज्याधिश्रयण, पुरोडाश निर्माण, धान तथा सातु आदि बुझिन्छ । (१०) **आज्यस्थालीः**-होम गर्दा घिउ राख्ने भाँडो ।



## स्रुवं प्रतप्य संसृज्याभ्युक्ष्य पुनः प्रतप्य निदध्यात्॥३॥

भावार्थ : सुरोलाई टुप्पोतिरबाट अग्निमा तताएर फेददेखि टुप्पोसम्म सम्मार्जन गर्नू (कुशले पुछ्नू) । प्रणिताको जलले सेचन गर्नू । फेरी अग्निमा तताउनू र वेदीको दक्षिण भागमा राख्नू ।

**आज्यमुद्वास्योत्पूयावेक्ष्य प्रोक्षणीश्च पूर्ववदुपयमनान् कुशानादाय समिधोऽभ्याधाय पर्य्युक्ष्य जुहुयात् ॥४॥**

भावार्थ : आज्यस्थालीलाई आगोबाट बाहिर निकाली (बूढी र साहिँली औँलाले समाइएको) पवित्रले तीन पटक जलछर्की शुद्ध पार्नू र त्यसमा केही अपवित्र वस्तु परे नपरेको हेर्नू । छ भने त्यस्तो कुरो निकाल्नू । अनि प्रोक्षणीपात्रको जललाई पनि यसरी निरीक्षण गरी परिशोधन वा शुद्ध गर्नू । यसपछि अग्निका सामु राखिएको कुशलाई दाहिने हातले टिपेर देब्रे हातमा लिनू । घिउ लगाइएका समिधालाई उभिएर यज्ञकुण्डमा हाल्नू । मन्त्र नपढी चारैतिर चुपचाप जल छर्कनू (ईशान दिशाबाट शुरु गरी दाहिने हुँदै) र तलका विधिले होम गर्नू ।

**एष एव विधिर्यत्र क्वचिद्धोमः ॥५॥**



भावार्थ : जहाँ सुकै होम हुँदा वा गर्दा यही विधि हुन्छ वा गर्नुपर्दछ ।

इति प्रथमकण्डिका

✷

होमका विधि बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत पहिलो काण्ड, पहिलो कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# द्वितीया कण्डिका

## आवसथ्याधानं दारकाले ॥१॥

भावार्थ : आवसथ्य अग्निको स्थापना विवाहका समयमा गर्नु पर्दछ ।

शब्दार्थ : (क) आवसथ्य अग्नि : कर्मकाण्ड अनुसार छ प्रकारका अग्निमध्ये विवाहमा लाजा होम गरिने अग्निलाई आवसथ्य अग्नि भनिन्छ । यही अग्निमा ननिभाइकन नित्य बिहानबेलुकी विवाहपछि खाना पकाउनु पर्ने विधान छ । यही अग्निलाई होम गर्दा वेदीको ईशान कुनामा स्थापना गरिन्छ । यो अग्निलाई आनाय्याग्नि, गृह्याग्नि वा विवाहाग्नि पनि पनिन्छ । यो अग्नि विवाहमा पाणिग्रहण गर्ने समयमा विधिपूर्वक ग्रहण गरिन्छ ।

## दायाद्यकाल एकेषाम् ॥२॥

भावार्थ : केही आचार्यले यो अग्निको स्थापना दाजुभाइको अंशबण्डाका बेलामा गर्नु पर्दछ पनि भनेका छन् ।



## वैश्यस्य बहुपशोर्गृहादग्निमाहृत्य ॥३॥

भावार्थ : अत्यधिक पशुले समृद्ध वैश्यको घरबाट आगो लेराई पूर्वलिखित विधिले अग्निस्थापना गर्नू ।

व्याख्या: गोभिल आदि गरिएका कतिपय आचार्यले यस्तो वैश्यको घर नभेटिए बाजागाजा सहित वेदमन्त्र उच्चारण गर्दै बहुयाजी ब्राह्मणका घरबाट पनि आगो लेराउन सकिन्छ भनेका छन् । यसपछि पञ्च भूसंस्कार गरिएको यज्ञ मण्डपमा त्यो आगोलाई राखी ब्रह्मावरण तथा ब्राह्मणभोजन पछि बताइए बमोजिमका कर्म गर्न शुरु गर्नू ।

## चातुष्प्राश्यपचनवत् सर्वम् ॥४॥

भावार्थ : चातुष्प्राश्य पकाए जसैगरी सबै कुरा पकाउनू ।

शब्दार्थ : (क) चातुष्प्राश्यः-वेदले बताएका यज्ञकर्ममा होम हाल्न संलग्न हुने चार जना ब्राह्मण (ऋत्विज्) लाई खुवाउनयोग्य पदार्थ पकाउने कार्य ।

## अरणिप्रदानमेके ॥५॥

भावार्थ : कसैले यज्ञको अग्नि उत्पन्न गर्न (बाल्न) अरणि मन्थन गर्नु पनि भनेका छन् ।

## पञ्चमहायज्ञा इति श्रुतेः ॥६॥

भावार्थ : वेदका वचन अनुसार पाँच महायज्ञ गर्नु पर्दछ ।

## अग्न्याधेयदेवताभ्यः स्थालीपाकꣳश्रपयित्वाऽऽज्यभागाविष्ट्वाऽऽज्याहुतीर्जुहोति ॥७॥

भावार्थ : अग्निमा आधेय देवताका लागि चरु (चामल) पकाएर आज्यभाग नामका आहुति दिई त्यसपछि घिउको आहुति दिनू ।



व्याख्या : आधेय देवताहरुः- (क) पवमान (ख) पावक (ग) शुचि र (घ) अदिति । आहुति दिने तरिका- 'ॐ प्रजापतये स्वाहा, इदं प्रजापतये न मम' । यो मनैमन उच्चारण गर्नू । त्यसपछि-'ॐ इन्द्राय स्वाहा, इदमिन्द्राय न मम । ॐ अग्नये स्वाहा, इदमग्नये न मम । ॐ सोमाय स्वाहा, इदं सोमाय न मम' । यसरी आज्यभागको आहुतिले हवन गरी सुरोमा लागेको हुतशेष घिउलाई प्रोक्षणीपात्रमा हालि दिनू ।

## ॐ 'त्वन्नोऽग्ने' 'सत्त्वन्नोऽअग्न' 'इमम्मे वरुण' 'तत्त्वायामी' 'ये ते शतम्' 'अयाश्चाग्न' उदुत्तमम्' 'भवतन्न' इत्यष्टौ ॥८॥

भावार्थ : ॐ 'त्वन्नोऽग्ने', 'सत्त्वन्नोऽअग्न', 'इमम्मे वरुण', 'तत्त्वायामी', 'ये ते शतम्', 'अयाश्चाग्न', 'उदुत्तमम्' र 'भवतन्न' मन्त्रले आठ पटक चरु होम गर्नू ।

मन्त्रः ॐ त्वन्न॑ ॥ त्वन्नो॑ऽअग्ने॒वरु॑णस्यवि॒द्द्वान्दे॒वस्य॒हेडो॒ऽअव॑यासिसीष्ठाꣳ ॥
यजि॑ष्ठोवह्नितम॒ꣳशोशु॑चानो॒विश्वा॒द्द्वेषा॑ꣳसि॒प्प्रमु॑मुग्ग्ध्य॒स्म्मत् ॥
स्वाहा इदमग्निवरुणाभ्यां न मम । (यजुर्वेद २१।३) ।

मन्त्रार्थः हे अग्नि ! हजुर सबै कुरा जान्नु हुन्छ, यज्ञादि सबै कर्मका प्रधान हुनुहुन्छ । हजुर हविष्का वाहक तथा कान्तिमान् हुनुहुन्छ । हजुरको कृपाले गर्दा वरुण देवता पनि ममाथि प्रसन्न हुनु हुनेछ । हजुर हाम्रा सारा दुर्भाग्यलाई हामीबाट टाढा गरिदिनु होस् ।

मन्त्रः ॐ सत्त्वम् ॥ सत्त्वन्नोऽअग्नेऽवमोभवोतीनेदिष्ठोऽअस्याऽउषसोव्व्युष्टौ ।
अवयक्ष्वनोव्वरुणꣳरराणोव्वीहिमृडीकꣳसुहवोनऽएधि ॥
स्वाहा इदमग्निवरुणाभ्यां न मम । (यजुर्वेद २१।४) ।

मन्त्रार्थः हे अग्नि ! हामीलाई औँटिएको कार्य सम्पन्न गर्नका लागि आफ्ना सारा रक्षा-साधनका साथ यसबेला मेरा नजिक आएर मेरो रक्षा गर्नु होस् । मेरो आहुति हाम्रा राजा वरुणलाई पुऱ्याई उनलाई सन्तुष्ट गरिदिनुहोस् । म आफ्ना सुखकारी हविको भोजनका लागि हजुरको आवाहन गर्दछु ।

मन्त्रः ॐ इमम्मे । व्वरुणश्श्रुधीहवमद्द्याचमृडय ॥ त्वामवस्युराचके ॥
स्वाहा इदं वरुणाय न मम । (यजुर्वेद २१।१) ।

मन्त्रार्थः हे वरुणदेव ! म आत्मरक्षाका लागि हजुरको आवाहन गर्दछु । हजुरले मेरो कुरा सुनि दिनु होस् तथा मलाई हरेक किसिमका सुख सुविधाहरू प्रदान गर्नुहोस् ।

मन्त्रः ॐ तत्त्वा । यामिब्ब्रम्ह्मणाव्वन्दमानस्त्तदाशास्त्तेयजमानोहविर्ब्भिः ॥
अहेडमानोव्वरुणेहबोध्ध्युरुशꣳसमानऽआयुꣳप्प्रमोषीꣳ ॥
स्वाहा इदं वरुणाय न मम । (यजुर्वेद २१।२) ।

मन्त्रार्थः हे वरुणदेव ! म हजुरको स्तुति गर्दै हजुरसँग त्यो बरदान माग्दछु, जसको इच्छा प्रत्येक हविष्यदाता यजमान गर्दछ । हजुर मलाई धन तथा पुत्र दिनु होस् ।

मन्त्रः- ॐ ये ते शतं वरुण ये सहस्रं यज्ञियाः पाशाः वितता महान्तः । तेभिर्न्नो अद्य सवितोऽतविष्णुर्विश्वे मुञ्चन्तु मरुतः स्वर्क्काः । स्वाहा इदं वरुणाय सवित्रे, विष्णुवे विश्वेभ्यो देवेभ्यो मरुद्भ्यः स्वर्केभ्यश्च न मम ।
(कात्यायन श्रौतसूत्र २५।१।११)

मन्त्रार्थः हजुरसँग शस्त्रको रुपमा प्रयोग हुने असंख्य यज्ञबाट उत्पन्न पाश छन् । जुन विस्तृत र अपरिहार्य हुन् । हामी सबै त्यसमा जगडिएका छौँ । सर्वपूज्य सूर्य, भगवान विष्णु एवं मरुद्गण हामीलाई वरुणको त्यो पाशबाट मुक्त गरुन् ।

मन्त्रः **ॐ अयाश्चाग्नेस्यनभिशस्तिपाश्च सत्यमित्वमया असि । अयानो यज्ञं वहास्य यानो धेहि भेषजम् । स्वाहा, इदं अग्नये अयसे न मम । (कात्यायन श्रौतसूत्र २५।१।११)**

मन्त्रार्थः हे अग्निदेव ! हजुरको वास भित्रबाहिर सबै ठाउँमा समान छ । शरणागतहरुलाई आत्मसात गरी तिनलाई हजुर पवित्र बनाउनु हुन्छ । प्रायश्चित अनुष्ठानद्वारा हजुर तिनको कर्मपालक हुनुहुन्छ । यो पनि सत्य हो कि हजुर शुभ-प्रणेता हुनुहुन्छ । यही कारण हो कि हजुर हाम्रो पवित्र हृदयमा रही हाम्रो यज्ञलाई बहन गर्नुहुन्छ । हजुर हामीलाई औषधी प्रदान गर्नुहोस् ।

मन्त्रः **ॐ उदुत्तमम् ॥ उदुत्तमम्वरुणपाशमस्म्मदवाधमंविमंद्धयम७श्रथाय ॥**
**अथावयमादित्यव्व्रतेतवानागसोऽअदितयेस्याम ॥**
स्वाहा, इदं वरुणाय न मम । (यजुर्वेद १२।१२) ।

मन्त्रार्थः हे वरुण ! हजुर सबै प्राणीका बन्धन र सन्तापको मुक्तिदाता हुनुहुन्छ । हाम्रा मस्तिष्क, कण्ठ आदि उत्तम अङ्ग तथा कमर आदि निम्न अवयवमा रहेको हजुरको आफ्नो बन्धनबाट हामीलाई मुक्ति दिनुहोस् । जसले गर्दा हामी आपराधिक मनोवृत्तिबाट मुक्त भई आफ्नो अनुष्ठान सम्पादन गर्न सकौं । हे अदितिपुत्र वरुणदेव ! हजुरले हामीलाई गरिबी बिनाको अखण्ड ऐश्वर्य पाउने अधिकारी बनाइ दिनुहोस् ।



मन्त्रः **ॐ भवतन्न६ ॥ भवतन्न६समनसौसचेतसावरेपसौ ॥**
**माषज्ञ६हिं६सिष्टम्माषज्ञपतिञ्जातवेदसौशिवौभवतमद्यनः ॥**
स्वाहा, इदं जातवेदोभ्यां न मम । (यजुर्वेद ५।३) ।

मन्त्रार्थः हे जातवेदस् ! (अग्नि, सूर्य) हजुर दुवैको मन एक छ, चेतना एक छ । हाम्रो उद्देश्य सिद्धिका लागि हामीबाट अपराध हुँदा पनि हामीमाथि क्रोध नराखि दिनुहोस् । हाम्रो यज्ञलाई नष्ट नगर्नुहोस् । यजमानको वध नगर्नुहोस् । हाम्रो यज्ञलाई विनष्ट नगर्नु होस् । हजुर हाम्रा लागि मङ्गलमय हुनुहोस् ।

यसरी आठ मन्त्रले चरु होम गर्नू ।

## पुरस्तादेवमुपरिष्टात् स्थालीपाकस्याग्न्याधेयदेवताभ्यो हुत्वा जुहोति ॥९॥

भावार्थ : यसरी चरु होमि सकेपछि पूर्वोक्त आठ मन्त्रले घिउको आहुति दिनु पर्दछ ।

नोटः कसै कसैले यी चार मन्त्रले चार आहुति दिनु पनि भन्दछन्- (१) **ॐ अग्नये पवमानाय स्वाहा, इदमग्नये पवमानाय न मम । (२) ॐ अग्नये पवमानाय स्वाहा,**

इदमग्नये पवमानाय न मम । (३) ॐ अग्नये शुचये स्वाहा, इदमग्नये शुचये न मम । (४) ॐ अदित्यै स्वाहा इदमदित्यै न मम ।

## स्विष्टकृते च ॥१०॥

भावार्थ : यसपछि स्विष्टकृत मन्त्रले आहुति दिनू ।

मन्त्रः 'ॐ यदस्य कर्मणोऽत्यरीरिचं यद्वान्यूनमिहाकरम् अग्निश्च स्विष्टकृद्विद्यात्तत्सर्वं स्विष्टं सुहुतहुतं करोतु मे । अग्नये स्विष्टकृते सुहुतहुते सर्वकामानां समर्धयित्रे सर्वान्नः, कामान् समर्धय स्वाहा, इदमग्नये स्विष्टकृते प्रायश्चित्ताहुतीनाम्' ।

मन्त्रार्थः हे अग्निदेव ! यो यज्ञकर्ममा यदि कुनै विधिको उल्लङ्घन भएको भए, कुनै कमीकमजोरी रहन गएको भए, त्यसका लागि म यो स्विष्टकृत होम हाल्दैछु । सबै दोषको प्रायश्चित स्वरूप समर्पण गरिएको यो आहुति हाम्रा सबै कामना पूर्ण गर्ने होऊन्, किन कि हजुर सबै कामना पूरा गराउन समर्थ हुनुहुन्छ । यो आहुति अग्नि देवताका लागि हो, मेरा लागि होइन ।

## अयास्यग्नेर्वषट्कृतं यत् कर्मणात्यरीरिचं देवागातुविद इति ॥११॥

भावार्थ : 'अयास्याग्ने...गातुविद' आदि मन्त्रले अन्तमा घिउको आहुति दिनू ।

मन्त्रः अयास्यग्नेर्वषट्कृतं यत्कर्मणात्यरीरिचं देवगातु विदः ॥

मन्त्रार्थ : हे यज्ञवेत्ता देवगण ! अग्निका लागि वषट्कार गरी म यज्ञगर्ने अधिकारी बनेको हुँ, यसबाट प्रसन्न भई हजुर म माथि सदा कृपालु भइ दिनुहोस् ।

## बर्हिर्हुत्वा प्राश्नाति ॥१२॥

भावार्थ : बर्हि (वेदीको चारैतिर राखिएका कुश) हवन गरेर प्रोक्षणीपात्रमा हालिएको घिउ खानू ।

## ततो ब्राह्मणभोजनम् ॥१३॥

भावार्थ : (घृतभक्षण पछि पूर्णपात्र ब्राह्मणलाई दिनू) । त्यसपछि ब्राह्मणभोजन गराउनू ।

इति द्वितीयकण्डिका

✷

होमका विधि बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत पहिलो काण्ड, दोश्रो कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## तृतीया कण्डिका

### षडर्घ्या भवन्ति-आचार्य ऋत्विग्वैवाह्यो राजा प्रियः स्नातक इति ॥१॥

भावार्थ : आचार्य, ऋत्विक्, ज्वाइँ, राजा, आफ्नो प्रियजन र स्नातक : यी छ व्यक्ति मधुपर्क पानका लागि योग्य हुन्छन् ।

नोटः- **वरस्य या भवेच्छाखा तच्छाखा गृह्यचोदिता ।**
**मधुपर्कः प्रदातव्यो ह्यनशाखेऽपि दातरि ॥**

दाताको शाखा जेसुकै भएपनि जुन शाखाको वर हो त्यही शाखाको गृह्यसूत्रमा बताइएको विधिले उसलाई मधुपर्क दिनू ।

### प्रतिसम्वत्सरानर्हयेयुः ॥२॥

भावार्थ : वर्षमा एकपटक घर आउने माथि बताइएका छ पुरुषलाई अर्घ दिई सम्मान गर्नुपर्दछ ।



### यक्ष्यमाणास्त्वृत्विजः ॥३॥

भावार्थ : यज्ञ सम्पन्न गराउने ऋत्विज्लाई (जहिले सुकै पनि) अर्घ दिनु पर्दछ ।

### आसनमाहार्याह-साधु भवानास्तामर्चयिष्यामो भवन्तमिति ॥४॥

भावार्थ : मधुपर्क दिनका लागि (बन्धु-बान्धव वा सेवक मार्फत) आसन मगाई स्वागत-सत्कार गर्नुपर्ने व्यक्तिलाई "हजुर निसङ्कोच भावले बस्नुहोस्, हामी हजुरको पूजा गर्दछौं" भन्नु पर्दछ ।

### आहरन्ति विष्टरं पाद्यं पादार्थमुदकमर्घमाचमनीयं मधुपर्कं दधिमधुघृतमपिहितं का꣡ँस्ये का꣡ँस्येन ॥५॥

भावार्थ : सेवक आादिले विष्टर, कुशासन, गोडा धुन तामाको भाँडामा जल, अर्घ (सुनको भाँडामा चन्दन, फूल, अक्षता, कुश, तिल सेतो सर्स्यूँ, दही, दुबो सहितको जल), आचमनका लागि जल, मधुपर्क (काँसका भाँडामा राखिएको दही, मह र घिउ जो काँसकै भाँडोले ढाकिएको होस्) लेराउनू ।

## अन्यस्त्रिस्त्रिः प्राह विष्टरादीनि ॥६॥

भावार्थ : पूजिने र पूजा गर्ने बाहेकका अरु व्यक्तिले विष्टर आदि वस्तुलाई तीन-तीन पटक 'विष्टरो विष्टरो विष्टरः' भन्नु पर्दछ । (जस्तैः- विष्टरो विष्टरो विष्टरः प्रतिगृह्यताम् । अर्घोऽर्घोऽर्घः प्रतिगृह्यताम् । मधुपर्को मधुपर्को मधुपर्कः प्रतिगृह्यताम् । आदि)

## विष्टरं प्रतिगृह्णाति ॥७॥

भावार्थ : विष्टरलाई वर, जजमान आदिले लिनू ।

शब्दार्थ : (क) विष्टरः- ब्रह्माको आसन । कुशको मुठो । पच्चीस वा नगनिएका कुशको बायाँतिरबाट घुमाएर शिखा पारिएको टुप्पो लामै पारेर छाडिने कुश । सत्ताईस कुशहरु गाँठो पार्दै बनाइएको आसन विशेष ।

## "वर्षोऽस्मि समानानामुद्यतामिव सूर्यः । इमं तमभितिष्ठामि यो मा कश्चाभिदासति" । इत्येनमभ्युपविशति ॥८॥



भावार्थ : जजमानले 'ॐ वर्षोऽस्मि...' आदि मन्त्र पढ्दै वेदीतिर फर्केर बस्नू ।

मन्त्रः **वर्षोऽस्मि समानानामुद्यतामिव सूर्यः ।**
**इमं तमभितिष्ठामि यो मा कश्चाभिदासति ॥**

मन्त्रार्थः म आफ्ना सजातीका बीचमा त्यसरी नै श्रेष्ठ बनू जसरी उदीयमान नक्षात्रका बीचमा सूर्य श्रेष्ठ बन्दछन् । यो आसनमा म तिनलाई हराएर बस्दछु जो मलाई हीन बनाउने कामना मनमा लिइरहेका हुन्छन् ।

## पादयोरन्यं विष्टर आसीनाय ॥९॥

भावार्थ : विष्टरमा बसेको व्यक्तिलाई उसका गोडा राख्न अर्को विष्टर दिनु पर्दछ ।

## सव्यं पादं प्रक्षाल्य दक्षिणं प्रक्षालयति ॥१०॥

भावार्थ : पहिले देब्रे गोडा धोएर त्यसपछि दाहिने गोडा धुनु पर्दछ ।

**ब्राह्मणश्चेद्दक्षिणं प्रथमम् ॥११॥**

भावार्थ : यदि गोडा धोइने व्यक्ति ब्राह्मण हुन् भने चाहीँ पहिले दाहिने गोडा धुनु पर्दछ । गोडा धुँदा तल उल्लेखित मन्त्र पढ्नु पर्दछ ।

**"विराजो दोहोऽसि विराजो दोहमशीय मयि पाद्यायै विराजो दोह" इति ॥१२॥**

भावार्थ : "हे जलाभिमानी देवता ! हजुर जुन अन्नरस वा विशिष्ट तेजले परिपूर्ण हुनुहुन्छ, त्यसलाई ममाथि पनि व्याप्त गराउनु होस् । आफ्नो पद-परिचर्या (ब्राह्मणको गोडा धुने कार्य) का लागि म अभिमन्त्रित जलको प्रयोग गर्दछु" ।

**अर्घ्यं प्रतिगृह्णाति-आपःस्थः युष्माभिः सर्वान् कामानवाप्नवानि इति ॥१३॥**

भावार्थ : यसपछि 'ॐ आपः स्थः..' आदि माथि सूत्रमा बताइएको मन्त्र पढ्दै वर आदिले यजमानले दिएको जल ग्रहण गर्नु पर्दछ ।



**मन्त्रः आपःस्थः युष्माभिः सर्वान् कामानवाप्नवानि ॥**

मन्त्रार्थः हे जलाभिमानी देवता ! हजुर स्थिर हुनु होस् । जसले गर्दा हजुरको दयाले म आफ्ना सबै मनोरथ पूरा गर्न सकौं ।

**निनयन्नभिमन्त्रयते-समुन्द्रं वः प्रहिणोमि स्वां योनिमभिगच्छत । अरिष्टा अस्माकं वीरा मा परासेचिमत्पयः । इति । ॥१४॥**

भावार्थ : त्यो अभिमन्त्रित जललाई 'ॐ समुद्रं व...' आदि मन्त्र पढ्दै जमिनमा बगाउनू ।

**मन्त्रः समुन्द्रं वः प्रहिणोमि स्वां योनिमभिगच्छत ।**
**अरिष्टा अस्माकं वीरा मा परासेचिमत्पयः ॥**

मन्त्रार्थः- हे जलाभिमानी देवता ! हजुरले हाम्रो अभिलाषा पूरा गरिदिनु भयो त्यसैले अब हामी हजुरको जन्मस्थान सागरमा पुनः प्रतिष्ठित गर्दछौं । अब हजुर त्यहाँ निश्चिन्त भई जानुहोस् । हजुरको कृपाले हाम्रा सबै छोरा, नाती र नातेदारहरु सुखी

एवं सदैव स्वस्थ रहून् । हामीलाई कहिल्यै पानीको कमी नहोस् । सधैं हामी यसरी नै समादरणीय भई राखौं ।

## आचामति-आमागन्यशसास६ृसृज वर्चसा । तं मा कुरु प्रियं प्रजानामधिपतिं पशूनामरिष्टिं तनूनाम् ।इति ।।१५।।

भावार्थ : 'ॐ आमागन्य...' आदि मन्त्र पढ्दै (जजमानले दिएको आचमन योग्य जलले वर आदिले) आचमन गर्नू ।

**मन्त्रः आमागन्यशसास६ृसृज वर्चसा । तं मा कुरु प्रियं प्रजानामधिपतिं पशूनामरिष्टिं तनूनाम्॥**

मन्त्रार्थः हे वरुणदेव ! म हजुरको आश्रयमा छु । मलाई हजुर यशस्वी बनाउनु होस्, ब्रह्मवर्चस्वी बनाउनु होस् । हजुरको कृपाले म समाजमा लोकप्रिय र पशुधनको स्वामी बनू, मेरा शारीरिक अङ्गहरु सधैं स्वस्थ बनि रहून् ।

## मित्रस्यत्वा इति मधुपर्कं प्रतीक्षते॥१६॥



भावार्थ : 'मित्रस्य त्वा..' आदि मन्त्र पढ्दै वर आदिले यजमानले दिएको मधुपर्कलाई हेर्नू ।

**मन्त्रः- ॐ मित्रस्य त्वा चक्षुषा प्रतीक्ष॥ (का.श्रौ.सूत्र.२।२।१५)**

मन्त्रार्थः हे मधुपर्क ! म हजुरलाई सूर्यको दृष्टिले हेर्दछु । अर्थात् सूर्यको परम कृपाले नै म हजुरलाई देख्दछु ।

## देवस्य त्वेति प्रतिगृह्णाति॥१७॥

भावार्थ : "देवस्य त्वा....' आदि मन्त्र पढ्दै वर आदिले मधुपर्क लिनू ।

**मन्त्रः- ॐ देवस्यत्त्वा । सवितुःप्प्रसवेऽश्श्विनोर्ब्बाहुभ्याम्पूष्णोहस्ताभ्याम्॥**
प्रतिगृह्णामि । (यजुर्वेद १।१०)

मन्त्रार्थः हे मधुपर्कका अधिष्ठाता देवता ! म हजुरलाई ऐश्वर्यका लागि सूर्यको आज्ञा, अश्विनीकुमारका बाहु तथा पूषन्को हातले ग्रहण गर्दछु ।

**सव्ये पाणौ कृत्वा दक्षिणस्यानामिकया त्रिः प्रयौति । 'नमः श्यावास्यायान्नशते यत्त आविद्धं तत्ते निष्कृन्तामि' इति ॥१८॥**

भावार्थ : 'ॐ नमः श्यावा...' आदि मन्त्र पढ्दै बायाँ हातमा मधुपर्क लिएर दाहिने हातको साहिँली औँलाले चलाउनू ।

मन्त्रः **नमः श्यावास्यायान्नशते यत्त आविद्धं तत्ते निष्कृन्तामि ॥**

मन्त्रार्थः हे सुनौला वर्णका मुख भएका अग्नि सर्वप्रथम म हजुरलाई प्रणाम गर्दछु । पुनः हजुरको भोज्य पदार्थमा जेजस्ता दूषित द्रव्य परेको छ म त्यसलाई पनि निकालि दिन्छु ।

**अनामिकाङ्गुष्ठेन च त्रिर्निरुक्षायति ॥१९॥**

भावार्थ : साँहिली र बूढी औँलाले (च्यापेर) मधुपर्कको काम नलाग्ने अंश तीन पटक बाहिर निकाली फाल्नू । (वसु , रुद्र र आदित्यका उद्देश्यले तीन पटक मधुपर्कलाई निरीक्षण गर्नू ।)



**तस्य त्रिः प्राश्नाति । यन्मधुनो मधव्यम् परमꣳरूपमन्नाद्यम् । तेनाहं मधुनो मधव्येन परमेण रूपेणान्नाद्येन परमो मधव्योऽन्नादोऽसानीति ॥२०॥**

भावार्थ : फेरी त्यो मधुपर्कलाई 'ॐ यन्मधुनो...' मन्त्र पढी तीन पटक चाट्नू ।

मन्त्रः **यन्मधुनो मधव्यम् परमꣳरूपमन्नाद्यम् । तेनाहं मधुनो मधव्येन परमेण रूपेणान्नाद्येन परमो मधव्योऽन्नादोऽसानि ॥**

मन्त्रार्थः हे देवता ! फूलको रसको जुन मधुयुक्त, उत्कृष्ट, सामान्य भोजन रस मधु छ, त्यही रुचिकर, स्वादिलो, प्राणधारक रसले म सर्वाधिक सुन्दर भोजनको भोक्ता बनूं ।

**मधुमतीभिर्वा प्रत्यृचम् ॥२१॥**

भावार्थ : अथवा 'मधुमती..' आदि निम्न तीन मन्त्र पढ्दै तीन पटक मधुपर्क खानू ।

मन्त्रः **मधुवाता॑ꣳ ॥ मधुवाता॑ऋताय॒तेमधु॑क्षरन्ति॒सिन्ध॑वꣳ ॥ माध्ध्वी॑र्न्नꣳ सन्त्वोष॑धीꣳ ।**
(यजुर्वेद १३।२७)

मन्त्रार्थः मधुमय हावा बहोस् । नदीहरुमा मीठो जल बगोस् । हाम्रा लागि वनस्पति मधुमय होस् ।

मन्त्रः **मधुनक्क्तम् ॥ मधुनक्क्तमुतोषसोमधुमत्त्पार्त्थिवᳪरजः ॥ मधुद्यौरस्त्तुनᳫपिता ॥** (यजुर्वेद १३।२८) ।

मन्त्रार्थः रात र सन्ध्या मधुमय हुन् । धरती रसिलो होस् । पितासरह परिपालक आकाश पनि मधुमय भइ दिऊन् ।

मन्त्रः **मधुमान्नᳫ ॥ मधुमान्नोव्वनस्प्पतिर्म्मधुमाँ२॥ऽअस्त्तुसूर्य्यः ॥**
**माद्ध्वीर्ग्गावोभवन्तुनᳫ ॥** (यजुर्वेद १३।२९) ।

मन्त्रार्थः औषधीहरुका स्वामी सोम हाम्रा लागि रसवान् होऊन् । सूर्य सन्तापरहीत र आनन्दकर होऊन् । गाईहरुले हामीलाई मीठो दुध दिऊन् ।

## पुत्रायान्तेवासिने वोत्तरत आसीनायोच्छिष्टं दद्यात् ॥२२॥



भावार्थ : यसपछि उत्तरतिर बसेको आफ्नो छोरो वा शिष्यलाई बाँकी मधुपर्क खान दिनु पर्दछ ।

## सर्वं वा प्राश्नीयात् ॥२३॥ प्राग्वासञ्चरे निनयेत् ॥२४॥

भावार्थ : अथवा सबै मधुपर्क आफैंले खानू अथवा शेष अंश मानिस नहिँड्ने पूर्वतिरको कुनै ठाउँमा लगेर फ्याँक्नू वा सेलाउनू ।

## आचम्य प्राणान्त्संमृशति वाङ्म आस्ये नसोः प्राणोऽक्ष्णोश्चक्षुः कर्णयोः श्रोत्रं बाह्वोर्बलमूर्वोरोजोऽरिष्टानि मेऽङ्गानि तनूस्तन्वा मे सहेति ॥२५॥

भावार्थ : आचमन गरी जल सहित इन्द्रियको स्पर्श गर्नू । 'वाङ्म आस्ये अस्तु' मन्त्रले हातको अघिल्लो भागले मुख छुनू । 'नसोर्मे प्राणोऽस्तु' मन्त्र पढी चोर र बूढी औंलाले एकैपटक नाकका दुवै प्वाल छुनू । 'अक्ष्णोर्मे चक्षुरस्तु' मन्त्र पढी साँहिली औंलाले देब्रे र बुढी औंलाले दाहिने आँखा एकै पटक छुनू । 'कर्णयोर्मे श्रोतमस्तु' मन्त्र पढी दुवै कानका लोती छुनू । 'वाह्वोर्मे बलमस्तु' मन्त्र पढी दुवै पाखुराको स्पर्श गर्नू । 'ऊर्वोर्मे ओजोऽस्तु' मन्त्र पढी दुवै तिघ्राको स्पर्श गर्नू । 'अरिष्टानि मेऽङ्गानि तनूस्तन्वा मे सह' मन्त्रले शिरदेखि पाउसम्मका सबै अङ्ग छुनू ।

मन्त्रः **वाङ्म आस्ये नसोः प्राणोऽक्ष्णोश्चक्षुः कर्णयोः श्रोत्रं बाह्वोर्बलमूर्वोरोजोऽरिष्टानि मेऽङ्गानि तनूस्तन्वा मे सह ॥**

मन्त्रार्थः मेरा वचन, नाक, प्राणवायु, आँखा, कान, हात र तिघ्रा बलिया र तेजिला रहून् । मेरा सबै अङ्ग स्वस्थ नहून् । यसरी मेरो शरीरका अङ्ग निरोगी रहून् ।

## अचान्तोदकाय शासमादाय गौरिति त्रिः प्राह ॥२६॥

भावार्थ : आचमन गरेको अतिथिलाई आतिथेयले तरबार हातमा लिई तीन पटक गौः भन्नू (गौर्गौर्गौः) ।

## प्रत्याह-माता रुद्राणां दुहिता वसूनाꣳस्वसाऽदित्यानाममृतस्य नाभिः । प्रनुवोचञ्चिकितुषे जनाय मागामनागामदितिं वधिष्ट । मम चामुष्य च पाप्मानꣳहनोमीति यद्यालभेत ॥२७॥

भावार्थ : प्रत्युत्तरमा पूज्य पुरुषले 'ॐ माता रुद्राणाम्...' आदि मन्त्र पढी गौ आलम्भन गर्दै भन्नू-'म आफ्नो र आतिथेय दुवैको पापलाई नष्ट गर्दैछु' ।



मन्त्रः **माता रुद्राणां दुहिता वसूनाꣳस्वसाऽदित्यानाममृतस्य नाभिः । प्रनुवोचञ्चिकितुषे जनाय मागामनागामदितिं वधिष्ट ॥**

मन्त्रार्थः रुद्रकी माता, बसुकी छोरी, आदित्यकी बहिनी, यि गाई अमृतकल्प दूधका आश्रय हुन्, यिनलाई अर्थात् "चैतन्य मानवका लागि देवमाता स्वरुपा यी निरापराध गाईलाई नमार" ।

नोटः (क) अजैकपादहिर्बुध्नो विरूपाक्षोऽथ रैवतः । हरश्च बहुरूपश्च त्र्यम्बकश्च सुरेश्वरः ॥ सावित्रश्च जयन्तश्च पिनाकी चापराजितः । एते रुद्राः समाख्याता एकादश सुरोत्तमाः ॥- योगी याज्ञवलक्य, हेमाद्री । (ख) धरो ध्रुवस्तथा सोम आपश्चैवाऽनलोऽनलः । प्रत्यूषश्च प्रभासश्च वसवोऽष्टौ प्रकीतिर्त्तताः ॥-मिताक्षरा २।१०२ । (ग) इन्द्रो धाता भगः पूषा मित्रोऽथ वरुणो यमः । अत्रिर्विवस्वांस्त्वष्टा च सविता विष्णुरेव च । एते वै द्वादशादित्या देवानां प्रवराः मताः ॥-हेमाद्रौ योगियाज्ञवल्क्यः । (**यज्ञाधानं गवालम्भं संन्यासं पलपैत्रृकम् । देवराच्च सुतोत्पत्तिं कलौ पञ्च विवर्जयेत्** ॥-पराशरस्मृति ।)

## अथ यद्युत्सिसृक्षेन्मम चामुष्य च पाप्मा हतꣳउत्सृजत तृणान्यत्त्विति ब्रूयात् ॥२८॥

भावार्थ : यदि त्यो गाईलाई स्वच्छन्द छोड्न चाहने हो भने -'आतिथेय (अतिथि सत्कार गर्ने)का सारा पाप नष्ट भए, अब यी गाईलाई छोडिएको छ । अब यिनी आफ्नो इच्छा अनुसार डुलेर घाँस खाउन्' भन्नू ।

## न त्वेवामाꣳसोऽर्घः स्यात् ॥२९॥

भावार्थ : अर्घ त मांसरहित हुनै सक्दैन ।

## अधियज्ञमधिविवाहं कुरुतेत्येव ब्रूयात् ॥३०॥

भावार्थ : यसैले यज्ञ र विवाहमा त गवालम्भनको विधान गर्नु नै पर्दछ ।

## यद्यप्यसकृत् सम्वत्सरस्य सोमेन यजेत कृतार्घ्या एवैनं याजयेन्नाकृतार्घ्या इति श्रुतेः ॥३१॥

भावार्थ : वर्षमा अनेक पटक जब जब सोमयज्ञ गरिन्छ, तब तब त्यसका ऋत्विज्लाई अर्घ दिनु पर्दछ । किनकि अर्घ्य प्राप्त गरेको ऋत्विज्ले नै यजमानको यज्ञ गराउनु भन्ने वेदको कथन छ । 

इति तृतीयकण्डिका

✷

अर्घदान विधि बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत पहिलो काण्ड, तेश्रो कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# चतुर्थी कण्डिका

## चत्वारः पाकयज्ञाः-हुतोऽहुतः प्रहुतः प्राशित इति ॥१॥

भावार्थ : पाकयज्ञ चार प्रकारका छन्- हुत, अहुत, प्रहुत र प्राशित ।

शब्दार्थ : (क) हुतः बिहान बेलुकी गरिने जस्ता केवल होम । (ख) अहुत : प्रस्तरारोहण जस्ता होम तथा बलि विहीन कर्म । (ग) प्रहुत : पक्षादि कर्म जस्ता होम तथा दुवै बलिहरण । (घ) प्राशितः केवल ब्राह्मण भोजनादि जस्ता कर्म ।

## पञ्चसु बहिःशालायां विवाहे चूडाकरण उपनयने केशान्ते सीमन्तोन्नयन । इति ॥२॥

भावार्थ : विवाह, मुण्डन, यज्ञोपवित, केशान्त तथा सीमन्तोन्नयन गरी पाँच संस्कारमा घरबाहिर बनेको मण्डपमा नै अग्निको स्थापना हुनु पर्दछ ।

## उपलिप्त उद्धतावोक्षितोऽग्निमुपसमाधाय ॥३॥

भावार्थ : गोबरले लिपिएको स्थानमा पहिले बताइएको पञ्च भूसंस्कार गरेपछि अग्निस्थापना गरी पाणिग्रहण गरिनु पर्दछ ।

## निर्मन्थ्यमेके विवाहे ॥४॥

भावार्थ : केही आचार्यहरू विवाह संस्कारमा अरणिमन्थनबाट प्राप्त आगो लिनु पर्दछ भन्दछन् ।

## उदगयन आपूर्यमाणपक्षे पुण्याहे । कुमार्याः पाणिं गृह्णीयात् ॥५॥

भावार्थ : उत्तरायण भएपछि शुक्लपक्षमा ज्योतिषशास्त्र अनुसारका शुभलग्नमा कुमारी कन्याको पाणिग्रहण गर्नु पर्दछ ।

## त्रिषु त्रिषु उत्तरादिषु ॥६॥

भावार्थ : उत्तराफाल्गुनी, हस्ता, चित्रा, उत्तराषाढा, श्रवण, धनिष्ठा, उत्तरभाद्रपदा, रेवती र अश्विनी नक्षत्र पाणिग्रहणका लागि शुभ नक्षत्र हुन् ।

## स्वातौ मृगशिरसि रोहिण्यां वा ॥७॥

भावार्थ : स्वाती, मृगशिरा व रोहिणी नक्षत्रमा पनि पाणिग्रहण शुभ हुन्छ ।

## तिस्रो ब्राह्मणस्य वर्णानुपूर्व्येण ॥८॥

भावार्थ : ब्राह्मण वर्णानुक्रमले ब्राह्मणी, क्षत्रिया र वैश्य कन्यासँग विवाह गर्न सक्दछ ।

## द्वे राजन्यस्य ॥९॥

भावार्थ : क्षत्रिय (क्षत्रिया एवं वैश्य) दुई कन्यासँग विवाह गर्न सक्दछ ।

## एका वैश्यस्य ॥१०॥

भावार्थ : वैश्य एक (वैश्य) कन्यासँग विवाह गर्न सक्दछ ।

## सर्वेषांꣳ शूद्रामप्येके मन्त्रवर्जम् ॥११॥



भावार्थ : केही आचार्य शूद्रकन्यालाई पनि मन्त्रोच्चारण नगरी विवाह गर्न योग्य मान्दछन् ।

## अथैनां वासः परिधापयति-जरां गच्छ परिधत्स्व वासो भवाकृष्टीनामभिशस्तिपावा । शतं च जीव शरदः सुवर्चा रयिं च पुत्राननुसंव्ययस्वायुष्मतीदं परिधत्स्व वास । इति ॥१२॥

भावार्थ : 'ॐ जरां गच्छ...' मन्त्र पढ्दै वरले कन्यालाई वस्त्र दिनू ।

मन्त्रः जरां गच्छ परिधत्स्व वासो भवाकृष्टीनामभिशस्तिपावा । शतं च जीव शरदः सुवर्चा रयिं च पुत्राननुसंव्ययस्वायुष्मतीदं परिधत्स्व वासः ॥

मन्त्रार्थः हे आयुष्मति ! संसारमा कामासक्त पुरुषका लागि तिमी अभिशाप बन, मसँग सय वर्ष बाँच, म सँगै वृद्धावस्थालाई प्राप्त गर, तेज-धन र पुत्र उत्पन्न गर । हे चिरञ्जीविनी ! (लाउ) यो कपडा लगाऊ ।

## अथोत्तरीयम्-या अकृन्तन्नवयं या अतन्वत । याश्च देवीस्तन्तूनभितो ततन्य, तास्त्वा देवीर्जरसे संव्ययस्वायुष्मतीदं परिधत्स्व वास ।इति ॥१३॥

भावार्थ : यसपछि 'ॐ या अकृन्त...' मन्त्र पढ्दै वरले वधूलाई ओढ्ने दिनू ।

**मन्त्रः** **या अकृन्तन्नवयं या अतन्वत । याश्च देवीस्तन्तूनभितो ततन्थ, तास्त्वा देवीर्जरसे संव्ययस्वायुष्मतीदं परिधत्स्व वासः ॥**

मन्त्रार्थः जुन देवीहरुले यो कपडाको धागो काते, जसले बुने, जसले यसलाई फैलाए, जसले बाङ्गाटिङ्गा धागाले यसलाई गुँथे ती सबै देवीहरु तिमीलाई निर्मल र निर्दुष्ट जीवन बिताउन यो वस्त्र धारण गराऊन् ।

**अथैनौ समञ्जयति-समञ्जन्तु विश्वेदेवाः समापो हृदयानि नौ ।**
**सम्मातरिश्वा सन्धाता समुदेष्ट्री दधातु नौ, इति ॥१४॥**

भावार्थ : यसपछि कन्याका पिताले 'ॐ समञ्जन्तु...' पढ्दै वरवधूलाई आमुसामु हेर्न लगाउनू र वरले 'समञ्जन्तु...' मन्त्र पढ्नू ।

**मन्त्रः** **समञ्जन्तु विश्वेदेवाः समापो हृदयानि नौ ।**
**सम्मातरिश्वा सं धाता समुदेष्ट्री दधातु नौ ॥**



मन्त्रार्थः हे कन्या ! हामी दुवैको हृदय-सङ्कल्पलाई राम्ररी विश्वदेव, जलदेव, मातरिश्वा, प्रजापति तथा धर्मादिका उपदेशक वाणीले सुसंस्कृत गरुन्, सुस्थिर गरुन् ।

**पित्रा प्रत्तामादाय गृहीत्वा निष्क्रामेति-यदैषि मनसा दूरं दिशोऽनु पवमानो वा ।**
**हिरण्यपर्णो वैकर्णः स त्वा मन्मनसां करोत्वित्यसौ इति ॥१५॥**

भावार्थ : दानको विधिले नै पिताले कन्यादान गर्नू । पिताबाट दानमा दिइएकी कन्यालाई दानको विधिले नै अग्निका समीपमा जानका लागि "ॐ यदैषि..." आदि मन्त्र पढ्दै वर कन्यासँगै मण्डपबाट बाहिर निस्कनू ।

**मन्त्रः** **यदैषि मनसा दूरं दिशोऽनुपवमानो वा ।**
**हिरण्यपर्णो वैकर्णः स त्वा मन्मनसां करोत्वित्यसौ ॥**

मन्त्रार्थः हे कन्या ! तिम्रो (त्यो) मन बाबुको घरबाट टाढा धेरैटाढा (हुँदा) पूर्वादि दिशामा वायुका समान चञ्चल हुन जान्छ, त्यसलाई ती सुनका प्वाँख भएका विकर्णपुत्र गरुडभैँ भएका वायुदेवले केवल ममा केन्द्रित गराऊन् ।

**अथनौ समीक्षयति-अघोरचक्षुरपतिघ्न्येधि शिवा पशुभ्यः सुमनाः सुवर्चाः । वीरसूर्देवकामा स्योनासन्नो भव द्विपदे शं चतुष्पदे । सोमः प्रथमो विविदे गन्धर्वो विविद उत्तरः । तृतीयोऽग्निष्टे पतिस्तुरीयस्ते मनुष्यजाः । सोमोऽददद् गन्धर्वाय गन्धर्वोऽददद्ग्नये । रयिं च पुत्राँश्चादादग्निर्मह्यमथो इमाम् ।। सा नः पूषा शिवतमामैरय सा न ऊरू उशति विहर । यस्यामुशन्तः प्रहराम शेपं यस्यामु बहवो निविष्ट्या ।इति ॥१६॥**

भावार्थ : मण्डपबाट निक्लेपछि वर-वधूलाई कन्याका बाबुले एक आपसमा राम्ररी हेराहेर गराउँदछन् । त्यसपछि वरले 'ॐ अघोरचक्षुः..'आदि मन्त्र पाठ गर्दछ ।

मन्त्रः **अघोरचक्षुरपतिघ्न्येधि शिवा पशुभ्यः सुमनाः सुवर्चाः । वीरसूर्देवकामा स्योनासन्नो भव द्विपदे शं चतुष्पदे । सोमः प्रथमो विविदे गन्धर्वो विविद उत्तरः । तृतीयोऽग्निष्टे पतिस्तुरीयस्ते मनुष्यजाः । सोमोऽददद् गन्धर्वाय गन्धर्वोऽददद्ग्नये । रयिं च पुत्राँश्चादादग्निर्मह्यमथो इमाम् ।। सा नः पूषा शिवतमामैरय सा न ऊरू उशति विहर । यस्यामुशन्तः प्रहराम शेपं यस्यामु बहवो निविष्ट्या ॥**



मन्त्रार्थः हे कन्या ! तिम्रो दृष्टि सौम्य होस्, तिमी पतिहन्ता (पतिलाई नाश गर्ने) नबन, पशुका लागि तिमी कल्याणमयी बन, आश्रितका लागि हितैषिणी बन, सदैव प्रसन्नचित्ता रहू, तेजोमयी बन, तिमीले वीर पुत्रहरु जन्माऊ, देवताका प्रिय बन, पशु एवं मनुष्य दुवैका लागि समानरुपले सुखकारिणी र कल्याणकारिणी बन । हे कन्या ! सर्वप्रथम जन्मदिनमै तिमिलाई चन्द्रमाले पाए, त्यसपछि साढे दुई वर्षको उमेरमा गन्धर्वले पाए, त्यही बेला अग्नि तिम्रा तेश्रा पति भए र अब मनुष्य योनिमा उत्पन्न म तिम्रो चौथो पति हुँ । चन्द्रमाले गन्धर्वलाई, गन्धर्वले अग्निलाई र अग्निले धन तथा पुत्रको सम्भावनासँगै तिमीलाई मेरो जिम्मामा सुम्पिएका छन् । मबाट सुख र धनको चाहना गर्दै तिमी आफ्ना जाँघ फैलाऊ, त्यसमा म सायुज्य मुक्तिका लागि पुत्र तथा रतिजन्य आनन्दका चाहनाका लागि आफ्नो पुरुषाङ्ग छिराउन सकूँ, यसका लागि पूषा देवता हामीलाई प्रेरित गरुन् ।

इति चतुर्थी कण्डिका

*

विवाह-विधि बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत पहिलो काण्ड, चौथो कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

*

## पञ्चमी कण्डिका

### प्रदक्षिणमग्निं पर्याणीयैके ॥१॥

भावार्थ : केही आचार्यको मत, अग्निको प्रदक्षिणा पछि अर्थात् जग्गे घुम्ने काम सकिएपछि कन्यालाई नयाँ वस्त्र लगाइ दिएर वरसँग साक्षात्कार र एकआपसमा निरीक्षण गराउनु पर्दछ भन्ने रहेको छ ।

### पश्चादग्नेस्तेजनीं कटं वा दक्षिणपादेन प्रवृत्त्योपविशति ॥२॥

भावार्थ : (पारस्करको मत) वरवधूलाई एकआपसमा हेराहेर गराएपछि, अग्नि प्रदक्षिणा गरी, वेदीको पश्चिमतिर पूर्व मुख फर्काई वर बस्नू र वरको दाहिने तिर वधू दाहिने गोडाले चकटी नाघेर बस्नु पर्दछ (भन्ने छ) ।

### अन्वारब्ध आधारावाज्यभागौ महाव्याहृतयः सर्वप्रायश्चित्तं प्राजापत्यꣳस्विष्टकृच्च ॥३॥

भावार्थ : ब्रह्मासँग छोइएर वैवाहिक होममा प्रजापति तथा इन्द्रलाई दुई आधार आहुति, अग्नि तथा सोमलाई दुई आज्य आहुति, तीन महाव्याहृति सम्बन्धी आहुति, सर्वप्रायश्चितका लागि पाँच आहुति, प्रजापतिका लागि एक आहुति र अग्निका लागि एक आहुति दिनू ।

| | |
|---|---|
| क. आधार आहुतिः- | ॐ प्रजापतये स्वाहा, इदं प्रजापतये । ॐ इन्द्राय स्वाहा इदमिन्द्राय । |
| ख. आज्य आहुतिः- | ॐ अग्नये स्वाहा, इदमग्नये । ॐ सोमाय स्वाहा, इदं सोमाय । |
| ग. महाव्याहृति आहुतिः- | ॐ भूः स्वाहा, इदमग्नये । ॐ भुवः स्वाहा इदं वायवे । ॐ स्वः स्वाहा इदं सूर्याय । |
| घ. सर्वप्रायश्चित आहुतिः- | ॐ त्वन्नो अग्ने, ॐ स त्वन्नो अग्ने, ॐ अयाश्चाग्ने, ॐ ये ते शतम्, ॐ उदुत्तमम् । |
| ङ. प्रजापत्याहुतिः- | ॐ प्रजापतये स्वाहा, इदं प्रजापतये इति मनसा । |
| च. स्विष्टकृदाहुतिः- | ॐ यदस्यकर्मणो... । कूल चौध आहुति । |

### एतन्नित्यꣳ सर्वत्र ॥४॥

भावार्थ : माथिका चौध आहुति नित्य हुन् र सबै यज्ञमा दिइन्छ ।

## प्राङ्महाव्याहृतिभ्यः स्विष्टकृदन्यच्चेदाज्याद्धविः ॥५॥

भावार्थ : यदि घिउको स्थानमा चरुको आहुति दिने हो भने स्विष्टकृत् आहुति महाव्याहृति आहुतिभन्दा पहिले दिनु पर्दछ ।

## सर्वप्रायश्चित्तं प्राजापत्यान्तरमेतदावापस्थानं विवाहे ॥६॥

भावार्थ : विवाहमा अन्य आहुति (राष्ट्रभृत् आदि) दिने हो भने सर्वप्रायश्चित र प्राजापत्याहुतिको बीचमा नै दिनु पर्दछ ।

## राष्ट्रभृत इच्छञ्जयाभ्यातानाँश्च जानन् ॥७॥

भावार्थ : वैवाहिक होममा राष्ट्रभृतसंज्ञक बाह्र, जया संज्ञक तेह्र र अभ्यातान संज्ञक आहुतिहरु पनि दिनु पर्दछ ।

राष्ट्रभृतसंज्ञक मन्त्र, शुक्लयजुर्वेद (१८।३८-४३) :

(१) ॐ ऋताषाडृतधामा ॥ ऋताषाडृतधामाऽग्निर्गन्धर्वस्तस्यौषधयोऽप्सरसोमुदो- नाम ॥ सनऽइदम्ब्रह्मक्षत्रम्पातुतस्मैस्वाहावाट्ताभ्यःस्वाहा ॥



भावार्थः जो मानिस अग्निले जस्तै दुष्ट शत्रुका कुललाई अग्निमा जलाउने खालको तथा ओखती जस्तै आनन्ददायक हुन्छ, उसले नै सारा राज्यलाई रक्षा गर्न सक्दछ ।

(२) ॐ सꣳहितोविश्वसामा ॥ सꣳहितोविश्वसामासूर्य्योगन्धर्वस्तस्य मरीचयोऽप्सरसऽआयुवोनाम ॥ सनऽइदम्ब्रह्मक्षत्रम्पातुतस्मैस्वाहावाट्ताभ्यःस्वाहा ॥

भावार्थ : मानिसले सूर्यको किरणलाई जुक्ति लगाएर सेवन गर्दै विद्या र साहस बढाई आफ्नो उद्देश्य हासिल गर्नू ।

(३) ॐ सुषुम्णःसूर्य्यरश्मिश्चन्द्रमाꣳ ॥ सुषुम्णःसूर्य्यरश्मिश्चन्द्रमागन्धर्वस्तस्यनक्षत्राण्यप्सरसोभेकुरयोनाम ॥ सनऽइदम्ब्रह्मक्षत्रम्पातुꣳतस्मैस्वाहावाट्ताभ्यःस्वाहा ।

भावार्थ : मानिसले चन्द्रलोक आदिजस्ता लोकबाट पनि तिनका ज्ञान मार्फत सुख हासिल गर्नुपर्दछ ।

(४) ॐ इषिरोविश्श्ववव्व्यचाऽ ॥ इषिरोविश्श्ववव्व्यचाव्वातो गन्धर्व्वस्तस्यापोऽअप्प्सरसऽऊर्ज्जोनाम ॥ स नऽइदम्ब्रह्मम्क्षत्रम्पातुतस्मैस्वाहाव्वाट्ताभ्यःस्वाहा ।

भावार्थ : शरीरमा जेजति गतिविधि र शक्ति उत्पन्न हुन्छ, त्यो सबै वायुका कारणले हुने गर्दछ । वायुले नै प्राण, जल तथा गन्धर्व आदि सबैलाई बोक्दछ भनी मानिसले थाहा पाउनु पर्दछ ।

(५) ॐ भुज्युःसुपर्ण्णः ॥ भुज्युःसुपर्ण्णोयज्ञोगन्धर्व्वस्तस्यदक्षिणाऽअप्प्सरसस्तावानाम ॥ सनऽइदम्ब्रह्मम्क्षत्रम्पातुतस्मैस्वाहाव्वाट्ताभ्यःस्वाहा ॥

भावार्थ : जो मानिस अग्निहोत्र आदि यज्ञ नित्य गर्दछन्, तिनले नै संसारी सुखलाई बढाउने गर्दछन् भनी जान्नू ।



(६) ॐ प्रजापतिर्विश्श्वकर्म्मा ॥ प्रजापतिर्विश्श्वकर्म्मामनो गन्धर्व्वस्तस्यऽऋक्क्सामान्यप्सरसऽएष्टयोनाम ॥ सनऽइदम्ब्रह्मम्क्षत्रम्पातुतस्मैस्वाहाव्वाट्ताभ्यःस्वाहा ।

भावार्थ : जो मानिस पुरुषार्थी, विवेकशील र वेदविज्ञ हुन्छन् ती मानिस नै संसारका गहना हुन्छन् ।

उपरोक्त छ मन्त्रले निम्नानुसार बाह्र पटक होम गर्ने विधि विविन्न विवाह पद्धतिमा उल्लेख भएको पाइन्छ ।

(१) ॐ ऋतासाड् ऋतधामाऽग्निर्गन्धर्व्वः । सनऽइदम्ब्रह्मक्षत्रम्पातु तस्मै स्वाहा व्वाट् । इदमृतासाहे ऋतधाम्ने अग्नये गन्धर्व्वाय ।

(२) ॐ ऋताषाड् ऋतधामाऽग्निर्गन्धर्व्वस्तस्यौषधयोऽप्सरसो मुदो नाम । ताभ्यः स्वाहा । इदमोषधीभ्योऽप्सरोमुद्भ्यश्च ।

(३) ॐ स ᳪ हितो विश्वसामा सूर्य्यो गन्धर्व्वः । सनऽइदम्ब्रह्म क्षत्रम्पातु तस्मै स्वाहा व्वाट् । इदᳪसोᳪ हिताय विश्वसाम्ने सूर्य्याय गन्धर्व्वाय ।

(४) ॐ स ᳪ हितो विश्वसामा सूर्य्यो गन्धर्व्वस्तस्य मरीचयोऽप्सरस आयुवो नाम । ताभ्यः स्वाहा । इदं मरीचिभ्योऽप्सरोभ्य आयुभ्यो न मम ।

(५) ॐ सुषुम्णः सूर्य्यरश्मिश्चन्द्रमा गन्धर्व्वः । स न इदं ब्रह्मक्षत्रं पातु तस्मै स्वाहा व्वाट् । इदं सुषुम्णाय सूर्य्यरश्मये चन्द्रमसे गन्धर्व्वाय ।

(६) ॐ सुषुम्णः सूर्य्यरश्मिश्चन्द्रमा गन्धर्व्वस्तस्य नक्षत्राण्यप्सरसो भेकुरयो नाम । ताभ्यः स्वाहा । इदं नक्षत्रेभ्योऽप्सरोभ्यो भेकुरिभ्यः न मम ।

(७) ॐ इषिरो व्विश्वव्यचा व्वातो गन्धर्व्वः । स नऽइदं ब्रह्म क्षत्रम्पातु तस्मै स्वाहा व्वाट् । इदमिषिराय व्विश्वव्यचसे वाताय गन्धर्व्वाय ।

(८) ॐ इषिरो व्विश्वव्यचा व्वातो गन्धर्वस्तस्यापोऽप्सरस ऊर्ज्जोनाम । ताभ्यः स्वाहा । इदमद्भ्योऽप्सरोभ्य उग्भ्र्यः ।

(९) ॐ भुज्युः सुपर्णो यज्ञो गन्धर्व्वः । स न इदं ब्रह्म क्षत्रं पातु तस्मै स्वाहा व्वाट् । इदं भुज्यवे सुपर्णाय यज्ञाय गन्धर्व्वाय ।

(१०) ॐ भुज्युः सुपर्णो यज्ञो गन्धर्व्वस्तस्य दक्षिणा अप्सरस्तावा नाम । ताभ्यः स्वाहा । इदं दक्षिणाभ्योऽप्सरोभ्यस्तावाभ्योः ।

(११) ॐ प्रजापतिर्विश्वकर्मा मनो गन्धर्व्वः । स न इदं ब्रह्म क्षत्रं पातु तस्मै स्वाहा व्वाट् । इदं प्रजापतये विश्वकर्मणे मनसे गन्धर्व्वाय ।

(१२) ॐ प्रजापतिर्विश्वकर्मा मनो गन्धर्वस्तस्यऽऋक्सामान्याप्सरसएष्टयो नाम । ताभ्यः स्वाहा । इदं ऋक्सामेभ्योऽप्सरोभ्यः एष्टिभ्यो न मम ।



## येन कर्मणेर्छेदिति वचनात् ॥८॥

भावार्थ : गरिन लागेको कर्मद्वारा यदि फलको चाहना गरिन्छ भने जया प्रभृति होम पनि गर्नु पर्दछ ।

## चित्तञ्च चितिश्चाकूतं चाकूतिश्च विज्ञातं च विज्ञातिश्च मनश्च शक्वरीश्च दर्शश्च पौर्णमासं च बृहच्च रथन्तरञ्च । प्रजापतिर्जयानिन्द्राय वृष्णे प्रायच्छदुग्रः पृतना जयेषु । तस्मै व्विशः समनमन्तः सर्वाः स उग्रः इहव्यो बभूव स्वाहा इति ॥९॥

भावार्थ : जसरी प्रजापतिले देवराज इन्द्रलाई विजयी बनाएका थिए त्यसरी नै हृदय, चेतना, कर्मेन्द्रिय, त्यसका अधिष्ठाता देवता, शिल्पादि ज्ञान, अपरोक्ष ज्ञान, मन, मानसिक शक्तिहरु, औंसी, पौर्णमास तथा बृहत् तथा रथन्तर साम मलाई विजयी बन्ने प्रवृत्ति प्रदान गरुन् । प्रजापतिले चाहेको फल पाउनका लागि इन्द्रलाई जया नामको यो मन्त्र प्रदान गरे । यसलाई पाएर सेना-विजय नामक कर्ममा इन्द्र अत्यन्त शक्तिशाली बने । विजयी देवराजलाई प्रजाले नमस्कार गरे । तिनले यिनलाई आफ्नो नेता बनाए । त्यही दिनबाट इन्द्र अजेय र पराक्रमी बने, यज्ञांशका अधिकारी बने ।

नोटः- विश्वनाथले आफ्नो प्रयोग पद्धतिमा यी मन्त्रलाई यसरी परिवर्तन गरेका छन्-चित्तं च स्वाहा इदं चित्ताय, चित्तिश्च स्वाहा इदं चित्यै, आकूतं च स्वाहा इदमाकूताय, आकूतिश्च स्वाहा इदमाकूत्यै, विज्ञातं च स्वाहा इदं विज्ञाताय, विज्ञातिश्च स्वाहा इदं विज्ञातये, मनश्च स्वाहा इदं मनसे, शक्वरीश्च स्वाहा इदं शक्वरीभ्यः, दर्शश्च साहा इदं दर्शाय, पौर्णमासं च स्वाहा इदं पौर्णमासाय, बृहच्च स्वाहा इदं बृहते, रथन्तरं च स्वाहा इदं रथन्तराय । (यी चित्तादि तेह्र मन्त्रलाई जया संज्ञक मन्त्र पनि भनिन्छ) ।

जयहोमका मन्त्र

(१) ॐ चित्तञ्च स्वाहा ॥ इदं चित्ताय ॥
(२) ॐ चित्तिश्च स्वाहा ॥ इदं चित्त्यै (चित्तये) ॥
(३) ॐ आकूतञ्च स्वाहा ॥ इदमाकूताय ॥
(४) ॐ आकूतिश्च स्वाहा ॥ इदमाकूत्यै ॥
(५) ॐ विज्ञातञ्च स्वाहा ॥ इदं विज्ञाताय ॥
(६) ॐ विज्ञातिश्च स्वाहा ॥ इदं विज्ञात्यै ॥
(७) ॐ मनश्च स्वाहा ॥ इदं मनसे ॥
(८) ॐ शक्वरीश्च स्वाहा ॥ इदं शक्वरीभ्यः ॥
(९) ॐ दर्शश्च स्वाहा ॥ इदं दर्शाय ॥

(१०) ॐ पौर्णमासञ्च स्वाहा ॥ इदं पौर्णमासाय ॥
(११) ॐ बृहच्च स्वाहा ॥ इदं बृहते ॥
(१२) ॐ रथन्तरञ्च स्वाहा ॥ इदं रथन्तराय ॥
(१३) ॐ प्रजापतिर्ज्जयानिन्द्रायवृष्णेप्प्रायच्छदुग्ग्रः पृतनाजयेषु ॥
तस्मै विशः सनमन्तसर्व्वाः सऽउग्ग्रः सऽइहव्व्योबभूव स्वाहा ॥

**अग्निर्भूतानामधिपतिः स मावत्विन्द्रो ज्येष्ठानां, यमः पृथिव्या, वायुरन्तरिक्षस्य, सूर्य्यो दिवश्चन्द्रमा नक्षत्राणां, बृहस्पतिर्ब्रह्मणो मित्रः सत्यानां, वरुणोऽपाꣳ, समुद्रः स्त्रोत्यानामन्नꣳसाम्राज्यानामधिपति, तन्मावतु, सोम ओषधीनाꣳ, सविता प्रसवानाꣳ, रुद्रः पशूनां, त्वष्टा रूपाणां, विष्णुः पर्वतानां, मरुतो गणानामधिपतयस्ते मावन्तु पितरः पितामहाः परेऽवरे ततास्ततामहाः । इह मावन्त्वस्मिन् ब्रह्मण्यस्मिन् क्षत्रेऽस्यामाशिष्यस्यां पुरोधायामस्मिन् कर्मण्यस्यां देवहूत्याꣳ स्वाहेति सर्वत्रानुषजति ॥१०॥**

भावार्थ : जीवका स्वामी अग्निदेव, सुरपति इन्द्र, पृथ्वीपालक, अन्तरिक्षका स्वामी वायु, द्युलोकपति सूर्य, नक्षत्राधिपति चन्द्रमा, वेदका अधिष्ठाता बृहस्पति, सत्यका पालक

मित्र, जलपति वरुण, नदीपति समुद्र, साम्राज्य सञ्चालक अन्न, वनस्पतिका अधिष्ठाता सोम, प्रेरक वस्तुहरुमा प्रधान सविता देवता, पशुपति रुद्र, शिल्प तथा वास्तु प्रमुख त्वष्टा, पर्वतपति विष्णु, गणपति मरुत् तथा पिता-पितामह एवं अन्य पूर्वज गण यो ब्रह्मकर्म, प्रजापालनरुपी क्षत्रिय कर्ममा हाम्रो रक्षा गर । हाम्रो सामु बसेकी यी कन्यालाई आफ्नो आशिर्वादले कृतार्थ गर । यी देवताको आह्वानले यो यज्ञको प्रत्येक आहुति होमियोस् । यी अठार मन्त्रको आहुतिलाई अभ्यातान आहुति भनिन्छ ।

अभ्यातान आहुतिका मन्त्रहरू :

(१) ॐ अग्निर्भूतानामधिपतिः स मावत्वस्मिन् ब्रह्मण्यस्मिन् क्षत्रेऽस्यामाशिष्यस्यां पुरोधायामस्मिन् कर्मणस्यां देवहूत्याꣳ स्वाहा । इदमग्नये भूतानामधिपतये न मम ।

(२) ॐ इन्द्रो ज्येष्ठनामधिपतिः स मावत्वस्मिन् ब्रह्मण्यस्मिन् क्षत्रेऽस्यामाशिष्यस्यां पुरोधायामस्मिन् कर्मणस्यां देवहूत्याꣳ स्वाहा । इदमिन्द्राय ज्येष्ठानामधिपतये न मम ।

(३) ॐ यमः पृथिव्या अधिपतिः स मावत्वस्मिन् ब्रह्मण्यस्मिन् क्षत्रेऽस्यामाशिष्यस्यां पुरोधायामस्मिन् कर्मणस्यां देवहूत्याꣳ स्वाहा । इदं यमाय पृथिव्या अधिपतये न मम ।

(४) ॐ वायुरन्तरिक्षस्याधिपतिः स मावत्वस्मिन् ब्रह्मण्यस्मिन् क्षत्रेऽस्यामाशिष्यस्यां पुरोधायामस्मिन् कर्मणस्यां देवहूत्याꣳ स्वाहा । इदं वायवे अन्तरिक्षस्याधिपतये न मम ।



(५) ॐ सूर्यो दिवोऽधिपतिः स मावत्वस्मिन् ब्रह्मण्यस्मिन् क्षत्रेऽस्यामाशिष्यस्यां पुरोधायामस्मिन् कर्मणस्यां देवहूत्याꣳ स्वाहा । इदं सूर्याय दिवोऽधिपतये मम ।

(६) ॐ चन्द्रमा नक्षत्राणामधिपतिः स मावत्वस्मिन् ब्रह्मण्यस्मिन् क्षत्रेऽस्यामाशिष्यस्यां पुरोधायामस्मिन् कर्मणस्यां देवहूत्याꣳ स्वाहा । इदं चन्द्रमसे नक्षत्राणामधिपतये न मम ।

(७) ॐ बृहस्पतिर्ब्रह्मणोऽधिपतिः स मावत्वस्मिन् ब्रह्मण्यस्मिन् क्षत्रेऽस्यामाशिष्यस्यां पुरोधायामस्मिन् कर्मणस्यां देवहूत्याꣳ स्वाहा । इदं बृहस्पतये ब्रह्मणोऽधिपतये न मम ।

(८) ॐ मित्रः सत्यानामधिपतिः स मावत्वस्मिन् ब्रह्मण्यस्मिन् क्षत्रेऽस्यामाशिष्यस्यां पुरोधायामस्मिन् कर्मणस्यां देवहूत्याꣳ स्वाहा । इदं मित्राय सत्यानामधिपतये न मम ।

(९) ॐ वरुणोऽपामधिपतिः स मावत्वस्मिन् ब्रह्मण्यस्मिन् क्षत्रेऽस्यामाशिष्यस्यां पुरोधायामस्मिन् कर्मणस्यां देवहूत्याꣳ स्वाहा । इदं वरुणायापामधिपतये न मम ।

(१०) ॐ समुद्रः स्त्रोत्यानामधिपतिः स मावत्वस्मिन् ब्रह्मण्यस्मिन् क्षत्रेऽस्यामाशिष्यस्यां पुरोधायामस्मिन् कर्मणस्यां देवहूत्याꣳ स्वाहा । इदं समुद्राय स्त्रोत्यानामधिपतये न मम ।

(११) ॐ अन्नᳫसम्राज्यानामधिपतिः स मावत्वस्मिन् ब्रह्मण्यस्मिन् क्षत्रेऽस्यामाशिष्यस्यां पुरोधायामस्मिन् कर्मणस्यां देवहूत्याᳫ स्वाहा । इदमन्नाय साम्राज्यानामधिपतये न मम ।

(१२) ॐ सोम ओषधीनामधिपतिः स मावत्वस्मिन् ब्रह्मण्यस्मिन् क्षत्रेऽस्यामाशिष्यस्यां पुरोधायामस्मिन् कर्मणस्यां देवहूत्याᳫ स्वाहा । इदं सोमायौषधीनामधिपतये न मम ।

(१३) ॐ सविता प्रसवानामधिपतिः स मावत्वस्मिन् ब्रह्मण्यस्मिन् क्षत्रेऽस्यामाशिष्यस्यां पुरोधायामस्मिन् कर्मणस्यां देवहूत्याᳫ स्वाहा । इदं सवित्रे प्रसवानामधिपतये न मम ।

(१४) ॐ रुद्रः पशूनामधिपतिः स मावत्वस्मिन् ब्रह्मण्यस्मिन् क्षत्रेऽस्यामाशिष्यस्यां पुरोधायामस्मिन् कर्मणस्यां देवहूत्याᳫ स्वाहा । इदं रुद्राय पशूनामधिपतये न मम ।

(१५) ॐ त्वष्टा रूपाणामधिपतिः स मावत्वस्मिन् ब्रह्मण्यस्मिन् क्षत्रेऽस्यामाशिष्यस्यां पुरोधायामस्मिन् कर्मणस्यां देवहूत्याᳫ स्वाहा । इदं त्वष्ट्रे रूपानामधिपतये न मम ।

(१६) ॐ विष्णुः पर्वतानामधिपतिः स मावत्वस्मिन् ब्रह्मण्यस्मिन् क्षत्रेऽस्यामाशिष्यस्यां पुरोधायामस्मिन् कर्मणस्यां देवहूत्याᳫ स्वाहा । इदं विष्णवे पर्वतानामधिपतये न मम ।

(१७) ॐ मरुतो गणानामधिपतयस्ते मावत्वस्मिन् ब्रह्मण्यस्मिन् क्षत्रेऽस्यामाशिष्यस्यां पुरोधायामस्मिन् कर्मणस्यां देवहूत्याᳫ स्वाहा । इदं मरुद्भ्यो गणानामधिपतिभ्यो न मम ।

(१८) ॐ पितरः पितामहाः परेऽवरे ततास्ततामहाः । इह मावत्वस्मिन् ब्रह्मण्यस्मिन् क्षत्रेऽस्यामाशिष्यस्यां पुरोधायामस्मिन् कर्मणस्यां देवहूत्याᳫ स्वाहा । इदं पितृभ्यः पितामहेभ्यः परेभ्योऽवरेभ्यस्त- तेभ्यस्ततामहेभ्यो न मम ।



**अग्निरैतु प्रथमो देवतानाᳫ सोस्यै प्रजां मुञ्चतु मृत्युपाशात् । तदयᳫराजा वरुणोऽनुमन्यतां यथेयᳫ स्त्री पौत्रमघन्नरोदात् स्वाहा । इमामग्निस्त्रायतां गार्हपत्यः प्रजामस्यै नयतु दीर्घमायुः । अशून्योपस्था जीवतामस्तु माता पौत्रमानन्दमभिविबुध्यतामियᳫस्वाहा । स्वस्ति नो अग्ने दिव आपृथिव्या विश्वानि धेह्ययथा यजत्र । यदस्यां महि दिवि जातं प्रशस्तं तदस्मासु द्रविणं धेहि चित्रᳫस्वाहा । सुगन्नु पन्थां प्रदिशन्न एहि ज्योतिष्मध्ये ह्यजरन्न आयुः । अपैतु मृत्युरमृतन्न आगाद्वैवस्वतो नो अभयं कृणोतु स्वाहा इति ॥११॥**

भावार्थ : यज्ञभागका अधिकारी देवताहरुमा श्रेष्ठ अग्निदेवले यहाँ आएर यी वधूको भावी सन्तानलाई मृत्युको पाशबाट मुक्ति दिलाऊन् । राजा वरुणले पनि यो बन्धनमुक्तिलाई समर्थन दिऊन्, जसले गर्दा भविष्यमा सन्ततिजन्य दुःखले यी वधू कहिल्यै नरोऊन् । अग्निदेवले यी वधूका सन्तानलाई दीर्घायुका बनाऊन् । यी वधूको गर्भाधान कहिल्यै खेर नजाओस् । यिनले छोरानाती सम्बन्धी सम्पूर्ण आनन्द पाऊन् । जजमानका रक्षक हे अग्निदेव ! यो धरतीमा जेजति प्रतिकूल हुन्छन् त्यसलाई अनुकूल

पारी मेरा लागि मार्गप्रशस्त बनाइ दिनुहोस् । स्वर्ग र भूलोकमा व्याप्त गरिमाबाट मलाई लाभान्वित पारिदिनुहोस् । धरति र स्वर्गमा जुन अनेक प्रकारका धन छन् त्यो पनि मलाई दिनुहोस् । हाम्रो बाटोलाई सुगम बनाउँदै यहाँ आएर हे अग्निदेव ! ऊर्जाशील एवं प्रकाशक वृद्धावस्थारहित आयुलाई पुष्ट पार्नुहोस् । हजुरको आशिर्वादले हामीबाट मृत्यु पर जाओस् र यमराजले हामीलाई अभय दान दिऊन् ।

## परं मृत्यविति चैके प्राशनान्ते ॥१२॥

भावार्थ : प्राशनको अन्तमा 'परं मृत्योऽअनुपरेहि...' मन्त्रले आहुति दिनुपर्दछ भनी केही आचार्य भन्दछन् ।

मन्त्रः ॐ परम्मृत्त्यो ॥ परम्मृत्त्योऽअनुपरेहिपन्थाँष्स्त्तेऽन्यऽइतरोदेवयानात् ॥
चक्क्षुष्म्मतेश्रृण्ण्वतेतेब्ब्रवीमिमानः प्प्रजा ँ रीरिषोमोतव्वीरान् ॥

मन्त्रार्थः हे मानव ! तेरा जो विद्वानजन जुन बाटोबाट हिँड्दछन्, त्यो भन्दा बेग्लै बाटो भएर मृत्यु पर जाओस्, जसका कारण तँलाई सजिलै देवमार्ग प्राप्त होस् । तिनै उत्तम नेत्रका कुरा सुन्दै म तँलाई उपदेश दिन्छु कि-"जसरी मृत्युले हाम्रा वीर सन्तानलाई मार्दैनन् त्यसैगरी तँ पनि नमार, विषयवासनामा फसाएर नष्ट नपार, विद्या र बलले युक्त भएका वीरलाई नमार" ।



सारांशः मानिसले सत्पुरुषको बाटो अनुसरण गर्दै, विवाह गरी कमजोर प्रकृतिका सन्तान नजन्माउनू र जन्मेका सन्तानलाई आत्मचिन्तनबाट (अथवा सन्मार्गबाट) विमुख पनि नगराउनू ।

(यसलाई अन्तःपराहुति पनि भन्दछन् र यो होम गर्दा अग्नि र वधूका बीचमा वस्त्रले छेक्ने गरिन्छ) ।

इति पञ्चमी कण्डिका

✷

विवाह-विधि बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत पहिलो काण्ड, पाँचौं कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## षष्ठी कण्डिका

### कुमार्या भ्राता शमीपलाशमिश्राँल्लाजानञ्जलिनाञ्जलावावपति ॥१॥

भावार्थः कन्याका दाजु वा भाइले शमीको पात मिसिएको लाजा आफ्नो अँजूलीले दिदी वा बहिनीको हातमा हालिदिनू ।

### तां जुहोति सꣳहतेन तिष्ठति-अर्यमणं देवं कन्याऽऽग्निमयक्षत । स नो अर्यमा देवः प्रेतो मुञ्चन्तु मा पतेः स्वाहा ॥ इयं नार्युपब्रूते लाजानावपन्तिका । आयुष्मानस्तु मे पतिरेधन्तां ज्ञातयो मम स्वाहा ॥ इमां लाजानावपाम्यग्नौ समृद्धिकरणं तव । मम तुभ्यं च संवननं तदग्निरनुमन्यतामियꣳस्वाहा ।इति। ॥२॥१

भावार्थः उभिएर टम्म मिलेको अँजूलीले 'अर्यमणम्...' आदि तीन मन्त्रले तीन पटक वधूले लाजालाई होम गर्नू ।

मन्त्रार्थः (क) वधूले अत्यन्त तेजस्वी अग्निसमान श्रेष्ठ वर पाउने इच्छाले पहिले जुन अर्यमा नामका देवता अर्थात् भगवान सूर्यको उपासना गरेकी थिइन्, यज्ञ गरेकी थिइन्, ती भगवान सूर्य उनलाई पितृकूलबाट मुक्त गरुन् न कि पतिकूलबाट । (ख) मेरा पति दीर्घायुका हुन्, मेरा कुटुम्बको सम्वृद्धि होस् । (ग) म यी लाजा मेरो आफ्नो र हजुरको (पतिको) समुन्नतिका र समृद्धिका लागि यो होमाग्निमा हाल्दछु । अग्निदेव हाम्रो परस्परको यो अनुरागलाई अनुमोदन गरून् ।



नोटः (क) स्मृतिका अनुसार लाजाहोम वधूको अँजूलीको देब्रेभागले नै गर्नु पर्दछ । यसरी लाजाहोमका तीन विधि बताइएको छ-औंलाको टुप्पोतिरबाट, अँजूलीको बीचबाट र अँजूलीको देब्रेतिरबाट । यो बेलामा वधूले अँजूलीको देब्रेतिरबाटै होम गर्दछिन् । किन कि नारीको वामभाग नै देवभाग भनी चिनिन्छ । 'अङ्गुल्यग्रे न होतव्यं तथैवाञ्जलिभेदतः । अञ्जलेर्वामपार्श्वेन लाजाहोमो विधीयते । वामभागस्तु नारीणां देवभाग इति स्मृतः ।' (ख) जुन कन्याका सहोदर दाजुभाई छैनन् त्यस अवस्थामा सानोबुबा वा ठूलोबुबाका छोराहरु, मामाका छोराहरु, सानीआमा ठूलीआमाका छोराहरु र फुपूका छोराहरुबाट काम चलाउन सकिन्छ । ती पनि नभए सजातीय बन्धुबान्धवबाट काम चलाउन सकिन्छ । 'भ्रातृस्थाने पितृव्यस्य, मातुलस्य यः सुतः । मातृस्वसुः सुतस्तद्वत् सुतस्तद्वत् पितृष्वसुः । अन्यो भ्रातुरभावे स्याद् बान्धवो जातिरेव च' । (ग) गोभिलगृह्यसूत्रका अनुसार लाजाहोमका समयमा वधूका हातमा वरको हात पनि हुनुपर्दछ ।

**अथास्यै दक्षिणꣳहस्तं गृह्णाति साङ्गुष्ठम् गृभ्णामि ते सौभगत्वाय हस्तं मया पत्या जरदष्टिर्यथासः । भगो अर्यमा सविता पुरन्धिर्मह्यं त्वादुर्गार्हपत्याय देवाः । अमोहमस्मि सा त्वꣳ सा त्वमस्यमोऽहम् । सामाहमस्मि ऋक् त्वं द्यौरहं पृथिवी त्वम् । तावेहि विवाहावहै सह रेतो दधावहै, प्रजां प्रजनयावहै, पुत्रान् विद्यान्वहै बहून् । ते सन्तु जरदष्टयः सम्प्रियौ रोचिष्णू सुमनस्यमानौ । पश्येम शरदः शतं जीवेम शरदः शतꣳ श्रृणुयाम शरदः शतमिति ॥३॥**

भावार्थः यसपछि वधूको दाहिने हातको बूढी औंलालाई वरले दाहिने हातले समाउनु र 'गृभ्णामि...' आदि मन्त्र पढ्नू ।

मन्त्रार्थः हे कन्या ! सौभाग्यकामनाका लागि म तिम्रो यो दाहिने हात समाउँदछु । मसँगै तिमी पनि दीर्घायुकी बन । भग, अर्यमा र सविता देवताहरुले मलाई सर्वोत्कृष्ट एवं सर्वाधिक सुन्दर सम्झी तिमीलाई गृहस्थ जीवनको आनन्द लिनका लागि सुम्पिएका छन् । हे कन्या ! म विष्णु हुँ भने तिमी लक्ष्मी हौ, म त्रिदेव स्वरुप हुँ भने तिमी देवीरुपा, म साम हुँ भने तिमी ऋचा, म आकाश हुँ भने तिमी धरती । आउ हामी दुवै प्रणयसूत्रमा बाँधिउँ, एकसाथ वीर्य धारण गरुँ, सन्तान जन्माऔं, हामीलाई धेरै छोरे छोरा हुन् । हाम्रा ती सन्तान दीर्घायुका हुन् । हामी आपसमा आकर्शित होऊँ । हामी दुवै तेजस्वी एवं एकअर्काप्रति सन्तुष्ट रहूँ । हामी सय वर्षसम्म एकअर्कालाई हेर्नेसुन्ने हुँदै बाँचौं ।



इति षष्ठी कण्डिका

✷

विवाह-विधि बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत पहिलो काण्ड, छैटौं कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## सप्तमी कण्डिका

**अथैनामश्मानमारोहयत्युत्तरतोऽग्नेर्दक्षिणपादेनआरोहेममश्मानमश्मेव त्वꣳस्थिरा भव । अभितिष्ठ पृतन्यतोऽवबाधस्व पृतनायत ।इति। ॥१॥**

भावार्थः विवाह पछि ' आरोहेमम...' आदि मन्त्र पढ्दै वरले अग्निको उत्तरमा राखिएको शिलामा दाहिने गोडा राख्न वधूलाई भन्नू ।

मन्त्रार्थः हे वधू ! अगाडि राखिएको यो पत्थरमा गोडा राखी तिमी चढ, हाम्रो घरमा तिमी चट्टानझैं सधैं सुदृढ बनी रहू । हामीमाथि जोसुकैले आक्रमण गरेपनि, तिनका सारा कोशिसलाई तिमी विफल बनाउँदै जाऊ ।

**अथ गाथां गायति-सरस्वति प्रेदमव सुभगे वाजिनीवती । यां त्वा विश्वस्य भूतस्य प्रजायामस्याग्रतः ॥ यस्यां भूतꣳ समभवद् यस्यां विश्वमिदं जगत् । तामद्य गाथां गास्यामि ता स्त्रीणामुत्तमं यश इति ॥२॥**



भावार्थः यसपछि यस्तो गाथा गान गरिन्छ-"हे देवी सरस्वती ! हजुर अन्नवती हुनुहुन्छ, कल्याणमयी हुनुहुन्छ, यी दुई कर्मको रक्षा गर्नुहोस् । त्यो गाथा म गाइरहेको छु, जसमा हजुरलाई सारा जीवको जननी बताइएको छ । प्रकृतिरुपमा हजुर आदिमाता हुनुहुन्छ । यो सारा संसार हजुरमै लीन हुन्छ । म त्यही गाथा गाइरहेको छु जसमा हजुरको नारीरुपमा विविध यशस्वी कर्महरुको वर्णन गरिएको छ" ।

**अथ परिक्रामतः-तुभ्यमग्ने पर्यवहन्सूर्यां वहतु ना सह । पुनः पतिभ्यो जायां दाग्ने प्रजया सह ।इति। ॥३॥**

भावार्थः वरवधूले अग्निको प्रदक्षिणा गर्दै यो मन्त्र पढ्नू-हे अग्निदेव ! हजुरको लागि नै साम आदि देवताले जन्मदेखि अहिलेसम्म यी कन्याको पाणिग्रहण गरेका छन् । अब सूर्यकी सम्बन्धिनी यी भार्याको भार हजुर ग्रहण गर्नुहोस्, स्वयं यिनलाई भोग्नुहोस् र त्यसपछि यिनलाई सन्तानसुखका लागि मलाई दिनुहोस् ।

**एवं द्विरपरं लाजादि ॥४॥**

भावार्थः यसरी नै दुई पटक (जम्मा तीन पटक) लाजाहोम, पाणिग्रहण, शिलारोहण, गाथागान र अग्निको प्रदक्षिणा गर्नू ।

## चतुर्थꣳ शूर्पकुष्ठया सर्वांल्लाजानावपति भगाय स्वाहेति ॥५॥

भावार्थः 'भगाय स्वाहा' यो मन्त्र पढ्दै चौथो आहुतिमा नाङ्लोको छेउले बाँकी सबै लाजा वधूले अग्निमा हाल्नू ।

## त्रिः परिणीतां प्राजापत्यꣳ हुत्वा ॥६॥

भावार्थः तीन पटक परिक्रमा गराएपछि वधूलाई बसाएर आचार्यले 'प्रजापतये स्वाहा' भनी प्रजापतिलाई आहुती दिई फेरी अरु कार्य शुरु गर्नू ।

इति सप्तमी कण्डिका

✷

विवाह-विधि बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत पहिलो काण्ड, सातौँ कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद् पूर्ण भयो

✷

## अष्टमी कण्डिका

**अथैनामुदीचीꣳसप्तपदानि प्रक्रामयति । एकमिषे, द्वे ऊर्ज्जे, त्रीणि रायस्पोषाय, चत्वारि मयोभवाय, पञ्च पशुभ्यः, षड् ऋतुभ्यः, सखे सप्तपदी भव सा मामनुव्रता भव ॥१॥**

भावार्थः प्राजापत्य होम पछि 'एकमिषि...' आदि मन्त्र उच्चारण गर्दै वरले वधूलाई उत्तरतिर सात पाइला हिडाउँदछ ।

मन्त्रार्थः हे कन्या ! तिम्रो पहिलो पाइला अन्नका लागि, दोश्रो शक्तिका लागि, तेश्रो धनका लागि, चौथो सुखका लागि, पाँचौं पशुधनका लागि, छैटौं ऋतुका लागि र सातौं मित्रताका लागि हो । तिमि मेरो कर्तव्यपालनामा सहायक सिद्ध होऊ ।

**विष्णुस्त्वा नयत्विति सर्वत्रानुषजति ॥२॥**

भावार्थः 'विष्णु तिमिलाई यो कार्यका लागि प्रेरित गरुन्' उपरोक्त सात मन्त्रका पछि यो अंश जोड्नू । जस्तैः-(क) एकमिषे विष्णुस्त्वा नयतु (ख) द्वे ऊर्जे विष्णुस्त्वा नयतु (ग) त्रीणि रायष्पोषाय विष्णुस्त्वा नयतु (घ) चत्वारिमायोभवाय विष्णुस्त्वा नयतु (ङ) पञ्च पशुभ्यो विष्णुस्त्वा नयतु (च) षड्ऋतुभ्यो विष्णुस्त्वा नयतु (छ) सखे सप्तपदा भव, सा मामनुव्रता भव विष्णुस्त्वा नयतु ।

**अभिषेचनम्-निष्क्रमणप्रभृत्युदककुम्भꣳस्कन्धे कृत्वा दक्षिणतोऽग्नेर्वाग्यतः स्थितो भवति ॥३॥ उत्तरत एकेषाम् ॥४॥**

भावार्थः कन्यादान पछि वर वधूसँगै जग्गेबाट बाहिर निक्लनुभन्दा पहिले कुनै व्यक्तिले जलपूर्ण घडा काँधमा राखी वेदीको दाहिनेतिर चुपचाप उभिनू । कसैले उत्तरतिर उभिनू पनि भनेका छन् ।

**तत एनां मूर्धन्यभिषिञ्चति-आपः शिवाः शिवतमाः शान्ताः शान्ततमास्तास्ते कृण्वन्तु भेषजमिति ॥५॥**

भावार्थः त्यसपछि काँधमा राखिएको कलशबाट आँपको पातले जल लिएर 'आपः शिवा...' आदि मन्त्र पढ्दै वधूको शीर अभिषेक गर्नू ।

मन्त्रार्थः परम माङ्गलिक एवं अत्यन्त शान्त यो जलले वधूलाई आरोग्य प्रदान गरोस् ।

## आपोहिष्ठेति च तिसृभिः ॥६॥

भावार्थः 'आपोहिष्ठा...' आदि तीन मन्त्रले पनि अभिषिञ्चन गर्नू ।

(क) आपोहिष्ठामयोभुवस्तानऽऊर्जे दधातन । महेरणायचक्षसे ।
(ख) यो वः शिवतमोरसस्तस्य भाजयतेहनः । उशतीरिव मातरः ।
(ग) तस्मा अरङ्गमामवो यस्य क्षयाय जिन्वथ । आपो जनयथा च नः ।

## अथैना ँ सूर्यमुदीक्षयति तच्चक्षुरिति ॥७॥

भावार्थः यस पछि वधूलाई वरले 'तच्चक्षु...'मन्त्र पढ्दै सूर्यदर्शन गराउनू ।

## अथास्यै दक्षिणा ँ समधि हृदयमालभते–मम व्रते ते हृदयं दधामि मम चित्तमनुचित्तं ते अस्तु । मम वाचमेकमना जुषस्व प्रजापतिष्ट्वानियुनक्तु मह्यमिति ॥८॥



भावार्थः 'मम व्रते...' आदि मन्त्र पढ्दै वरले वधूको दाहिने काँधबाट हात लगी उनको हृदय छुनू ।

मन्त्रार्थः हे कन्या ! शास्त्रमा बताइएका नियम पालनाका लागि म तिम्रो हृदय छुन्छु । तिम्रा चित्तवृत्ति मेरा अनुकूल बनुन् । तिमी एकनिष्ठभावले मेरा भनाइहरुको अनुगमन गर । प्रजापति देवताले तिमीलाई मसँग एकाकार गरुन् । तिमी हरेक दृष्टिले मेरी सहयोगिनी बन्न सक ।

## सुमङ्गलीरियं वधूरिमा ँ समेत पश्यत ।
## सौभाग्यमस्मै दत्त्वा याथास्तं विपरेतनेति ॥९॥

भावार्थः यसपछि 'सुमङ्गलीरियं...' आदि मन्त्र पढ्दै वरले वधूलाई अभिमन्त्रित गर्नू (यही मन्त्रले सिन्दूर दान पनि गरिन्छ) ।

मन्त्रार्थः हे विवाहकी अधिष्ठात्री देवीहरु हो ! यी वधू मङ्गलमयी छिन्, हजुरहरु मिलेर समवेत रुपले यिनलाई हेर्नुहोस्, यिनको सौभाग्य तथा

यिनका सन्तानलाई मङ्गलमय आशिर्वाद दिएर मात्र हजुरहरु आ-आफ्ना धाममा जानुहोस्, त्यत्तिकै होइन ।

**तां दृढपुरुष उन्मथ्य प्राग्वोदग्वाऽनुगुप्तागार आनडुहे रोहिते चर्मण्युपवेशयति इह गावो निषीदन्त्विहाश्वा इह पूरुषाः । इहो सहस्रदक्षिणे यज्ञ इह पूषा निषीदन्तु इति ॥१०॥**

भावार्थः त्यसपछि कुनै बलियो पुरुषले वधूलाई बोकी पूर्व वा उत्तरतिर पहिले नै बनाइएको चारैतिरबाट घेरिएको डोलीमा बिछ्याइएको गाडीमा नारिने रातो साँढेको छालामाथि 'इह गावो निषीदन्तु..' आदि मन्त्र पढ्दै बसाइ दिनू । (भाष्यकार हरिहरले यस्तो बलियो पुरुष वर नै हुन्छ भनेका छन्) ।

मन्त्रार्थः यो आसनमा गाई, घोडा र पुरुष बसून् । हजारौँ गाईको दक्षिणामण्डित पुष्टिकर यज्ञदेवता पनि यहाँ बसून् ।

**ग्रामवचनं च कुर्युः ॥११॥**



भावार्थः यसपछि गाउँघरका वृद्ध स्त्रीले भनेको लोकाचार (कुनै परम्परा भए सो) गरिनु पर्दछ ।

**विवाहश्मशानयोर्ग्रामं प्राविशतादिति वचनात् ॥१२॥**
**तस्मात्तयोर्ग्रामः प्रमाणमिति श्रुतेः ॥१३॥**

भावार्थः किन कि स्मृतिमा बताइएको छ कि विवाह र अन्त्येष्टि संस्कारमा शास्त्रीय आचारका अतिरिक्त कुलका वृद्धाको वचनलाई पनि प्रमाण मानेर हिँड्नु पर्दछ ।

**आचार्य्याय वरं ददाति ॥१४॥ गौर्ब्राह्मणस्य वरः ॥१५॥ ग्रामो राजन्यस्य ॥१६॥ अश्वो वैश्यस्य ॥१७॥**

भावार्थः यसपछि वरले आचार्यलाई यसप्रकारले दक्षिणा दिनू-वर ब्राह्मण भए गाई, वर क्षत्रिय भए गाउँ र वर वैश्य भए घोडा दान दिनू ।

**अस्तमिते ध्रुवं दर्शयति- ध्रुवमसि ध्रुवं त्वा पश्यामि ध्रुवैधि पोष्ये मयि । मह्यं त्वादाद् बृहस्पतिर्मया पत्या प्रजावती सञ्जीव शरदः शतम् इति ॥१९॥**

भावार्थः रातको विवाहमा वरले वधूलाई 'ध्रुवमसि...' आदि मन्त्र पढ्दै (कन्यादान पछि) ध्रुव तारा देखाउनू ।

मन्त्रार्थः हे वधु ! ध्रुवताराभैंm तिमी हाम्रो घरमा अचल रहू । म तिमीलाई ध्रुवताराभैंm अचल अटल देखिरहेको छु । ध्रुवलेभैंm अचल भएर तिमी मेरा सन्तानको पालनपोषण गर । ब्रह्मा तथा प्रजापतिले यसैका लागि तिमीलाई मेरो जिम्मामा सुम्पिएका हुन् । तिमी पति, पुत्र र नातीले युक्त र भरिपूर्ण भई सय वर्षसम्म बाँच ।

नोटः आजकल नक्कली लग्न निकालेर दिउस नै धेरै विवाह गराइन्छ र ध्रुवतारा पनि देखाइन्छ । तर दयालाग्दो गरी थला परेको विचरो संस्कारलाई ध्रुवतारा कता हुन्छ भन्ने पनि थाहा छैन, त्यसैले कतै दक्षिणतिर र कतै पूर्वतिर फर्काएर समेत ध्रुवतारा हेर्न लगाइन्छ ।

## सा यदि न पश्येत्पश्यामीत्येव ब्रूयात् ॥२०॥

भावार्थः वधूले ध्रुबतारा नदेखे पनि मैले देखिरहेकी छु भन्नू ।



## त्रिरात्रमक्षारालवणाशिनौ स्यातामधः शयीयाताᳬ संवत्सरं न मिथुनमुपेयातां द्वादशरात्रᳬ षड्रात्रं त्रिरात्रमन्ततः ॥२१॥

भावार्थः विवाहको दिनदेखि तीन दिनसम्म वरवधूले कुनै पनि अमिलो र नुन खानु हुँदैन । खाटमा सुत्नु हुँदैन । तीन दिनसम्म जमिनमा सुत्नु पर्दछ । केही आचार्यले एक वर्षसम्म वरवधूले सहवास नगर्नु भनेका छन् । कसैले बाह्र दिन त कसैले चतुर्थी कर्म नगरुञ्जेल निश्चितरुपले ब्रह्मचर्य धारण गर्नु भनेका छन् ।

नोटः जबसम्म चतुर्थी कर्म गरिँदैन तबसम्म वधू भार्या हुन्न । त्यसैले चतुर्थीकर्मसम्म ब्रह्मचर्य पालना गर्न पारस्करले पनि निर्देश गरेका छन् ।

इति अष्टमी कण्डिका

✷

विवाह-विधि बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत पहिलो काण्ड, आठौं कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# नवमी कण्डिका

## उपयमनप्रभृत्यौपासनस्य परिचरणम्॥१॥

भावार्थः विवाहित व्यक्तिले प्रतिदिन उमयमन कुशले कुशकण्डिकोक्त विधिले अग्निको परिचर्या गर्नू ।

## अस्तमितानुदितयोः दध्ना तण्डुलैरक्षतैर्वा॥२॥

भावार्थः सूर्योदय अघि तथा सूर्यास्त पछि दही, चामल वा अक्षताले होम गर्नुपर्दछ ।

## अग्नये स्वाहा प्रजापतये स्वाहेति सायम्॥३॥

भावार्थः सन्ध्यामा 'अग्नये स्वाहा' र 'प्रजापतये स्वाहा' मन्त्र पढी दुई आहुति हाल्नु पर्दछ ।

## सूर्य्याय स्वाहा प्रजापतये स्वाहेति प्रातः॥४॥



भावार्थः बिहान 'सूर्याय स्वाहा' र 'प्रजापतये स्वाहा' मन्त्र पढी दुई आहुति हाल्नु पर्दछ ।

## पुमा॑ᳪसौ मित्रावरुणौ पुमा॑ᳪसावश्विनावुभौ । पुमानिन्द्रश्च सूर्यश्च पुमा॑ᳪसंवर्ततां मयि पुनः स्वाहेति पूर्वां गर्भकामा॥५॥

भावार्थः धर्मको कामना गर्ने भएकी पत्नीले पहिले 'पुमा॑ᳪसौ..' आदि मन्त्रले हवन गर्नू ।

मन्त्रार्थः श्रेष्ठ पुरुष, मित्र तथा वरुण, दुवै अश्विनीकुमार, इन्द्र र सूर्य मेरो गर्भाशयमा पुरुषरुपमा संयुक्त हुन् ।

इति नवमी कण्डिका

*

विवाह पछिको नित्य होमका विधि बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत पहिलो काण्ड, नवौं कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

*

# दशमी कण्डिका

**राज्ञोऽक्षभेदे नद्धविमोक्षे यानविपर्य्यासेऽन्यस्यां वा व्यापत्तौ स्त्रियाश्चोद्वहने तमेवाग्निमुपसमाधायाऽऽज्यꣳसंस्कृत्येहरतिरिति जुहोति नानामन्त्राभ्याम् ॥१॥**

भावार्थः यात्राका क्रममा राजाको रथको धुरी भाँचिँदा, जुवा भाँचिँदा, रथ पल्टिँदा वा कुनै किसिमको अरु खालका आपद आएमा वा बाबुको घरबाट पतिको घरमा वधू पुग्दा सेनाग्नि वा आवसथ्याग्नि वा प्रथम कण्डिकामा वर्णन गरिएको बताइएको विधिले अग्नि स्थापना गरी घिउको संस्कार गरी 'इह रति' आदि मन्त्र पढ्दै दुई आहुति दिनू, फेरी अनेक मन्त्रले दुई-दुई आहुति दिनू ।

**अन्यद्यानमुपकल्प्य तत्रोपवेशयेद्राजानꣳस्त्रियं वा प्रतिक्षात्र इति यज्ञान्तेनात्वाहार्षमिति चैतया ॥२॥**

भावार्थः स्विष्टकृत् आहुति दिएपछि अर्कै सवारीको व्यवस्था गरी राजा वा वधूलाई 'प्रतिक्षत्रे' तथा 'आत्वाहार्ष' आदि मन्त्र पढ्दै फेरी बसाउनू ।



मन्त्रः **ॐ प्रतिक्षत्रे । प्प्रतितिष्ठामिराष्ट्रेप्प्रत्त्यश्वेषुप्प्रतितिष्ठामिगोषु ॥ प्रत्त्यङ्गेषुप्प्रतितिष्ठाम्म्यात्क्मन्प्रतिप्प्राणेषुप्प्रतितिष्ठामिपुष्टेप्प्रतिद्द्यावा-पृथिव्व्योः प्प्रतितिष्ठामियज्ञे** ॥ (य.सं.२०।१०) ।

मन्त्रार्थः देशका शूरवीरका बीचमा मेरो प्रतिष्ठा कायम रहोस् । घोडा तथा गाईहरुको मेरो सम्पदा कायम रहोस् । शारीरिक अङ्गहरु सुदृढ होऊन् । मेरो आत्मबल तथा प्राण शक्ति अक्षुण्ण रहोस् । म सधैं स्वस्थ बनी रहूँ । म सामर्थ्य सम्पन्न बनी धरती तथा आकाशका बीचका सामाजिक कल्याणकारी कार्यमा निरन्तर व्यस्त बनी रहूँ ।

मन्त्रः **ॐ आत्त्वा । हार्षमन्तरभूद्ध्रुवस्तिष्ठाविचाचलिः ॥ विशस्त्त्वासर्व्वाव्वाञ्छन्तुमात्त्वद्राष्ट्रमधिभ्रशत्** ॥ (य.सं. १२।११) ।

मन्त्रार्थः हे अग्निदेव ! मैले हजुरलाई यहाँ लेराएको हुँ । यो देशको अन्तःकरणमा हजुर सधैं अटल र अविचल भावले निवास गर्नुहोस् । यो देशका सारा जनता

हजुरलाई चाहन्छन् । हजुर सधैं यसको हितसाधनामा तत्पर रहनु होस्, जसले गर्दा यो देश र यहाँका जनता कहिल्यै श्रीहीन नहून् ।

## धुर्य्यौ दक्षिणा ॥३॥ प्रायश्चित्तिः ॥४॥

भावार्थः धुरीमा जोतिने दुई वटा साँढे दक्षिणाका रुपमा दिइयोस् । यो कर्मले दुर्निर्मित सूचक पापहरुको निराकरण हुन्छ ।

## ततो ब्राह्मणभोजनम् ॥५॥

भावार्थः सबै काम सकिए पछि ब्राह्मणभोजन गराउनु पर्दछ ।

इति दशमी कण्डिका

✷

राजाको यात्राविघ्नको शान्तिका बारेमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत पहिलो काण्ड, दशौं कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## एकादशी कण्डिका

**चतुर्थ्यामपररात्रेऽभ्यन्तरतोऽग्निमुपसमाधाय दक्षिणतो ब्रह्माणमुपवेश्योत्तरत उदपात्रं प्रतिष्ठाप्य स्थालीपाकꣳश्रपयित्वाऽऽज्यभागाविष्ट्वाऽऽज्याहुतीर्जुहोति ॥१॥**

भावार्थः विवाहको चौथो दिन रातको पछिल्लो प्रहरमा घरभित्र विवाहाग्नि स्थापना गरी दाहिनेतिर ब्रह्मालाई र उत्तरतिर जलपूर्ण कलशलाई राख्नू । चरु पकाई अग्नि र सोमलाई दुई आहुति र 'अग्ने प्रायश्चित्ते...' आदि पाँच मन्त्रले घिउको पाँच आहुति दिनू ।

**अग्ने प्रायश्चित्ते त्वं देवानां प्रायश्चित्तिरसि, ब्राह्मणस्त्वा नाथकाम उपधावामि, यास्मै पतीघ्नी तनूस्तामस्यै नाशय स्वाहा ॥ वायो प्रायश्चित्ते त्वं देवानां प्रायश्चित्तिरसि, ब्राह्मणस्त्वा नाथकाम उपधावामि, यास्यै प्रजाघ्नी तनूस्तामस्य नाशय स्वाहा ॥ सूर्य्य प्रायश्चित्ते त्वं देवानां प्रायश्चित्तिरसि, ब्राह्मणस्त्वा नाथकाम उपधावामि, यास्यै पशुघ्नी तनूस्तामस्यै नाशय स्वाहा ॥ चन्द्रप्रायश्चित्ते त्वं देवानां प्रायश्चित्तिरसि, ब्राह्मणस्त्वा नाथकाम उपधावामि, यास्यै गृहघ्नी तनूस्तामस्यै नाशय स्वाहा ॥ गन्धर्व प्रायश्चित्ते त्वं देवानां प्रायश्चित्तिरसि, ब्राह्मणस्त्वा नाथकाम उपधावामि, यास्यै यशोघ्नी तनूस्तामस्यै नाशय स्वाहेति ॥२॥**



भावार्थः सबै थरी दोषनाशक हे अग्निदेव ! हजुर देवतामा श्रेष्ठ तथा दोषनाशक हुनुहुन्छ । म कल्याण चाहने ब्राह्मण हजुरको आराधना गर्दछु । यी वधूका शरीरमा पतिलाई हानी पुऱ्याउने जुन अवयव छन् तिनलाई नष्ट गरि दिनुहोस् । हजुरका लागि हवन गर्दछु । सबै थरी दोषनाशक हे वायुदेव ! देवताहरुमा हजुर श्रेष्ठ हुनुहुन्छ । दोष नाशक हुनुहुन्छ । म कल्याण चाहने ब्राह्मण हजुरको आराधना गर्दछु । यी वधूको शरीरमा सन्तानलाई नोक्सानी पुऱ्याउने जो अवयव छन् तिनलाई हजुर नष्ट गर्नुहोस् । म हजुरका लागि हवन गर्दछु । सबै खाले दोषविनाशक हे भास्कर ! देवताहरुमा हजुर श्रेष्ठ दोष नाशक हुनुहुन्छ । म कल्याण चाहने ब्राह्मण हजुरको आराधना गर्दछु । यी वधूको शरीरमा हाम्रा पशुलाई हानी पुऱ्याउने जुन अवयव छन् तिनलाई नष्ट गरि दिनुहोस् । हजुरको लागि म यो हवन गर्दछु । सबैप्रकारका दोषका विनाशक हे चन्द्रदेव ! हजुर देवतामा श्रेष्ठ दोष भगाउने हुनुहुन्छ । म कल्याण चाहने ब्राह्मण हजुरको आराधना गर्दछु । यी वधूको शरीरमा घरलाई हानी पुऱ्याउने जुन अवयव छन्

तिनलाई हजुर नष्ट गरि दिनुहोस् । हजुरका लागि म यो आहुति दिन्छु । सबै प्रकारका दोष विनाश गर्ने हे गन्धर्व ! हजुर देवताहरुमा श्रेष्ठ दोषहर्ता हुनुहुन्छ । म कल्याण चाहने ब्राह्मण हजुरको आराधना गर्दछु । यी वधूको शरीरमा हाम्रो यशलाई हानी पुऱ्याउने जुन अवयव छन् तिनलाई हजुर नष्ट गर्नुहोस् । हजुरका लागि म यो आहुति दिन्छु ।

**स्थालीपाकस्य जुहोति प्रजापतये स्वाहेति ॥३॥**

भावार्थः स्थालीपमकलाई लिई 'प्रजापतये स्वाहा' मन्त्र पढ्दै वरले अग्निमा आहुति दिनू ।

**हुत्वा हुत्वैतासामाहुतीनामुदपात्रे सꣳस्रवान्समवनीय तत एनां मूर्द्धन्यभिषिञ्चति-या ते पतिघ्नी प्रजाघ्नी पशुघ्नी गृहघ्नी यशोघ्नी निन्दिता तनूर्जारघ्नीं तत एनां करोमि सा जीर्य त्वं मया सहासाविति ॥४॥**

भावार्थः प्रत्येक आहुति दिई बचेको घिउलाई उत्तरतिर राखिएको जलपात्रमा हाल्नू । त्यही जलले वर वधूलाई अभिषेक गर्नु तथा 'या ते..' आदि मन्त्र पाठ गर्नू ।



मन्त्रार्थः हे वधू ! तिम्रो शरीरमा पतिलाई, सन्तानलाई, घरका पशुलाई र घरका यशलाई हानी पुऱ्याउने जुन अवयव छन्, त्यसको नाश होस् । उपपत्ति जन्य पनि कुनै दोष भए त्यो पनि तिम्रो नष्ट होस् । यसपछि तिमि म सँगै दीर्घायु भएर रहू ।

**अथैनाꣳस्थालीपाकं प्राशयति-प्राणैस्ते प्राणान्त्सन्दधाम्यस्थिभिरस्थीनि माꣳसैर्माꣳसानि त्वचा त्वचमिति ॥५॥**

भावार्थः अभिषेक पछि चरुहोम गरी बचेको खीर लिएर ' प्राणैस्ते..' आदि मन्त्र पढ्दै वरले वधूलाई खीर खुवाउनू ।

मन्त्रार्थः हे वधू ! म आफ्नो प्राणले तिम्रो प्राणलाई, हाडले हाडलाई, मासुले मासुलाई र छालाले छालालाई एकसाथ मिलाउँदछु ।

**तस्मादेवंविच्छ्रोत्रियस्य दारेण नोपहासमिच्छेदुत ह्येवंवित्परो भवति ॥६॥**

भावार्थः यो चरु खुवाए पछि पत्नी पतिका साथ एक हुन्छिन् । अतः यस्ता विद्वान् पतिकी पत्नीसँग भूलले पनि कसैले उपहाससम्म गर्ने पनि इच्छा नगर्नू । किन कि यसो गर्दा उ त्यो श्रोत्रिय पतिको परम शत्रु बन्न पुग्दछ ।

## तामुदुह्य यथर्त्तुप्रवेशनम् ॥७॥

भावार्थः यसरी विधिपूर्वक विवाहकर्म सकेर ती वधूसँग प्रत्येक ऋतुकालमा समागम गर्नू ।

## यथाकामौ वा काममाविजनितोः सम्भवामेति वचनात् ॥८॥

भावार्थः अथवा जब नारी रमणको चाहना गर्दछे तब उनका साथ समागम गर्नू । किन कि नारीहरूले देवराज इन्द्रसँग यो वर मागेका थिए कि जब हामी चाहन्छौं तब आफ्ना पतिका साथ सहवास गर्दछौं ।

## अथास्यै दक्षिणाᳪंसमधि हृदयमालभते-यत्ते सुसीमे हृदयं दिवि चन्द्रमसि श्रितम् । वेदाहं तन्मां तद्विद्यात् पश्येम शरदः शतं जीवेम शरदः शतᳪं श्रृणुयाम शरदः शतमिति ॥९॥



भावार्थः मैथुन पछि 'यत्ते सुसीमे..' मन्त्र पढी वधूको दाहिने काँधमाथिबाट हात लगी वधूको हृदय छुनू ।

## एवमत ऊर्ध्वम् ॥१०॥

भावार्थः पछि पनि यसरी नै गर्भाधान गरियोस् ।

इति एकादशी कण्डिका

✷

विवाह-विधि तथा गर्भाधानका विषयमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत पहिलो काण्ड, एघारौं कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## द्वादशी कण्डिका

**पक्षादिषु स्थालीपाकꣳश्रपयित्वा दर्शपूर्णमासदेवताभ्यो हुत्वा जुहोति ब्रह्मणे प्रजापतये विश्वेभ्यो देवेभ्यो द्यावापृथिवीभ्यामिति ॥१॥**

भावार्थः प्रत्येक पक्षको परेवाका दिन खीर पकाएर औंसी र पूर्णिमाका देवताको आहुति हाले पछि ब्रह्मा, प्रजापति, विश्वेदेव तथा द्यावापृथिवीलाई आहुति दिनू ।

**विश्वेभ्यो देवेभ्यो बलिहरणं भूतगृह्येभ्य आकाशाय च ॥२॥**

भावार्थः चरुहोमका सबै देवता, भूतदेव, गुह्यदेव तथा आकाशलाई बलि दिनू ।

**वैश्वदेवस्याग्नौ जुहोत्यग्नये स्वाहा, प्रजापतये स्वाहा, विश्वेभ्यो देवेभ्यः स्वाहा, अग्नये स्विष्टकृते स्वाहेति ॥३॥**

भावार्थः वैश्वदेवलाई यसरी होम गर्नु-अग्नये स्वाहा इदमग्नये । प्रजापतये स्वाहा इदं प्रजापतये । विश्वेभ्यो देवेभ्यः स्वाहा इदं विश्वेभ्यो देवेभ्यः । अग्नये स्विष्टकृते स्वाहा, इदमग्नये स्विष्टकृते । भूः स्वाहादिनवाहुतिः ।



**प्राशनान्ते बाह्यतः स्त्रीबलिꣳ हरति-नमः स्त्रियै नमः, पुꣳसे वयसेऽवयसे नमः, शुक्लाय कृष्णदन्ताय पापीनां पतये नमः । ये मे प्रजामुपलोभयन्ति ग्रामे वसन्त उत वाऽरण्ये तेभ्यो नमोऽस्तु बलिमेभ्यो हरामि स्वस्ति मेऽस्तु प्रजां मे ददत्विति ॥४॥**

भावार्थः 'नमः स्त्रियै' आदि मन्त्र पढी घर बाहिर दुष्ट स्त्रीका लागि बलि राख्नू ।

मन्त्रार्थः सन्तान सुखबाट बञ्चित गर्ने स्त्रीहरुलाई मेरो नमस्कार छ । गोरो वर्ण, कालो दाँत, अती मलिन, चाहे ती साना हुन् वा ठूला पापीका मुखियाहरुलाई पनि मेरो नमस्कार छ । म तिनलाई पहिले नमस्कार गरेर बलि दिन्छु, जसले हाम्रा सन्तानलाई नष्ट गर्दछन्, चाहे गाउँमा बसून् वा जङ्गलमा । तिनले मेरो कल्याण गरून्, मलाई सन्तान सुख दिऊन् ।

**शेषमद्भिः प्रप्लाव्य । ततो ब्राह्मणभोजनम् ॥५॥**

भावार्थः चरुपात्रमा बचेको खीरलाई पानीले सफा गर्नू । यसपछि ब्राह्मणलाई भोजन गराउनु पर्दछ ।

इति द्वादशी कण्डिका

✷

विवाहपछिको बलि-विधि बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत पहिलो काण्ड, बाह्रौं कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## त्रयोदशी कण्डिका

**सा यदि गर्भं न दधीत सिꣳह्याः श्वेतपुष्प्या उपोष्य पुष्येण मूलमुत्थाप्य चतुर्थेऽहनि स्नातायां निशायामुदपेषं पिष्ट्वा दक्षिणस्यां नासिकायामासिञ्चति । इयमौषधी त्रायमाणा सहमाना सरस्वती । अस्या अहं बृहत्याः पुत्रः पितुरिव नाम जग्रभमिति ॥१॥**

भावार्थः यदि पत्नीले गर्भाधारण गर्न नसके सेतो फूल फुल्ने कण्टकारीलाई पुष्य नक्षमा चन्द्रमा हुँदा उपवास बसी जरै समेत उखेल्नू । फेरी पत्नी पर सरेको चौथो दिन नुहाएर शुद्ध भएपछि रातमा पानीसँग पिसेर त्यसको रस दुई-तीन थोपा उनको नाकको दाहिने प्वालमा 'इयमोषधी...' आदि मन्त्र पढ्दै हालि दिनू ।

मन्त्रार्थः गर्भधारणमा बाधक दोषहरु हटाएर गुणहरु लेराउने भएको यो काष्ठौषधी कष्ट सहेर पनि सेवन गर्नेको रक्षा गर्दछिन् तथा दोषका वेगलाई नष्ट गर्दछिन् । अनेक प्रकारका फल दिने भएकी यी वनस्पतिको कृपाले गर्दा जसरी म आफ्नो पिताको नाम लिन्छु त्यसरी नै मेरा सन्तानले मेरो नाम लिएर उज्वल गरून् ।



इति त्रयोदशी कण्डिका

✷

गर्भाधानमा समस्या पर्दा ओखती बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत पहिलो काण्ड, तेह्रौं कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## चतुर्दशी कण्डिका

### अथ पुꣳवनम् ॥१॥

भावार्थः यसपछि पुंसवन संस्कारका विषयमा बताइन्छ ।

### पुरा स्पन्दत इति मासे द्वितीये तृतीये वा ॥२॥

भावार्थः पेटमा बच्चा केही हलचल गर्न थालेको गर्भधारणको दोश्रो या तेश्रो महिनामा,...।

### यदहः पुꣳसा नक्षत्रेण चन्द्रमा युज्यते तदहरूपवास्याप्लाव्याऽहते वाससी परिधाप्य न्यग्रोधाव- रोहाञ्छुङ्गांश्च निशायामुदपेषं पिष्ट्वा पूर्ववदासेचनꣳहिरण्यगर्भोऽद्भ्यः सम्भृत इत्येताभ्याम् ॥३॥

भावार्थः पुष्य आदि कुनै पुरुष नक्षात्रको योग चन्द्रमाका साथ हुँदा, स्त्रीलाई नुहाउन र उपवास बस्न लगाई, सफा कपडा फेराई, रातमा बरका भुण्डिएका जरा र कमला पातलाई पानीमा पिसी, 'हिरण्यगर्भ...' तथा 'अद्भ्यः सम्भृतः...' आदि मन्त्रले बताइएको विधिले पत्नीको नाकको दाहिने प्वालमा त्यो जलको दुई-चार थोपा खसाल्नु पर्दछ ।

### कुशकण्टकꣳ सोमाꣳशुं शुङ्गैके ॥४॥

भावार्थः कसैले बरको जरा र कमलो पातमा कुशको जरा र सोमलता पनि मिलाउने भनेका छन् ।

### कूर्मपित्तं चोपस्थे कृत्वा स यदि कामयेत वीर्य्यवान्त्स्यादिति विकृत्यैनमभिमन्त्रयतेसुपर्णोऽसीति प्राग्विष्णुक्रमेभ्यः ॥५॥

भावार्थः गर्भमा रहेका पिता यदि सन्तान शक्तिशाली होस् भनी चाहन्छन् भने जल सहितको माटोको भाँडोलाई पत्नीको काखमा राखी हातले गर्भाशयको स्पर्श गर्दै विकृति छन्दको 'सुपर्णोऽसी...' मन्त्रलाई विष्णुमन्त्र भन्दा पहिलेसम्म पढ्नू ।

इति चतुर्दशी कण्डिका

पुंसवन संस्कारका बारेमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत पहिलो काण्ड, चौधौं कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

## पञ्चदशी कण्डिका

### अथ सीमन्तोन्नयनम् ॥१॥

भावार्थः अब सीमन्तोयन्नन संस्कारका बारेमा बताइन्छ ।

### पुꣳसवनवत् २॥

भावार्थः पुंसवनझैं सीमन्तोन्नयन हुन्छ (चन्द्रमाका साथ पुष्य नक्षत्रको योगमा स्त्रीले नुहाई नयाँ कपडा लगाएर उपवास बसी, सफा कपडा फेराई)... ।

### प्रथमगर्भे मासे षष्ठेऽष्टमे वा ॥३॥

भावार्थः गर्भाधानबाट छैटौं वा आठौं महिनामा सीमन्तोन्नयन संस्कार गर्नू ।

### तिलमुद्गमिश्रꣳस्थालीपाकꣳश्रपयित्वा प्रजापतेर्हुत्वा पश्चादग्नेर्भद्रपीठ उपविष्टायां युग्मेन सटालुग्रप्सेनौदुम्बरेण त्रिभिश्च दर्भपिञ्जुलैस्त्र्येण्या शलल्या वीरतरशङ्कुना पूर्णचात्रेण च सीमन्तमूद्ध्वं विनयति भूर्भुवः स्वरिति ॥४॥



भावार्थः तील र मुँगी मिलाइएको चामल पकाएर आज्यभागसम्मको कर्म सकी, प्रजापतिलाई आहुति दिई, स्विष्टकृत् अग्निका लागि आहुति दिनू र संस्रवप्राशन गरी वेदीको छेउमा अग्निको पश्चिम तथा पतिको दाहिने तिर नरम आसन माथि पत्नी बसे पछि, काँचो डुम्रीका जोर फल भएको हाँगो, तीन वटा बालीदार कुश, तीन वटा सेता दुम्सीका काँडा, पीपलको एउटा किलो एवं धागोका साथमा कैंची अर्थात् यी पाँच वस्तुलाई एकसाथ मिलाएर एकै पटकमा नै पतिले स्त्रीका कपाललाई 'भूर्भुवः स्वः (विनयामि)' पढ्दै माथितिर सिउँदो कोर्दछ ।

### प्रतिमहाव्याहृतिर्वा ॥५॥

भावार्थः कसै कसैले यो क्रिया प्रत्येक महाव्याहृतिलाई अलग अलग उच्चारण गरी तीन पटक गर्नू पनि भनेका छन् ।

### त्रिवृतमाबध्नाति । अयमूर्ज्जावतो वृक्ष ऊर्ज्जीव फलिनी भवेति ॥६॥

भावार्थः बयर आदि पाँचै वस्तुलाई जोडनमा तीन गाँठा पारी 'अयमूर्ज्जावतः' आदि मन्त्र पढ्दै बाँध्नू ।

मन्त्रार्थः हे सुकेशी ! यो वृक्ष शक्तिशाली छ, यसका हाँगा फलले भरिएका छन्, यो वृक्ष झैं तिमी पनि फलवती बन ।

### अथाह वीणागाथिनौ राजानꣳसङ्गायेतां यो वाऽप्यन्यो वीरतर इति ॥७॥

भावार्थः वेणीबन्धन पछि पतिले वीणा लिएर गाथा गाउने दुई पुरुषलाई कुनै राजा या वीर पुरुषका विषयमा गाथा गाउन लगाउनू ।

### नियुक्तामप्येके गाथामुपोदाहरन्तिसोम एव नो राजेमा मानुषीः प्रजाः ।
### अविमुक्तचक्र आसीरंस्तीरे तुभ्यमसाविति ।
### यां नदीमुपावसिता भवति तस्या नाम गृह्णाति ॥८॥

भावार्थः केही आचार्यले वेदोक्त ' सोम एव...' आदि गरिएका गाथा गाउनू भन्दछन् । गाथाको अन्तमा गर्भिणी स्त्रीले जुन नदी नजिकै छ त्यही नदीको प्रथमान्त नाम लिनू ।

मन्त्रार्थः हे नदी हो ! चन्द्रमा हाम्रा स्वामी हुन् तथा तिमी स्वयं सोमरुपा हौ, यसैले तिमीले मुक्त गरेका चक्र तीरमा मानवी प्रजा बसेका छन्, अतः तिमी हाम्रो रक्षा गर ।



टिप्पणीः गदाधरले गर्भिणी-धर्मका सम्बन्धमा लेखेका छन्- अङ्गारभष्मास्थिकपालचुल्ली-शूर्पादिकेषूपविशेन्न नारी । सोलूखलाद्ये दृषदादिके वा यन्त्रे तुषाद्ये न तथोपविष्टा ॥ नो मार्जनीगोमयपिण्डकादौ मूत्रं पुरीषं शयनं च कुर्यात् । नो मुक्तकेशी विवशाऽथवा स्याद् भुङ्क्ते न सन्ध्यावसरे न शेते ॥ नामङ्गलं वाक्यमुदीरयेत् सा शून्यालयं वृक्षतलं न यायात् । (अर्थ-गर्भिणीले नाङ्लो, चूलो, खोपडी, हाड, खरानी वा बलिरहेको अँगार माथि नबस्नू । कूचो र गोबर माथि नसुत्नू अनि मलमूत्र पनि नत्याग्नू । कपाल खुलै राखेर नघुम्नू । साँझ वा गोधूलि बेलामा केही नखानू, नसुत्नू । अमङ्गल सूचक केही कुरा नबोल्नू । कुनै सुनसान घरमा नछिर्नू र कुनै रुखको तल नबस्नू ।

### ततो ब्राह्मणभोजनम् ॥९॥

भावार्थः त्यसपछि ब्राह्मण भोजन गराउनू ।

इति पञ्चदशी कण्डिका

✷

सीमन्तोन्नयन संस्कारका बारेमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत पहिलो काण्ड, पन्ध्रौं कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# षोडशी कण्डिका

## सोष्यन्तीमद्भिरभ्युक्षति-एजतु दशमास्य इति प्राग्यस्यैत इति ॥१॥

भावार्थः सुत्केरी बेथा लागेकी स्त्रीलाई उनका पतिले 'एजतु...' आदि मन्त्र पढ्दै जल छर्कनू ।

मन्त्रः ॐ एजंतुदशंमास्यꣳ॥ एजंतुदशंमास्योगर्ब्भोजरायुंणासह ॥
षथायंव्वायुरेजंतिषथासमुद्रऽएजंति ॥ एवायन्दशंमास्योऽअस्रंज्जरायुंणासह ॥
(य.वे.८।२८) ।

अर्थः दश महिनाको पूरा अवयवको गर्भभित्रको शिशु आफ्नो सालनाल सँगै हलचल गरोस् । जसरी हावा चल्छ र समुद्र हल्लन्छ, त्यसरी नै यो दश महिने गर्भस्थ शिशु सालनाल सहितै आमाको पेटबाट बाहिर निक्ली आओस् ।

## अथापरावपतनमवैतु पृश्निशेवलꣳशुने जराय्वत्तवे । नैव माꣳसेन पीवरीं न कस्मिंश्चनायतनमवजरायुपद्यतामिति ॥२॥



भावार्थः गर्भस्थ शिशुलाई छिटै बाहिर निकाल्नका लागि पिताले 'अवैतु...' इत्यादि मन्त्र पढ्नू ।

मन्त्रः ॐ अवैतु पृश्निशेवलꣳशुने जराय्वत्तवे । नैव माꣳसेन पीवरीं न
कस्मिंश्चनायतनमवजरायुपद्यताम् ।

मन्त्रार्थः हे प्रसवले पीडिता ! तिम्रो पानीले भिजेको पानीसिमालीजस्तो सालनाल कुकुरलाई खुवाउन तल आओस् । हे मासुको भुकुल्लो शरीर भएकी ! तिमी गर्भलाई पीडा दिने अन्य अङ्ग सँगै नलिई निस्क, तिमी बाहिर निस्कँदा गर्भ पनि कुनै शङ्कटमा नपरोस् ।

## जातस्य कुमारस्याच्छिन्नायां नाड्यां मेधाजननाऽऽयुष्ये करोति ॥३॥

भावार्थः जन्म लिएपछि र नाल काट्नू अघि बालकका बाबुले शिशुको बुद्धि उत्पादन तथा आयु वृद्धिका लागि जातकर्म गर्नू ।

**अनामिकया सुवर्णान्तर्हितया मधुघृते प्राशयति घृतं वा भूस्त्वयि दधामि । भुवस्त्वयि दधामि । स्वस्त्वयि दधामि । भूर्भुवःस्वः सर्वं त्वयि दधामिति ॥४॥**

भावार्थः सुनले ढाकेको साँहिली औंलाले विषम मात्रामा मह र घिउ मिसाएर वा केवल घिउले नै 'भुवस्त्वयि...' आदि मन्त्र पढ्दै एक पटक वा चार पटक बालकलाई बाबुले चटाउनू ।

मन्त्रः ॐ भूस्त्वयिदधामि ॥ ॐ भुवस्त्वयिदधामि॥ ॐ स्वस्तयिदधामि॥
ॐ भूर्भुवःस्वःसर्वंत्ययिदधामि॥

मन्त्रार्थः भू आदि तीन महाव्याहृतिले तीन वेदलाई म तिमीमा स्थापित गर्दछु अथवा सम्पूर्ण विशेषणले युक्त अथर्ववेदलाई तिमीमा स्थापित गर्दछु ।

**अथास्याऽऽयुष्यं करोति ॥५॥**

भावार्थः यसपछि पिताले बालकको आयू वृद्धि कर्म गर्नू ।

**नाभ्यां दक्षिणे वा कर्णे जपति-अग्निरायुष्मान्त्स वनस्पतीभिरायुष्माँस्तेन त्वाऽऽयुषाऽऽयुष्मन्तं करोमि । सोम आयुष्मान्त्स ओषधीभिरायुष्माँस्तेन त्वाऽऽयुषाऽऽयुष्मन्तं करोमि । ब्रह्मायुष्मत्तद्ब्राह्मणै- रायुष्मत्तेन त्वाऽऽयुषा ऽऽयुष्मन्तं करोमि । देवा आयुष्मन्तस्तेऽमृतेनाऽऽयुष्मन्तस्तेन त्वाऽऽयुषाऽऽयुष्म- न्तं करोमि । ऋषय आयुष्मन्तस्ते व्रतैरायुष्मन्तस्तेन त्वाऽऽयुषाऽऽयुष्मन्तं करोमि । पितर आयुष्मन्तस्ते स्वधाभिरायुष्मन्तस्तेन त्वाऽऽयुषाऽऽयुष्मन्तं करोमीति त्रिस्त्रिः ॥६॥**



भावार्थः जातकको नाइटोमा वा दाहिने कानमा 'अग्निरायुष्मान्...' आदि आठ मन्त्रलाई बाबुले तीन-तीन पटक कानेखुशी (मन्दस्वरको जप) गर्नू ।

मन्त्रः
(१) ॐ अग्निरायुष्मान्त्स वनस्पतीभिरायुष्माँस्तेन त्वाऽऽयुषाऽऽयुष्मन्तं करोमि ।
(२) ॐ सोम आयुष्मान्त्स ओषधीभिरायुष्माँस्तेन त्वाऽऽयुषाऽऽयुष्मन्तं करोमि ।
(३) ॐ ब्रह्मायुष्मत्तद्ब्राह्मणैरायुष्मत्तेन त्वाऽऽयुषाऽऽयुष्मन्तं करोमि ।
(४) ॐ देवा आयुष्मन्तस्तेऽमृतेनाऽऽयुष्मन्तस्तेन त्वाऽऽयुषाऽऽयुष्मन्तं करोमि ।
(५) ॐ ऋषय आयुष्मन्तस्ते व्रतैरायुष्मन्तस्तेन त्वाऽऽयुषाऽऽयुष्मन्तं करोमि ।
(६) ॐ पितर आयुष्मन्तस्ते स्वधाभिरायुष्मन्तस्तेन त्वाऽऽयुषाऽऽयुष्मन्तं करोमि ।
(७) ॐ यज्ञ आयुष्मान्त्स दक्षिणाभिरायुष्माँस्तेन त्वाऽऽयुषाऽऽयुष्मन्तं करोमि ।

(८) ॐ मुद्र आयुष्मान्त्स स्रवन्तीभिरायुष्माँस्तेन त्वाऽऽयुषाऽऽयुष्मन्तं करोमि ।

मन्त्रार्थः अग्नि वनस्पतिहरुबाट, सोम औषधीहरुबाट, ब्रह्म ब्राह्मणहरुबाट, देवता अमृतबाट, ऋषि व्रतबाट, पितृगण स्वधाबाट, यज्ञ दक्षिणाबाट र समुद्र नदीहरुबाट जसरी आयुष्मान् छन् त्यसरी नै ती पदार्थबाट म तिमीलाई दीर्घजीवि पार्दछु ।

## त्र्यायुषमिति च ॥७॥

भावार्थः यसैगरी 'त्र्यायुषम्...' मन्त्र पनि तीन पटक पाठ गर्नू ।

मन्त्रः ॐ त्र्यायुषञ्जमदग्नेः कश्यपस्यत्र्यायुषम् ॥
यद्देवेषुत्र्यायुषन्तन्नोऽअस्तुत्र्यायुषम् ॥ (य.वे.३।६२) ।

मन्त्रार्थः यमदग्नि तथा कश्यप आदि ऋषिहरु तथा देवताका तीन अवस्थाको सारभूत अंश (तिमी) हामीलाई प्राप्त होस् ।

## स यदि कामयेत सर्वमायुरियादिति वात्सप्रेणैनमभिमृशेत् ॥८॥
## दिवस्परीत्येतस्यानुवाकस्योत्तमामृचं परिशिनष्टि ॥९॥

भावार्थः पिता यदि पुत्रले पूर्ण आयु प्राप्त गरोस् भनी चाहन्छ भने 'दिवस्परि..'देखि '..उशिजो विवव्रुः' सम्मका वत्सप्रभिलिन्दन ऋषिले बताएका एघार ऋचाको वात्सप्र अनुवाक पढेर वालकलाई सुनाउनू । तर अनुवाकको अन्तिम ऋचा 'अस्ताव्यग्नि...' लाई छोड्नू ।

मन्त्रहरुः (यजुर्वेद १२।१८-२८)

(१) ॐ दिवस्प्परि । प्प्रथमञ्जज्ञेऽअग्निरस्म्मद्द्वितीयम्परिजातवेदाः ॥
तृतीयमप्प्सुनृमणाऽअजस्रमिन्धानऽएनञ्जरतेस्वाधीः ॥

(२) ॐ विद्म्मते ॥ विद्म्मतेऽअग्नेत्रेधात्रयाणिविद्म्मतेधामविभृतापुरुत्रा ॥
विद्म्मतेनामपरमङ्गुहायद्विद्म्मतमुत्त्सँम्यतऽआजगन्थ ॥

(३) ॐ समुद्रेत्त्वा । नृमणाऽअप्प्स्वन्तर्नृचक्षाऽईधेदिवोऽअग्नऽऊधन् ॥
तृतीयेत्त्वारजसितस्त्थिवाᳬसमपामुपस्त्थेमहिषाऽअवर्द्धन् ॥

(४) ॐ अक्क्रन्ददग्निः ॥
अक्क्रन्ददग्निस्त्तनयन्निवद्यौःक्षामारेरिहद्वीरुधः समञ्जन् ॥
सद्द्योजज्ञानोविहीमिद्धोऽअक्ख्यदारोदसीभानुनाभात्त्यन्तः ॥

(५) ॐ श्रीणामुदारः ॥
श्रीणामुदारोधरुणोरयीणाम्मनीषाणाम्प्राप्र्पणꣳसोमगोपाः ॥
वसुः सूनुः सहसोऽअप्प्सुराजाविभात्यग्ग्रऽउषसामिधानः ॥

(६) ॐ विश्ववस्यकेतुः ॥
विश्ववस्यकेतुर्भुवनस्यगर्भऽआरोदसीऽअपृणाज्जायमानः ॥
वीडुञ्चिदद्रिमभिनत्परायञ्जनायदग्निमयजन्तपञ्च ॥

(७) ॐ उशिक्पावकः ॥
उशिक्पावकोऽअरतिःसुमेधामर्त्तेष्ष्वग्निरमृतोनिधायि ॥
इयर्त्तिधूममरुषम्भरिब्भ्रदुच्छुक्क्रेणशोचिषाद्यामिनक्षन् ॥

(८) ॐ दृशानोरुक्मः ॥
दृशानोरुक्मऽउर्व्याव्व्यद्यौदुर्म्मर्षमायुः श्रियेरुचानः ॥
अग्निरमृतोऽअभवद्वयोभिर्य्यदेनन्द्यौरजनयत्सुरेताः ॥

(९) ॐ यस्ते ॥ यस्तेऽअद्यकृणवद्भद्रशोचेपूपन्देवघृतवन्तमग्ने ॥
प्रतन्नयप्प्रतरंवस्योऽअच्छाभिसुम्म्नन्देवभक्तँय्यविष्ठ ॥

(१०) ॐ आतम् ॥ आतम्भजसौश्रवसेष्ष्वग्नऽउक्थऽउक्थऽआभजशस्यमाने ॥
प्प्रियःसूर्य्येप्प्रियोऽअग्नाभवात्युज्जातेनभिनददुज्जनित्वैः ॥

(११) ॐ त्वामग्ने ॥ त्वामग्नेयजमानाऽअनुद्यून्विश्वावसुदधिरेवार्य्याणि ॥
त्वयासहद्द्रविणमिच्छमानाव्व्रजङ्गोमन्तमुशिजोविवव्रुः ॥

## प्रतिदिशं पञ्च ब्राह्मणानवस्थाप्य ब्रूयादिममनुप्राणितेति ॥१०॥

भावार्थः प्रत्येक दिशामा एक-एक र बीचमा एक गरी जम्मा पाँच ब्राह्मणलाई बसाई बाबुले बालकलाई प्राणशक्तिले युक्त गरि दिन ती ब्राह्मणहरूलाई अनुरोध गर्नू ।

## पूर्वो ब्रूयात् प्राणेति ॥११॥

भावार्थः पूर्वमा बसेका ब्राह्मणले 'प्राण' भन्नू ।

## व्यानेति दक्षिणः ॥१२॥

भावार्थः दक्षिणमा बसेकाले 'व्यान' भन्नू ।

## अपानेत्यपरः ॥१३॥

भावार्थः पश्चिममा बसेकाले 'अपान' भन्नू ।

## उदानेत्युत्तरः ॥१४॥

भावार्थः उत्तरमा बसेकाले 'उदान' भन्नू ।

## समानेति पञ्चम उपरिष्टादवेक्षमाणो ब्रूयात् ॥१५॥ स्वयं वा कुर्यादनुपरिक्राममविद्यमानेषु ॥१६॥

भावार्थः बीचमा बसेकाले 'समान' भन्नू । पाँच ब्राह्मण नपाइए बालकका पिताले पाँच वटै दिशामा क्रमैले गई यो कर्म सम्पादन गर्नू ।

## स यस्मिन् देशे जातो भवति तमभिमन्त्रयते वेद ते भूमि हृदयं दिवि चन्द्रमसि श्रितम् । वेदाहं तन्मां तद्विद्यात् पश्येम शरदः शतं जीवेम शरदः शतꣳ श्रृणुयाम शरदः शतमिति ॥१७॥



भावार्थः बालकको जन्मस्थानलाई छोई बाबुले 'वेद ते...' मन्त्र पढ्नू ।

मन्त्रः ॐ वेद ते भूमि हृदयं दिवि चन्द्रमसि श्रितम् । वेदाहं तन्मां तद्विद्यात् पश्येम शरदः शतं जीवेम शरदः शतꣳश्रृणुयाम शरदः शतम् ।

मन्त्रार्थः हे वसुन्धरा ! यो बालक तिम्रो हृदयसँग परिचित छ, आकाश तथा चन्द्रमामा आश्रित चित्तको ज्ञान मलाई छ, त्यसरी नै यो बालकले मलाई पनि जानोस् । म सय वर्षसम्म देखूँ, सय वर्षसम्म बाँचूँ, सय वर्षसम्म सुनूं ।

## अथैनमभिमृशत्यश्मा भव परशुर्भव हिरण्यमस्त्रुतं भव । आत्मा वै पुत्रनामासि स जीव शरदः शतमिति ॥१८॥

भावार्थः यसपछि बाबुले बालकलाई छोई 'अस्मा...' मन्त्र पढ्नू र पिताले नवजात वालकलाई छुनू ।

**मन्त्रः** **ॐ अश्मा भव परशुर्भव हिरण्यमस्त्रुतं भव । आत्मा वै पुत्रनामासि स जीव शरदः शतम् ।**

मन्त्रार्थः हे कुमार ! तिमी स्पर्शमणिभैँ सुदृढ अङ्ग भएका र प्रिय बन, बञ्चरोलेभैँ शत्रुको विनाश गर, सुनभैँ तेजस्वी र सबैले चाहने बन, पुत्ररुपमा तिमी वास्तवमा हाम्रो आत्मा नै हौ, तिमीलाई सय वर्षको आयु प्राप्त होस् ।

## अथास्य मातरमभिमन्त्रयते-इडासि मैत्रावरुणी वीरे वीरमजीजनथाः । सा त्यं वीरवती भव याऽस्मान् वीरवतोऽकरदिति ॥१९॥

भावार्थः बालकलाई छोएपछि, अब तिनकी आमालाई 'इडासि...'मन्त्र पढ्दै अभिमन्त्रित गर्नू ।

**मन्त्रः** **ॐ इडासि मैत्रावरुणी वीरे वीरमजीजनथाः । सा त्यं वीरवती भव याऽस्मान् वीरवतोऽकरत् ।**

मन्त्रार्थः हे वीरमाता ! तिमी मित्रावरुण देवताका अंशले उत्पन्न वुद्धिस्वरुपा मानवरुपमा यज्ञकी पात्रा हौ, तिमीले वीर पुत्रलाई जन्मायौ र मलाई यस्तो वीर पुत्रको बाबु बन्ने गौरव दियौ, यसपछि पनि जो पुत्र तिमीबाट उत्पन्न हुनेछ त्यो पनि वीर हुनेछ ।



## अथास्यै दक्षिणꣳस्तनं प्रक्षाल्य प्रयच्छतीमꣳस्तनमिति ॥२०॥

भावार्थः यसपछि 'इमं स्तनं...' मन्त्र पढ्दै आमाले दाहिने स्तन धोएर बालकको मुखमा दिनू ।

**मन्त्रः** **ॐ इमꣳस्तनम् ॥ इमꣳस्तनमूर्ज्जस्वन्तन्धयामाम्प्रपीनमग्नेसरिरस्यमध्ध्ये ॥**
**उत्त्सञ्जुषस्वमधुमन्तमर्वन्त्समुद्रियꣳसदनमाविशस्व ॥** (य.वे.१७।८७) ।

मन्त्रार्थः हे अग्नि समानका पुरुष ! तिमी यो बलशाली जलको रस दूध पिउ । धेरैका बीचमा प्रशंसित मिठोपना (महजस्तै) आदि गुणले युक्त रसिलो कुवाको पान गर । घोडा समान फुर्तिलो हुन चाहने तिमी यो सुमद्ररूपी रसमा जाउ (डुब) ।

भावार्थः जसरी बालक र बाच्छाबाच्छी स्तनको दूध पिएर बढ्दछन्, जसरी घोडा दौडन्छ, त्यसैगरी मानिस पनि उचित खानपिन गर्दै अघि बढ्नू । जसरी जलले भरिएको समुद्रको बीचमा भएको व्यक्ति डुँगामा चढी सुखपूर्वक किनारामा पुग्दछ त्यसरी नै तिमी पनि राम्रा साधनको उपभोग गर्दै संसाररूपी सागर तर ।

## यस्ते स्तन इत्युत्तरमेताभ्याम् ॥२१॥

भावार्थः अनि 'यस्ते...' मन्त्र पढी देब्रे स्तन धोई बालकलाई चुस्न लगाउनू ।

मन्त्रः ॐ यस्ते ॥ यस्तेस्तनःशशयोयोमयोभूर्य्योरत्नधावसुविद्यꣳसुदत्रः ॥
येनविश्वापुष्यसिवार्य्याणिसरस्वतितमिहधातवेकꣳ ॥
उर्वन्तरिक्षमन्वेमि ॥ (य.वे.३८।५) ।

मन्त्रार्थः आमा सरस्वती ! हजुर त्यो स्तनको दूध पिलाउनु होस् जुन अभुक्त, सुखद, रत्नराशिको केन्द्र, धनज्ञ तथा उदार दानी छ । जुन स्तनले हजुर विश्वका सबै श्रेष्ठ तथा रमणीय वस्तुलाई पुष्ट पार्नुहुन्छ । म त्यही स्तनलाई जुन मेरो जीवनको श्रोत्र हो यो विशाल अन्तरिक्षमा खोजि रहेछु ।

## उदपात्रꣳशिरस्तो निदधात्यापो देवेषु जाग्रथ, यथा देवेषु जाग्रथ । एवमस्याꣳ सूतिकायाꣳ सपुत्रिकायां जाग्रथेति ॥२२॥

भावार्थः- यसपछि 'आपो देवेषु...' आदि मन्त्र पढ्दै सुत्केरीको सिरानमा जलपूर्ण पात्र राखिदिनू ।



मन्त्रः ॐ आपो देवेषु जाग्रथ, यथा देवेषु जाग्रथ ।
एवमस्याꣳसूतिकायाꣳसपुत्रिकायां जाग्रथ ॥

मन्त्रार्थः हे जल ! हजुर देवताहरुप्रति जसरी जागरुक रहनु हुन्छ त्यसरी नै यी पुत्रवती सुत्केरीप्रति पनि सधैं जागरुक रहनु होस् ।

## द्वारदेशे सूतिकाग्निमुपसमाधायोत्थानात् सन्धिवेलयोः फलीकरणमिश्रान् सर्षपानग्नावावपतिशण्डामर्का उपवीरः शौण्डिकेय उलूखलः । मलिम्लुचो द्रोणासश्च्यवनो नश्यतादितः स्वाहा । आलिखन्ननिमिषः किंवदन्त उपश्रुतिर्हर्यक्षः कुम्भी शत्रुः पात्रपाणिर्नृमणिर्हन्त्रीमुखः सर्षपारुणश्च्यवनो नश्यतादितः स्वाहेति ॥२३॥

भावार्थः सुत्केरी कोठाको ढोकामा सुतिकाग्नि बाली सूतक समाप्त नभएसम्म बिहानबेलुकी अक्षता मिसिएको सर्सिउँको दुई आहुति 'शण्डामर्का...' एवं ' आलिखन्न...' मन्त्र पढी हालिदिनु पर्दछ ।

मन्त्रः ॐ शण्डामर्का उपवीरः शौण्डिकेय उलूखलः ।
मलिम्लुचो द्रोणासश्च्यवनो नश्यतादितः स्वाहा ॥

मन्त्रार्थः नाशक, मार्ने, विघ्नकुशल, आश्रितघातक, अप्रतीकार्यक, अत्यन्त मलिन बुद्धिका, लामो नाक भएका र इन्द्रियका शक्तिलाई क्षीण पार्ने बालग्रहहरु यहाँबाट नाश होऊन् ।

मन्त्रः ॐ आलिखन्ननिमिषः किंवदन्त उपश्रुतिर्हर्यक्षः कुम्भी शत्रुः पात्रपाणिर्नृमणिर्हन्त्रीमुखः सर्षपारुणश्च्यवनो नश्यतादितः स्वाहा ॥

मन्त्रार्थः चारैतिर चपाउँदै घुरेर हेर्ने, आवाज नबुझिने, नजिक आएर नोक्सान पुऱ्याउने, हरियाहरिया आँखा भएका, विघ्न पुऱ्याउने, शत्रुलेझैं व्यवहार गर्ने, हातमा छाला लिएका, कसैलाई हानी पुऱ्याउने चाहना बोकेका, रातदिन हिंसामा डुब्ने, सर्सिउँझैं पहेँला, हाम्रो बललाई नाश गर्ने भएका बालग्रह यहाँबाट भागून् वा नष्ट होऊन् ।

## यदि कुमार उपद्रवेज्जालेन प्रच्छाद्योत्तरीयेण वा पिताऽङ्क आधाय जपति-कूर्कुरः सुकूर्कुरः कूर्कुरो बालबन्धनः । चेच्चेच्छुनक सृज नमस्ते अस्तु सीसरो लपेतापह्वर तत्सत्यम् । यत्ते देवा वरमददुः स त्वं कुमारमेव वा वृणीथाः ॥ चेच्चेच्छुनक सृज नमस्ते अस्तु सीसरो लपेतापह्वर तत्सत्यम् । यत्ते सरमा माता सीसरः पिता श्यामशबलौ भ्रातरौ । चेच्चेच्छुनक सृज नमस्ते अस्तु सीसरो लपेताह्वरेति ॥२४॥

भावार्थः शिशुलाई बालग्रहले दुःख दिए भने माछा समाउने जालले वा जाल नपाउँदा मजेत्रोले उसलाई ढाकी बाबुले आफ्नो काखमा राखी 'कूर्कुरः..' आदि मन्त्रको जप गर्नू ।

मन्त्रः ॐ कूर्कुरः सुकूर्कुरः कूर्कुरो बालबन्धनः । चेच्चेच्छुनक सृज नमस्ते अस्तु सीसरो लपेतापह्वर तत्सत्यम् । यत्ते देवा वरमददुः स त्वं कुमारमेव वा वृणीथाः ॥ चेच्चेच्छुनक सृज नमस्ते अस्तु सीसरो लपेतापह्वर तत्सत्यम् । यत्ते सरमा माता सीसरः पिता श्यामशबलौ भ्रातरौ । चेच्चेच्छुनक सृज नमस्ते अस्तु सीसरो लपेताह्वर ॥

मन्त्रार्थः यी बालग्रह भयङ्कर मात्र होइनन् की अत्यन्त कर्कश र कठोर पनि छन् । हे जिब्रो फैलाउने भएका बालग्रह हो ! समूहका नाइके शुनक ! हजुरलाई म प्रणाम गर्दछु । हजुर शरीर विनष्ट कर्ता हुनुहुन्छ । हजुर मबाट सन्तुष्ट भई छू-छू गर्दै यस बालकलाई छाडिदिनु होस् । यो कुरा साँचो हो कि देवताले तिमीलाई वरदान दिएका छन् । वरदानको बलले तिमीले यो बालकलाई आक्रान्त पार्नु उचित हुँदैन । हे शुनक ! यो पनि सत्य हो कि देवताकी कुकुरनी सरमाले तिमीलाई जन्माएकी हुन् । यो पनि साँचो हो कि तिम्रा बाबु

देवताका कुकुर सीसर हुन् । म यो पनि जान्दछु कि श्याम र शबल तिम्रा भाइ हुन् । अब तिम्रो कल्याण यसैमा छ कि तिमी यो बालकलाई आफ्नो आक्रमणबाट मुक्त गर ।

**अभिमृशतिं-न नामयति न रुदति न हृष्यति न ग्लायति । यत्र वयं वदामो यत्र चाभिमृशामसीति ॥२५॥**

भावार्थः 'न नामयति...' मन्त्र पढ्दै बाबुले त्यो बालकको सबै अङ्गलाई छुनु पर्दछ ।

मन्त्रः **ॐ न नामयति न रुदति न हृष्यति न ग्लायति । यत्र वयं वदामो यत्र चाभिमृशामसीति ॥**

मन्त्रार्थः यी बालकको जुन अङ्ग म छुँदै मन्त्र जप्दछु, त्यसलाई न त उ घुमाउँदछ, न रुन्छ, न हाँस्दछ न त छटपटाइरहेको नै छ ।

इति षोडशी कण्डिका

✷

जातसंस्कार विधि बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत पहिलो काण्ड, सोह्रौँ कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## सप्तदशी कण्डिका

### नामकरणम्-दशम्यामुत्थाप्य ब्राह्मणान् भोजयित्वा पिता नाम करोति ॥१॥

भावार्थः जन्मेको दश दिन पछि बाबुले बालकलाई सुत्केरी कोठाबाट बाहिर लेराउनु पर्दछ । अनि तीन जना ब्राह्मणरूलाई भोजन गराई बालकको नामाकरण संस्कार गर्नुपर्दछ ।

### द्व्यक्षरं चतुरक्षरं वा घोषवदाद्यन्तरन्तस्थम् ।
### दीर्घाभिनिष्ठानं कृतं कुर्यान्न तद्धितम् ॥२॥

भावार्थः बालकको नाम दुई वा चार अक्षरको हुनुपर्दछ । त्यसको पहिलो अक्षर घोष (ग, घ, ङ, ज, झ, ञ, ड, ढ, ण, द, ध, न, ब, भ, य, र, ल, व) वर्ण बिचमा अन्तःस्थ वर्ण (य, र, ल, व) मध्ये कुनै एक हुनु पर्दछ र अन्तिम वर्ण दीर्घ होस्, कृदन्त होस् (उवा, एर आदि प्रत्यय) तर तद्धितान्त (एरो, एलु, आदि प्रत्यय) नहोस् ।

### अयुजाक्षरमाकारान्तꣳ स्त्रियै तद्धितम् ॥३॥

भावार्थः कन्याको नामाकरणमा बिजोर वर्ण अर्थात तीन, पाँच, सात अक्षर होस्, अन्तिम वर्ण दीर्घ होस् र तद्धितान्त होस् ।



### शर्म ब्राह्मणस्य, वर्म क्षत्रियस्य, गुप्तेति वैश्यस्य ॥४॥

भावार्थः ब्राह्मणको नामका अन्तमा शर्मा, क्षत्रियको नामको अन्तमा वर्मा र वैश्यको नामका अन्तमा गुप्ता प्रयोग गर्नू ।

### बहिर्निष्क्रामणम्-चतुर्थे मासि निष्क्रमणिका ॥५॥

भावार्थः बाबुले आफ्नू पुत्रलाई चौथो महिनामा घरबाट बाहिर निकाल्नू ।

### सूर्यमुदीक्षयति तच्चक्षुरिति ॥६॥

भावार्थः 'तच्चक्षु...' आदि मन्त्र पढ्दै बाबुले आफ्नो छोरालाई सूर्यको दर्शन गराउनू ।

इति सप्तदशी कण्डिका

✷

नामकरण संस्कार-विधि बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत पहिलो काण्ड, सत्रौं कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## अष्टादशी कण्डिका

### प्रोष्येत्य गृहानुपतिष्ठते पूर्ववत्॥१॥

भावार्थः विदेशबाट फर्केर पहिलेझैं घरभित्र छिर्नुपूर्व 'गृहा मा...' आदि तीन मन्त्र पढ्नू ।

मन्त्रहरुः

१. ॐ गृहा मा बिभीत मा वेपध्वमूर्जं बिभ्रत एमसि । ऊर्जं बिभ्रद्वः सुमनाः सुमेधा गृहानैमि मनसा मोदमानः ।

२. ॐ येषामध्येति प्रवसन्येषु सौमनसो बहुः । गृहानुप ह्वयामहे ते नो जानन्तु जानतः ।

३. ॐ उपहूता इह गाव उपहूता अजावयः । अथो अन्नस्य कीलाल उपहूतो गृहेषु नः । क्षेमाय वः शान्त्यै प्रपद्ये शिवꣳ शग्मꣳ शंयोः शंयोः ।

### पुत्रं दृष्ट्वा जपति-अङ्गावङ्गात् सम्भवसि हृदयादधिजायसे । आत्मा वै पुत्रनामाऽसि स जीव शरदः शतम् । इति । ॥२॥

भावार्थः छोरातिर हेर्दै बाबुले 'अङ्गा...' आदि मन्त्र जप गर्नू ।



मन्त्रार्थः हे पुत्र ! तिमी हाम्रा अङ्गअङ्गबाट उत्पन्न भएका हौ । तिमी हाम्रो हृदयभन्दा पनि बढी प्रिय छौ । पुत्ररुपमा वास्तवमा तिमी मेरो आत्मा हौ । तिमी सय वर्षसम्म बाँच ।

### अथास्य मूर्द्धानमवजिघ्रति-प्रजापतेष्ट्वा हिङ्कारेणावजिघ्रामि । सहस्रायुषाऽसौ जीव शरदः शतम् । इति। ॥३॥

भावार्थः मन्त्र पढेपछि बाबुले बालकको शीरलाई ' प्रजापतेष्ट्वा...' आदि मन्त्र पढ्दै सुँघ्नु ।

मन्त्रार्थः हे पुत्र ! ब्रह्माको मायापूर्ण शब्द वा सामवेदका सामले म तिम्रो शीर सुँघ्दछु , यसको प्रभावले तिमी शतायुको बन ।

### गवां त्वा हिङ्कारेणेति च त्रिर्दक्षिणेऽस्य कर्णे जपति-अस्मे प्रयन्धि मघमन्नृजीषिन्निन्द्ररायो विश्ववारस्य भूरेः । अस्मे शतꣳशरदो जीवसेऽधा अस्मे वीराञ्छश्वत इन्द्र शिप्रिन्निति ॥४॥

भावार्थः फेरी दुई पटक मन्त्र नपढी शीर सुँघ्नू । त्यसपछि छोराको दाहिने कानमा 'अस्मे...' आदि मन्त्रको जप गर्नू ।

मन्त्रार्थः गाईको मायालु ध्वनीले म तिमीलाई सुँघ्दछु । अतः अत्यधिक आयुले तिमी सय वर्ष बाँच । हे देवराज इन्द्र ! हजुर सुखद एवं कोमल चित्तका स्वामी हुनुहुन्छ । यो बालकलाई हजुर ऐश्वर्य, धन, तथा विश्वका सर्वश्रेष्ठ वस्तुका साथ सय वर्षको पूर्णायु, पुत्र र पौत्र प्रदान गर्नु होस् ।

**इन्द्रै श्रेष्ठानि द्रविणानि धेहि चित्तिं दक्षस्य सुभगत्वमस्मे । पोष६ंरयीणामरिष्टिं त नूना६ंस्वात्मानं वाचः सुदिन त्वमह्नामिति सव्ये ॥५॥**

भावार्थः यसपछि उसको देब्रे कान नजिक 'इन्द्र श्रेष्ठानि...' आदि मन्त्र जप गर्नु पर्दछ ।

मन्त्रार्थः हे इन्द्र ! यो बालकलाई हजुर उत्तम मङ्गलदायी धनराशि दिनु होस् । यसको चेतना, वुद्धि, ज्ञान र स्वास्थ्य विमल होस् । प्रजापति दक्षकोझैं यो प्रभुत्वशाली होस् । यसलाई धनधान्यको कमी नहोस् । यसको वाणी अती मधुर होस् । यसको हरेक दिन सफलताका सूचक हुन् । यस्तो बरदान यसलाई दिनुहोस् ।



**स्त्रियै तु मूर्द्धानमेवावजिघ्रति तूष्णीम् ॥६॥**

भावार्थः छोराका स्थानमा छोरी भए बाबुले चुपचाप उनको शिर सुँघ्नू । मन्त्रको उच्चारण नगर्नू ।

इति अष्टादशी कण्डिका

सन्तानलाई यात्रापछि घरभित्र पसाउँदा बाबुले गर्नुपर्ने विधि बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत पहिलो काण्ड, अठारौं कण्डिकाको मोहन प्रसाद सापकोटाद्धारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

## एकोनविंशी कण्डिका

### षष्ठे मासेऽन्नप्राशनम् ॥१॥

भावार्थः जन्मबाट छैटौं महिनामा अन्नप्राशन गर्नू ।

### स्थालीपाकꣳश्रपयित्वाऽऽज्यभागाविष्ट्वाऽऽज्याहुती जुहोति-देवीं वाचमजनयन्त देवास्तां विश्वरूपाः पशवो वदन्ति । सा नो मन्द्रेषमूर्जं दुहाना धेनुर्वागस्मानुपसुष्टुतैतु स्वाहेति ॥२॥

भावार्थः विधिपूर्वक खीर पकाएर अग्नि-सोमका लागि आहुति हाली 'देवीं वाचं...' तथा 'वाजो नो...' आदि मन्त्रले घिउको आहुति दिनू ।

मन्त्रार्थः सबभन्दा पहिले ऐश्वर्यमयी तथा प्रदीप्त वाणीलाई देवताले उत्पन्न गरे । त्यसपछि त्यसको उच्चारण विभिन्न प्राणीले गरे । त्यही सुखद एवं गम्भीर वाणीले हामीलाई अन्न, रस तथा शक्ति प्रदान गर्दै, हाम्रो स्तुतिबाट प्रशन्न भई त्यसरी नै दौडेर यहाँ आऊन् जसरी बाछोले बोलाउँदा गाई दौडेर आउने गर्दछ ।



### वाजो नो अद्येति च द्वितीयाम् ॥३॥

भावार्थः यसपछि 'वाजो नो...' आदि मन्त्रले छुट्टै घिउको आहुति दिनू ।

मन्त्रः ॐ व्वाजोनꣳ ॥ व्वाजोनोऽअद्यप्रसुवातिदानंव्वाजोदेवाँ२॥ऽऋतुभिः कल्पयाति ॥
व्वाजोहिमासर्व्ववीरञ्जजानव्विश्वाऽआशाव्वाजपतिर्ज्जयेयम् ॥ स्वाहा । (य.सं.१८।३३)

मन्त्रार्थः हे अन्नका अधिष्ठाता देवता ! आजबाट अन्नदानका दृष्टिले मलाई चिन्नु होस् । उचित समय आउँदा म अन्नले देवतालाई आहुति दिऊँ । अन्नमय ब्रह्मबाटै हाम्रा सबै छोरानातिको जन्म भएको हो । हामी अन्नधनले समृद्ध भई सबै दिशामा विजयी बनौ ।

### स्थालीपाकस्य जुहोति-प्राणेनान्नमशीय स्वाहाऽपानेन गन्धानशीय स्वाहा, चक्षुषा रूपाण्यशीय स्वाहा, श्रोत्रेण यशोऽशीय स्वाहेति ॥४॥

भावार्थः यसपछि 'प्राणेनान्न...' आदि चार मन्त्रले चरुको चार आहुति दिनू ।

## प्राशनान्ते सर्वान् रसान्त्सर्वमन्नमेकत उद्धत्याऽथैनं प्राशयेत् ॥५॥ तूष्णीं ँ हन्तेति वा, हन्तकारं मनुष्या इति श्रुतेः ॥६॥

भावार्थः संस्रवप्राशन पछि गुलियो आदि गरिएका सबै रस, खान हुने सबै एउटा भाँडामा उठाएर बालकलाई चटाउनु पर्दछ । यो चटाउने काम मन्त्र बिना चुपचाप वा केवल 'हन्त' भन्दै गर्नू किनकि श्रुतिले 'हन्तकारं मनुष्याः' भन्दछ ।

## भारद्वाज्यामा ँ सेन वाक्प्रसारकामस्य ॥७॥

भावार्थः बाबु छोरालाई वाचाल बनाउन चाहन्छन् भने भारद्वाज चराको भालेको मासु खुवाउनू ।

## कपिञ्जलमा ँ सेनाऽन्नाद्यकामस्य ॥८॥

भावार्थः बाबु छोरालाई अन्नभक्षण योग्य बनाउन चाहन्छन् भने कपिञ्जल (तित्रो, मयुर, कारण्डव ?) चराको मासु खुवाउनू ।



## मत्स्यैर्जवनकामस्य ॥९॥

भावार्थः बालकमा दौडने शक्ति चाहने हो भने माछा खुवाउनू ।

## कृकषाया आयुष्कामस्य ॥१०॥

भावार्थः- दीर्घायु चाहने हो भने कृकषा (काकाकुल) को मासु खुवाउनू ।

## आटच्या ब्रह्मवर्चसकामस्य ॥११॥

भावार्थः ब्रह्मवर्चस्वी होस् भनी चाहे आटच्या (जलपक्षी विशेष) को मासु खुवाउनू ।

## सर्वैः सर्वकामस्य ॥१२॥

भावार्थः सबै कुरा होस् भनी चाहे माथिका सबै कुरा एकै पटक खुवाउनू ।

**अन्नपर्याय वा ततो ब्राह्मणभोजनमन्नपर्याय वा ततो ब्राह्मणभोजनम् ॥१३॥**

भावार्थः वा सबैको कुराको सट्टामा अन्न रस नै चटाउनू र यसपछि (एक, दश वा इच्छानुसार) ब्राह्मणलाई भोजन गराउनू ।

इति एकोनविंशी कण्डिका

अन्नप्रशान-विधि बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत पहिलो काण्ड, उन्नाइसौं कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

इति श्रीपारस्करविरचिते गृहसूत्रे प्रथमः काण्डः समाप्तः

पारस्करगृह्यसूत्र अन्तर्गत पहिलो काण्डको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

# द्वितीयकाण्डम्
## प्रथमा कण्डिका

### चूडाकरणम्-श्रीः ॥ सांवत्सरिकस्य चुडाकरणम् ॥१॥

भावार्थः एक वर्ष पूरा भएपछि बालकको चूडाकर्म गर्नु पर्दछ ।

### तृतीये वाऽप्रतिहते ॥२॥

भावार्थः अथवा तीन वर्ष पूरा हुनुभन्दा पहिले चूडाकरण संस्कार हुनु पर्दछ ।

### षोडशवर्षस्य केशान्तः ॥३॥

भावार्थः सोह्र वर्षको किशोरको केशान्त संस्कार गर्नु पर्दछ ।

### यथामङ्गलं वा सर्वेषाम् ॥४॥



भावार्थः अथवा आफ्नो कुलपरम्परा अनुसार सबै संस्कार गर्न सकिन्छ ।

### ब्राह्मणान् भोजयित्वा माता कुमारमादायाप्लाव्याहते वाससी हरिधाप्याङ्क आधाय पश्चादग्नेरुपविशति ॥५॥

भावार्थः चूडाकरणका अङ्गमानिने तीन ब्राह्मणलाई पहिले भोजन गराउनू । अनि कुमारलाई आमाले नुहाइ दिएर नयाँ कपडा लगाइ दिनू । फेरी काखमा राखी अग्निको पश्चिमतिर पूर्वफर्की बस्नू ।

### अन्वारब्ध आज्याहुतीर्हुत्वा प्राशनान्ते शीतास्वप्सूष्णा आसिञ्चति उष्णेन वाय उदकेनेह्यदिते केशान् वपेति ॥६॥ केशश्मश्रिति च केशान्ते ॥७॥

भावार्थः ब्रह्मावरण गरी आधारदेखि स्विष्टकृत्सम्मका चौध नित्य आहुति दिई, संस्रव-प्राशन पछि चिसो पानीमा 'उष्णेन' आदि मन्त्र पढ्दै तातो पानी मिसाउनू । केशान्त संस्कारमा मन्त्रका अन्तमा 'केशश्मश्रू वप' यो उच्चारण गर्नू ।

मन्त्रार्थः हे वायुदेवता ! हजुर आउनु होस् र तातो पानी मिसाइएको यो चिसो पानीले बालकको कपाल काट्नुहोस् ।

**अथात्र नवनीतपिण्डं घृतपिण्डं दध्नो वा प्राश्यति ॥८॥**

भावार्थः चिसो पानीमा तातो पानी मिलाए पछि त्यही पानीमा नौनीको डल्लो, घिउको डल्लो र दहीको डल्लो हाल्नू ।

**तत आदाय दक्षिणं गोदानमुन्दति-सवित्रा प्रसूता दैव्या आप उन्दन्तु ते तनूं दीर्घायुत्वाय वर्चस इति ॥९॥**

भावार्थः त्यसपछि त्यो पानीमध्येबाट अलिकति पानी लिई कुमारको शीरको दाहिने भाग 'सवित्रा प्रसूता...' मन्त्र पढ्दै भिजाउनू ।

मन्त्रार्थः हे कुमार ! सूर्यबाट उत्पन्न यो दिव्य जलले तिम्रो दीर्घायु एवं तेजस्वीताका लागि तिम्रो कपाललाई भिजाओस् ।



**त्र्येण्या शलल्या विनीय त्रीणि कुशतरुणान्यन्तर्दधाति 'ओषध' इति ॥१०॥**

भावार्थः तीन ठाउँबाट सेतो दुम्सीका तीन काँडाले कपाललाई दुई भाग लगाई 'ओषधे त्रायस्व स्वधिते मैनं हिंसीः' मन्त्र पढ्दै त्यसमा तीन नयाँ कुश लगाउनू ।

**शिवो नामेति लोहक्षुरमादाय निवर्त्तयामीति प्रवपति । येनावपत् सविता क्षुरेण सोमस्य राज्ञो वरुणस्य विद्वान् । तेन ब्रह्माणो वपतेदमस्यायुष्यञ्जरदष्टिर्यथासदिति ॥११॥ सकेशानि प्रच्छिद्यानडुहे गोमयपिण्डे प्रास्यत्युत्तरतो ध्रियमाणे ॥१२॥**

भावार्थः- 'शिवो नाम...'आदि मन्त्र पढ्दै छुरा हातमा लिनू, फेरी 'निवर्त्तयामी...' आदि मन्त्र पढी केश सँगसँगै कुशलाई काटी अग्निभन्दा उत्तरमा राखिएको गोबरको थुप्रोमा लगी फ्याँकि दिनू ।

मन्त्रः- ॐ शिवोनाम ॥ शिवोनामासिस्वधितिस्तेपितानमस्तेऽअस्तुमामाहिꣳसीः ॥

निवर्त्तयाम्म्यायुषेऽन्नाद्द्यायप्प्रजननायरायस्प्पोषायसुप्प्रजास्त्वायसुवीर्य्याय॥

(य.सं.३।६३) ।

## एवं द्विरपरं तूष्णीम्॥१३॥

भावार्थः- यसै गरी दुई पटक यो काम बिनामन्त्र गर्नू ।

## इतरयोश्चोन्दनादि॥१४॥

भावार्थः- शीरका अन्य भागमा पनि यो काम एक पटक समन्त्र र दुई पटक बिनामन्त्र गरियोस् ।

## अथ पश्चात् त्र्यायुषमिति॥१५॥

भावार्थः- पछिल्तिरका कपाल 'त्र्यायुषम्..' आदि मन्त्र पढ्दै काट्नु पर्दछ ।

## अथोत्तरतो येन भूरिश्चरा दिवं ज्योक्च पश्चाद्धि सूर्यम् । तेन ते वपामि ब्रह्मणा जीवातवे जीवनाय सुश्लोक्याय स्वस्तय इति॥१६॥



भावार्थः 'येन भूरिश्चरा...' आदि मन्त्रले उत्तरतिरका कपाल काट्नु पर्दछ ।

मन्त्रार्थः हे कुमार ! जुन मन्त्र र तपको बलले चरणशील वायु धेरै कालसम्म स्वर्ग र सूर्यलोकमा बही रहन्छ, त्यही मन्त्रले म तिम्रो कपाल काट्दछु । यो कर्म तिम्रो जीवनशक्ति बढाई दीर्घायु बनाउन तथा जीवनमा मङ्गल सञ्चार गर्नका लागि हो ।

## त्रिः क्षुरेण शिरः प्रदक्षिणं परिहरति, समुखं केशान्ते॥१७॥ यत्क्षुरेण मज्जयता सुपेशसा वप्त्वा वावपति केशाञ्छिन्धि शिरो माऽस्यायुः प्रमोषीः॥१८॥ मुखमिति च केशान्ते॥१९॥

भावार्थः तीन पटक शीरको चारैतिर प्रदक्षिणा विधिले 'यत् क्षुरेण...' मन्त्र पढ्दै छुरालाई घुमाउनू । मन्त्रको अन्तमा 'सम्मुख' पदलाई जोड दिइयोस् । यो काम पनि तीन पटक गर्नु पर्दछ । एक पटक समन्त्र र दुई पटक बिना मन्त्र ।

मन्त्रार्थः हे क्षुराधिष्ठित देव ! नाईको हातमा समातिएको यो छुराले तिमी यी कुमारको केशलाई संस्कृत एवं अलङ्कृत गर्दै काट तर हेर, शीरलाई भने नकाट नि ! ।

## ताभिरद्भिः शिरः समुद्य नापिताय क्षुरं प्रयच्छति । अक्षुण्वन् परिवपेति ॥२०॥

भावार्थः त्यही तातो मिसाइएको चिसो पानीले कपाल भिजाई 'अक्षुण्वन्...' मन्त्र पढ्दै नाईलाई छुरा दिनू ।

मन्त्रार्थः हे नाई ! तिमी यो बालकको टाउको काटिनबाट जोगाउँदै बिस्तारै टाउकाका सबै कपाल काट ।

## यथामङ्गलं केशशेषकरणम् ॥२१॥

भावार्थः सबै कपाल काट्ने कि टुपी राख्ने भन्ने सम्बन्धमा पारस्करले कुलपरम्पराअनुसार वा सुविधा अनुसार शीरमा टुपी राख्नू भन्दछन् ।

## अनुगुप्तमेतꣳसकेशं गोमयपिण्डं निधाय गोष्ठे पल्वल उदकान्ते वाऽऽचार्याय वरं ददाति ॥२२॥



भावार्थः छोपिएको कपाल सहितको गोबर गोठ वा पोखरीमा फ्याँक्नू अनि आचार्यलाई दक्षिणा दिनू ।

## गां केशान्ते ॥२३॥

भावार्थः चूडाकरणको अन्तमा गाई दक्षिणा दिइयोस् ।

## संवत्सरं ब्रह्मचर्यमवपनं च केशान्ते द्वादशरात्रꣳषड्रात्रं त्रिरात्रमन्ततः ॥२४॥

भावार्थः केशान्त संस्कार पछि ब्रह्मचर्यमा रही एक वर्षसम्म कपाल नकाट्नू सम्भव नभए बाह्र, छ वा नभए तीन दिनको नियम पालना गर्नू ।

इति प्रथमा कण्डिका

✷

चूडाकरणका बारेमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत दोश्रो काण्ड, पहिलो कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## द्वितीया कण्डिका

### अष्टवर्षं ब्राह्मणमुपनयेद् गर्भाष्टमे वा ॥१॥

भावार्थः जन्मबाट गनी आठौं वर्षमा वा गर्भ बसेको समयदेखि गनी आठौं वर्षमा ब्राह्मण कुमारको उपनयन गर्नुपर्दछ ।

### एकादशवर्षꣳराजन्यम् ॥२॥

भावार्थः क्षत्रियको एघार वर्षमा उपनयन हुनु पर्दछ ।

### द्वादशवर्षं वैश्यम् ॥३॥

भावार्थः वैश्यको बाह्र वर्षमा उपनयन गर्नु पर्दछ ।

### यथामङ्गलं वा सर्वेषाम् ॥४॥



भावार्थः अथवा तीन वटै वर्णको सुविधा वा कुलपरम्परा अनुसार उपनयन संस्कार हुनु पर्दछ ।

### ब्राह्मणान्भोजयेत्तं च पर्युप्तशिरसमलङ्कृतमानयन्ति ॥५॥

भावार्थः तीन ब्राह्मण र त्यो कुमारलाई पनि भोजन गराउनू । बालकको कपाल खौरी उसलाई वस्त्रआभूषणले सिँगारी आचार्यका नगिचै लैजानू ।

### पश्चादग्नेरवस्थाप्य ब्रह्मचर्यमागामिति वाचयति ब्रह्मचार्यसानीति च ॥६॥

भावार्थः अग्निको पश्चिमतिर कुमारलाई उभ्याई आचार्यले कुमारलाई 'ब्रह्मचर्यमागाम्' र 'ब्रह्मचार्यसानि' भन्न लगाउनू ।

### येनेन्द्राय बृहस्पतिर्वासः पर्यदधामृतं तेन त्वा परिदधाम्यायुषे दीर्घायुत्वाय बलाय वर्चस इति ॥७॥

भावार्थः यसपछि 'येनेन्द्राय..' आदि मन्त्र पढी आचार्यले कुमारलाई वस्त्र लगाइ दिनू ।

**इयं दुरुक्तं परिबाधमाना वर्णं पवित्रं म आगात्। प्राणापानाभ्यां बलमादधाना स्वसा देवी सुभगा मेखलेयमिति ॥८॥ युवासुवासाः परिवीत आगात् स उ श्रेयान् भवति जायमानः । तन्धीरासः कवय उन्नयन्ति स्वाध्यो मनसा देवयन्त इति वा ॥९॥ तूष्णीं वा ॥१०॥**

भावार्थः यसपछि आचार्यले कुमारलाई 'इयं दुरुक्तं...' आदि मन्त्र पढ्दै वा मन्त्र नपढी चुपचाप मूँजको कन्धनी बाँधी दिनू ।

मन्त्रार्थः दीदिबहिनीभैँ कल्याणगामिनी, कान्तिदाता र सौभाग्य दायक भएको यो मलाई प्राप्त कन्धनीले मेरो पाप र अपवित्रता नष्ट गरी वर्णलाई शुद्ध गर्दै ममा प्राण र अपानको स्थापना गरी मलाई शक्तिशाली बनाओस् । जुन युवक सभामा सुन्दर वस्त्र लगाउँदछ, उसले उदीयमान पुरुषका बीचमा श्रेय पाउँदछ । धैर्यशाली, सबै कुरा जान्ने र उन्नत चित्त हुने पुरुषले यो बटुकलाई वेदार्थ ज्ञान गराउँदै प्रगतिपथमा अघि बढाउँदछन् ।

**(यज्ञोपवीतं परमं पवित्रं प्रजापतेर्यत्सहजं पुरस्तात् । आयुष्यमग्र्यं प्रतिमुञ्च शुभ्रं यज्ञोपवीतं बलमस्तु तेजः ॥ यज्ञोपवीतमसि यज्ञस्य त्वा यज्ञोपवीतेनोपनह्यामीत्यथाजिनं प्रयच्छति । मित्रस्य चक्षुर्द्धरुणं बलीयस्तेजो यशस्वी स्थविरꣳसमिद्धम् । अनाहनस्यं वसनं जरिष्णुः परीदं वाज्यजिनं दधेऽहमिति) दण्डं प्रयच्छति ॥११॥**



भावार्थः 'यज्ञोपवीतं...' आदि मन्त्र पढ्दै आचार्यले जनै दिनू र कुमारले जनै लगाउनू । त्यसपछि कुमारलाई " मित्रस्य..." आदि मन्त्र पढाउँदै मृगको छाला लगाउन (आजभोली बोक्न) दिनू । त्यसपछि कुमारलाई दण्ड समाउन दिनू ।

मन्त्रार्थः- (क) हे आचार्य ! म यो जनै लगाउँदछु जुन जनैलाई ब्रह्माले सर्वप्रथम उत्पन्न गर्नु भएको थियो । यसैले यो स्वभावतः अती पवित्र र आयुवर्धक छ । म यो जनैलाई तेजश्वी र शक्तिशाली बनाउँदछु । तिमी जनै समान पवित्र बन, म तिमीलाई जनैले बाँद्धछु । (ख) म त्यो मृगचर्मलाई धारण गर्दछु, जो सूर्यकै आँखा हो । यसले मलाई शक्ति, शौर्य र यश दिनेछ । धेरै पुरानो भएर पनि चम्किलो छ । यो मृगचर्मले मलाई अनाज-समृद्ध बनाओस् ।

## तं प्रतिगृह्णाति-यो मे दण्ड परापतद्वैहायसोऽधिभूम्याम् । तमहं पुनरादद आयुषे ब्रह्मणे ब्रह्मवर्चसायेति ॥१२॥

भावार्थः कुमारले 'यो मे दण्ड..' मन्त्र पढ्दै दण्ड समाउनू ।

मन्त्रार्थः हे आचार्य ! जुन दण्ड पृथ्वीबाट उत्पन्न भई आकाशसम्म फैलिएको छ र मलाई प्राप्त भएको छ, त्यसलाई म दीर्घायु, वेदज्ञान एवं ब्रह्मतेजको कामनाले ग्रहण गर्दछु ।

## दीक्षावदेके दीर्घसत्रमुपैतीति वचनात् ॥१३॥

भावार्थः केही आचार्यको मत छ कि सोमयज्ञमाझैं दीक्षाका अवसरमा जसरी मन्त्रोच्चारण गर्दै दण्ड ग्रहण गरिन्छ र त्यसपछि 'उच्छ्रयस्व...' आदि मन्त्र पढी त्यसलाई माथि उठाइन्छ त्यसरी नै यहाँ पनि हुनु पर्दछ । किन कि ब्रह्मचर्यलाई पनि दीर्घसत्र सम्पदासरह बताइएको छ-'दीर्घसत्रं वा एष उपैति यो ब्रह्मचर्यमुपैति' ।

## अथास्याद्भिरञ्जलिनाऽञ्जलिं पूरयति-आपोहिष्ठेति तिसृभिः ॥१४॥



भावार्थः यसपछि 'आपोहिष्ठा...च नः' आदि तीन ऋचा पढी आफ्नो अँजुलीमा भएको जल आचार्यले कुमारको अँजुलीमा हालिदिनू ।

## अथैनꣳसूर्यमुदीक्षयति-तच्चक्षुरिति ॥१५॥

भावार्थः 'तच्चक्षु...'आदि मन्त्र पढ्दै आचार्यले कुमारलाई सूर्य-दर्शन गराउनू ।

## अथाऽस्य दक्षिणाꣳसमधि हृदयमालभते-मम व्रते ते हृदयं दधामीति मम चित्तमनुचित्तं ते अस्तु । मम वाचमेकमना जुषस्व बृहस्पतिष्ट्वा नियुनक्तु मह्यमिति ॥१६॥

भावार्थः यसपछि आचार्यले कुमारको दाहिने काँधतिरबाट आफ्नो दाहिने हात लगी 'मम व्रते ते...' आदि मन्त्र पढ्दै कुमारको हृदयलाई छुनू ।

## अथास्य दक्षिणꣳ हस्तं गृहीत्वाऽऽह-को नामाऽसीति ॥१७॥

भावार्थः आचार्यले कुमारको दाहिने हात आफ्नो हातमा लिई 'तिम्रो नाम के हो ?' भनी सोध्नू ।

**असावहं भो३ इति प्रत्याह ॥१८॥**

भावार्थः यसको उत्तरमा कुमारले आफ्नो नाम बताउँदै 'म फलानो शर्मा हुँ' भन्नू ।

**अथैनमाह-कस्य ब्रह्मचार्यसीति ॥१९॥**

भावार्थः यसपछि आचार्यले कुमारलाई 'तिमि कसका ब्रह्मचारी हौ ?' भनी सोध्नू ।

**भवत इत्युचमान इन्द्रस्य ब्रह्मचार्यस्यग्निराचा-**
**र्यस्तवाहमाचार्यस्तवासाविति ॥२०॥**

भावार्थः कुमारले 'म हजुरको ब्रह्मचारी हुँ' भन्नू । अनि आचार्यले 'तिमी इन्द्रका ब्रह्मचारी हौ, अग्नि तिम्रा (पहिलो) आचार्य हुन् र म तिम्रो (दोश्रो) आचार्य हुँ' भन्नू ।

**अथैनं भूतेभ्यः परिददाति-प्रजापतये त्वा परिददामि, देवाय त्वा सवित्रे**
**परिददाम्यद्भ्यस्त्वौषधीभ्यः परिददामि द्यावापृथिवीभ्यां त्वा परिददामि**
**विश्वेभ्यस्त्वा देवेभ्यः परिददामि, सर्वेभ्यस्त्वा**
**भूतेभ्यः परिददाम्यरिष्ट्या इति ॥२१॥**



भावार्थः यसपछि आचार्यले कुमारलाई 'प्रजापतये त्वा...' आदि मन्त्र पढ्दै प्रजापति आदि देवतालाई रक्षाका खातिर अर्पित गरि दिनू ।

मन्त्रार्थः हे कुमार ! म तिम्रो रक्षाको जिम्मा प्रजापति, सूर्य, जल, औषधि, द्यावापृथिवी तथा अन्य सारा देवतामाथि सुम्पिन्छु ।

इति द्वितीया कण्डिका

✷

व्रतबन्धका बारेमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत दोश्रो काण्ड, दोश्रो कण्डिकाको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## तृतीया कण्डिका

### प्रदक्षिणमग्निं परीत्योपविशति ॥१॥

भावार्थः नयाँ वस्त्र, आभूषण आदि लगाएर अग्निको प्रदक्षिणा गरी त्यसको पश्चिमतिर र आचार्यको उत्तरतिर कुमारले बस्नू ।

### अन्वारब्ध आज्याहुतीर्हुत्वा प्राशनान्तेऽथैनꣳसꣳशास्ति ब्रह्मचार्यस्यपोऽशान कर्म कुरु, मा दिवा सुषुप्था, वाचं यच्छ, समिधमाधेह्यपोऽशानेति ॥२॥

भावार्थः ब्रह्मावरण गरिसकेपछि नित्य हवनका मन्त्रले घिउको चौध हवन गर्नू । संस्रवप्राशन पछि आचार्यले कुमारलाई उपदेश दिनू । वर्णाश्रम अनुसारका कर्म गर, दिनमा नसुत, आफ्नो बोलीमाथि नियन्त्रण राख, अग्निमा होमका लागि समिधा हाल, भोजन अघिपछि जलले आचमन गर, आदि । (कुमारले सबै उपदेशको "हस्, हुन्छ" भनी उत्तर दिनू) ।

### अथाऽस्मै सावित्रीमन्वाहोत्तरतोऽग्नेः प्रत्यङ्मुखमयोपविष्टायोपसन्नाह समीक्षमाणाय समीक्षिताय ॥३॥

भावार्थः उपदेश दिइ सकेपछि होमको अग्निको उत्तरतिर आचार्यको गोडा समाती बसिरहेको अवस्थामा आचार्यलाई हेर्दै र उनिबाट हेरिँदै कुमारलाई सावित्री मन्त्र सिकाइयोस् ।

### दक्षिणतस्तिष्ठत आसीनाय वैके ॥४॥

भावार्थः केही आचार्यले दाहिनेतिर बसेको वा उभिएको कुमारलाई सावित्री मन्त्र सिकाउनू पनि भनेका छन् ।

### पच्छोऽर्द्धर्चशः सर्वां च तृतीयेन सहानुवर्तयन् ॥५॥

भावार्थः आचार्यले पहिले सावित्री मन्त्रको एक एक पाद आफूले भनी शिष्यबाट भनाउन लगाउनू । अनि आधा आधा ऋचा र तेश्रो पटक सम्पूर्ण सावित्री मन्त्र आचार्यसँगै शिष्यले दोहोऱ्याउनू ।

### संवत्सरे षण्मास्ये चतुर्विंꣳशत्यहे द्वादशाहे षडहे त्र्यहे वा ॥६॥

भावार्थः शिष्यको योग्यता अनुसार वर्षभरी वा छैटौं महिनामा वा चौबीसौं, बाह्रौं, छैटौं वा तेश्रो दिन सावित्री मन्त्र सिकाउन सकिन्छ ।

## सद्यस्त्वेव गायत्रीं ब्राह्मणायाऽनुब्रूयादाग्नेयो वै ब्राह्मण इति श्रुतेः ॥७॥

भावार्थः ब्राह्मण कुमारलाई उपनयन पछि तत्काल आचार्यले गायत्री छन्दको सावित्री मन्त्र सिकाउनू, किन कि वेदको वचन छ कि 'आग्नेयो वै ब्राह्मणः' अर्थात ब्राह्मणमा अग्निदेवको अंश रहन्छ ।

## त्रिष्टुभꣳराजन्यस्य ॥८॥

भावार्थः क्षत्रिय कुमारलाई त्रिष्टुप् छन्दको सावित्री मन्त्र सिकाउनू ।

## जगतीं वैश्यस्य ॥९॥

भावार्थः वैश्य कुमारलाई जगती छन्दको सावित्री मन्त्र सिकाउनू ।



## सर्वेषां वा गायत्रीम् ॥१०॥

भावार्थः अथवा सबैलाई गायत्री छन्दको सावित्री मन्त्र सिकाउन पनि सकिन्छ ।

इति तृतीया कण्डिका

✷

व्रतबन्धमा गरिने मन्त्रदानका बारेमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत दोश्रो काण्ड, तेश्रो कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## चतुर्थी कण्डिका

### अत्र समिदाधानम् ॥१॥

भावार्थः (सावित्री ग्रहण गरि सकेपछि प्रतिदिन ब्रह्मचारीले समिधादान गर्नु पर्दछ, अतः) यहाँ होमाग्निमा समिधा हाल्ने विधि बताउन लागिएको छ ।

**पाणिनाऽग्निं परिसमूहति-अग्ने सुश्रवः सुश्रवसं मा कुरु । यथा त्वमग्ने सुश्रवः सुश्रवा असि एवं माꣳसुश्रवः सौश्रवसं कुरु । यथा त्वमग्ने देवानां यज्ञस्य निधिपा असि, एवमहं मनुष्याणां वेदस्य निधिपो भूयासमिति ॥२॥**

भावार्थः 'अग्ने सुश्रुव...'आदि मन्त्र पढी ब्रह्मचारी बटुले दाहिने हातले समिधा हाली यज्ञको अग्निलाई बाल्नू ।

मन्त्रार्थः हे अग्नि ! हजुर यशस्वी हुनुहुन्छ, मलाई पनि आफूजस्तै बनाउनु होस् । जे गुणले गर्दा हजुर यति प्रख्यात हुनुहुन्छ त्यो गुण ममा (पनि) सारी दिनुहोस् । मेरा आचार्यलाई पनि मसँगै यशस्वी बनाई दिनुहोस् । हे अग्नि ! जसरी हजुर इन्द्र आदि देवताको खजानाका रक्षक हुनुहुन्छ, त्यसरी नै म पनि मानिस मात्रको खजाना वेदलाई रक्षा गर्ने बन्न सकूँ ।

**प्रदक्षिणमग्निं पर्युक्ष्योत्तिष्ठन्त्समिधमादधाति-अग्नये समिधमाहार्षं बृहते जातवेदसे, यथा त्वमग्ने समिधा समिध्यस एवमहमायुषा, मेधया, वर्चसा, प्रजया, पशुभिर्ब्रह्मवर्चसेन समिनधे, जीवपुत्रो ममाऽऽचार्यो मेधाव्यहमसान्यनिराकरिष्णुर्यशस्वी तेजस्वी ब्रह्मवर्चस्व्यन्नादो भूयासꣳस्वाहेति ॥३॥ एवं द्वितीया तथा तृतीयाम् ॥४॥**

भावार्थः यज्ञाग्निको चारैतिर प्रदक्षिणाक्रमले जल छर्की उभिएर समिधाले 'अग्नये...' आदि मन्त्र पढी होम गर्नू । यसरी दोश्रो र तेश्रो समिधा पनि हाल्नू ।

मन्त्रार्थः हे देवगण ! म यी समिधा धर्मोत्पादक जातवेदा र परिपूर्णा अग्निका लागि लेराउँदछु । हे अग्नि ! यी समिधा मार्फत जसरी हजुर प्रज्वलित हुनुहुन्छ, ठीक त्यसरी नै म पनि आयु, सम्झना शक्ति, प्रभाव, सन्तान, पशुधन र ब्रह्मतेजले प्रज्वलित होऊँ । मेरो पुत्रको वंश

अनवरत चलोस् । हजुरका कृपाले म स्मरणशील, वेदज्ञ, यशश्वी, तेजश्वी, ब्रह्मतेजले युक्त र अन्न खान योग्य बनू ।

## एषा त इति वा समुच्चयो वा ॥५॥

भावार्थः अथवा 'एषा ते अग्ने...सम्माज्र्मि' आदि मन्त्र पढी अग्निमा समिधा हाल्नू वा दुवै मन्त्र पढी हाल्नू ।( य.सं.२।१४)

## पूर्ववत् परिसमूहनपर्युषणे ॥६॥

भावार्थः पहिलेभैँ अग्निको परिसमूहन तथा पर्युक्षण कर्म गर्नू ।

## पाणी प्रतप्य मुखं विमृष्टे-तनूपा अग्नेऽसि तन्वं मे पाहि । आयुर्दा अग्नेऽस्यायुर्मे देहि । वर्चोदा अग्नेऽसि वर्चो मे देहि । अग्ने यन्मे तन्वा ऊनं तन्म आपृण ॥७॥ मेधां मे देवः सविता आदधातु मेधां मे देवी सरस्वती आदधातु मेधामश्विनौ, देवावाधत्तां पुष्करस्रजाविति ॥८॥

भावार्थः दुवै हातलाई आगोमा तपाएर ब्रह्मचारीले 'तनूपा...जाविति' आदि मन्त्रले मुख धुनू ।

मन्त्रार्थः (क) हे अग्निदेव ! हजुर देहरक्षक हुनुहुन्छ, मेरो शरीरलाई पनि सधैँ स्वस्थ एवं निरोगी राख्नु होस् । हजुर आयुवर्द्धक हुनु हुन्छ, मलाई दीर्घायु बनाउनु होस् । हजुर वर्चस्वी हुनुहुन्छ, मलाई पनि वर्चस्वी बनाउनु होस् ।मेरा सबै कमीकमजोरीहरुलाई हजुरले हटाइ दिनुहोस् । (ख) हे सविता देवता !, हे दीप्तिमयी देवी सरस्वती !, हे नीलकमलको माला लगाउने भएका अश्विनीकुमार ! मलाई पनि मेधावी बनाउनु होस् ।

## (अङ्गान्यालभ्य जपत्यङ्गानि च म आप्यायन्तां वाक् प्राणश्चक्षुः श्रोत्रं यशो बलमिति त्र्यायुषाणि करोति भस्मना ललाटे ग्रीवायां दक्षिणेऽंसे हृदि च त्रायुषमिति प्रतिमन्त्रम् ।) ॥९॥

भावार्थः ('अङ्गानि च' आदि मन्त्र पढ्दै अङ्गस्पर्श गर्नु पर्दछ । 'त्र्यायुषम्' आदि चार मन्त्र उच्चारण गर्दै साहिँली औंलाले खरानी लिई निधार, दाहिने काँध, छाती तथा कण्ठमा तिलक लगाउनु । (पारस्करले चन्दन लगाउने विधान नबताएका भएपनि परम्परा र शिष्टाचारका लागि यसो गर्नुपर्दछ ) ।

इति चतुर्थी कण्डिका

✷

व्रतबन्धमा गरिने होमका बारेमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत दोश्रो काण्ड, चौथो कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## पञ्चमी कण्डिका

### अत्र भिक्षाचर्यचरणम् ॥१॥

भावार्थः समिधादान पछि भिक्षाको विधि बताइन्छ ।

### भवत्पूर्वां ब्राह्मणो भिक्षेत ॥२॥

भावार्थः ब्राह्मणले 'भवत्' शुरुमा प्रयोग गर्नू (भवति भिक्षां देहि) ।

### भवन्मध्या ँ राजन्यः ॥३॥

भावार्थः क्षत्रियले 'भवत् शब्द वाक्यको बीचमा प्रयोग गर्नू (भिक्षां भवति देहि) ।

### भवदन्त्यां वैश्यः ॥४॥



भावार्थः वैश्यले भिक्षा माग्दा 'भवत्' शब्द वाक्यको अन्तमा प्रयोग गर्नू (भिक्षां देहि भवति ) ।

### तिस्रोऽप्रत्याख्यायिन्यः ॥५॥ षड्द्वादशाऽपरिमिता वा ॥६॥

भावार्थः यस्ता तीन वटी स्त्रीसँग भिक्षा माग्नू, जसले उसलाई नकार्न नसकुन् अथवा छ, बाह्र वा असंख्य स्त्रीसँग भिक्षा माग्नू ।

### मातरं प्रथमामेके ॥७॥

भावार्थः केही आचार्यले कुमारले पहिले आमासँग भिक्षा माग्ने कुरा पनि बताएका छन् ।

### आचार्याय भैक्षं निवेदयित्वा वाग्यतोऽहःशेषं तिष्ठेदित्येके ॥८॥

भावार्थः केही आचार्यले भिक्षामा प्राप्त द्रव्य कुमारले आफ्नू आचार्यलाई समर्पित गर्नु र नसुती वा बसेरै दिनभर उनका सामु उभिइ रहनु भनेका छन् ।

### अहिँसन्नरण्यात् समिध आहृत्य तस्मिन्नग्नौ पूर्ववदाधाय वाचं विसृजते ॥९॥

भावार्थः कुनै रुखलाई नोक्सान नपुऱ्याई आफैं खसेका दाउरा बनबाट लेराई यज्ञाग्निमा पहिलेभैं हाल्नू र त्यसपछि मौनव्रत त्याग्नू ।

## अधः शाय्यक्षारालवणाशी स्यात् ॥१०॥ दण्डधारणमग्निपरिचरणं गुरुशुश्रूषा भिक्षाचर्या ॥११॥

भावार्थः जमिनमा सुत्नू; नुर र क्षारयुक्त भोजन नगर्नू; दण्ड, जनै, कन्धनी, मृगचर्म सधैं धारण गर्नू एवं अग्नि-परिचर्या, गुरु-सेवा र भिक्षाटन दिनहुँ गर्नू ।

## मधुमाꣳसमज्जनोपर्यासनस्त्रीगमनानृतादत्तादानानि वर्जयेत् ॥१२॥

भावार्थः मह, मासु, नदीमा स्नान, खाटको सुताइ, महिलासँगको आवतजावत, भूट बोलाइ र पराया धन-ग्रहण-यि कार्य निश्चितरुपमा छोड्नू ।

## अष्टाचत्वारिꣳशद्वर्षाणि वेदब्रह्मचर्यं चरेत् ॥१३॥

भावार्थः अठचालीस वर्षसम्म ब्रह्मचर्यको पालना गर्दै वेदको अध्ययन गर्नु पर्दछ ।

## द्वादश द्वादश वा प्रतिवेदम् ॥१४॥ यावद्ग्रहणं वा ॥१५॥

भावार्थः अथवा बाह्र वर्षसम्म वा पढ्न चाहेका वर्षसम्म ब्रह्मचर्यको पालना गर्नु पर्दछ ।

## वासाꣳसि शाणक्षौमाविकानि ॥१६॥

भावार्थः ब्राह्मण बटुकले सनपाटको, क्षत्रियले रेशमी र वैश्यले ऊनी कपडा वा भेडाको छाला धारण गर्नू ।

## ऐणेयमजिनमुत्तरीयं ब्राह्मणस्य ॥१७॥

भावार्थः ब्राह्मण कुमारले बाऱ्हसिंङ्गेको (भाले हरिण) को छाला शरीरमा धारण गर्नू ।

## रौरवꣳराजन्यस्य ॥१८॥

भावार्थः रुरु मृगको छाला क्षत्रियले धारण गर्नू ।

## आजं गव्यं वा वैश्यस्य ॥१९॥

भावार्थः बोका वा साँढेको छाला वैश्यले धारण गर्नू ।

## सर्वेषां वा गव्यमसति प्रधानत्वात् ॥२०॥

भावार्थः अथवा सबैले साँढेको छाला धारण गर्नू किन कि यो सुलभ हुन्छ ।

## मौञ्जी रशना ब्राह्मणस्य ॥२१॥

भावार्थः ब्राह्मणले मुजले बनेको कन्धनी प्रयोग गर्नू ।

## धनुर्ज्या राजन्यस्य ॥२२॥

भावार्थः क्षत्रियले धनुको डोरीको कन्धनी प्रयोग गर्नू ।



## मौर्वी वैश्यस्य ॥२३॥

भावार्थः वैश्यले मौर्वी (एक थरी घाँस) को कन्धनी प्रयोग गर्नू ।

## मुञ्जाऽभावे कुशाऽश्मन्तकबल्वजानाम् ॥२४॥

भावार्थः मुज नपाइए ब्राह्मणले कुशको, क्षत्रियले अश्मन्तकको (मुजजस्तै घाँस) र वैश्यले बाबियोको कन्धनी प्रयोग गर्नू ।

## पालाशो ब्राह्मणस्य दण्डः ॥२५॥

भावार्थः ब्राह्मणको पलाशको दण्ड हुन्छ ।

## बैल्वो राजन्यस्य ॥२६॥

भावार्थः क्षत्रियको बेलको दण्ड हुन्छ ।

**औदुम्बरो वैश्यस्य ॥२७॥**

भावार्थः वैश्यको डुम्रीको दण्ड हुन्छ ।

**(केशसम्मितो ब्राह्मणस्य, ललाटसम्मितः क्षत्रियस्य, घ्राणसम्मितो वैश्यस्य ।) सर्वे वा सर्वेषाम् ॥२८॥**

भावार्थः (ब्राह्मणको केशसम्म, क्षत्रियको निधारसम्म र वैश्यको दण्ड नाकसम्म लामो हुनु पर्दछ ।) अथवा सबै किसिमका दण्ड सबैको प्रयोगमा आउन सक्दछ ।

**आचार्येणाहूत उत्थाय प्रतिश्रृणुयात् ॥२९॥**

भावार्थः आचार्यले बोलाउँदा कुमारले उठेर उत्तर दिनू ।



**शयानं चेदासीन आसीनं चेत्तिष्ठँस्तिष्ठन्तं चेदभिक्रामन्नभिक्रामन्तं चेदभिधावन् ॥३०॥**

भावार्थः सुतेको भए बसेर, बसेको भए उठेर र उभिएको भए दौडेर जवाफ दिनू ।

**स एवं वर्तमानोऽमुत्राद्य वसत्यमुत्राद्य वसतीति तस्य स्नातकस्य कीर्तिर्भवति ॥३१॥**

भावार्थः बताइएको आचरण गर्ने ब्रह्मचारी पृथ्वीमै रहे पनि स्वर्गमा हुन्छ । यस्ता ब्रह्मचारीले आफ्नो ब्रह्मचर्य व्रत पूरा गरी संसारमा आफ्नो कीर्ति स्थापित गर्दछन् ।

**त्रयः स्नातका भवन्ति-विद्यास्नातको व्रतस्नातको विद्याव्रतस्नातक इति ॥३२॥**

भावार्थः स्नातक तीन थरी हुन्छन्-(१) विद्यास्नातक (२) व्रतस्नातक र (३) विद्याव्रतस्नातक ।

**समाप्य वेदमसमाप्य व्रतं यः समावर्त्तते स विद्यास्नातकः ॥३३॥**

भावार्थः जुन कुमार वेदको अध्ययन त गर्दछ तर व्रतको पूर्णरुपमा पालना गर्न पाउँदैन त्यो विद्यास्नातक हो ।

**समाप्य व्रतमसमाप्य वेदं यः समावर्तते स व्रतस्नातकः ॥३४॥**

भावार्थः जुन स्नातकले व्रत-पालना गर्दागर्दै पनि वेदको अन्त गर्न पाउँदैन उ व्रतस्नातक हो ।

**उभयꣳसमाप्य यः समावर्तते स विद्याव्रतस्नातक इति ॥३५॥**

भावार्थः जुन ब्रह्मचारीले निष्ठापूर्वक वेदको अध्ययन गर्दै व्रतको पनि पूर्ण पालना गर्दछ र सफल हुन्छ उ विद्याव्रतस्नातक भनी चिनिन्छ ।

**आषोडशाद्वर्षाद् ब्राह्मणस्यानतीतः कालो भवति ॥३६॥ आद्वाविꣳशाद् राजन्यस्य ॥३७॥ आचतुर्विꣳशाद् वैश्यस्य ॥३८॥**

भावार्थः ब्राह्मण बालकको उपनयन संस्कारको अवधि सोह्र वर्षसम्मको हो । क्षत्रियको बाईस वर्षसम्म र वैश्यको अन्तिम अवधि चौबीस वर्षको हो ।



**अत ऊर्द्ध्वं पतितसावित्रीका भवन्ति ॥३९॥**

भावार्थः यो अवधि भन्दा पछि ती पतितसावित्री हुन्छन् ।

**नैनानुपनयेयुर्नाध्यापयेयुर्न याजयेयुर्न चैभिर्व्यवहरेयुः ॥४०॥**

भावार्थः यस्ता पतितसावित्रीलाई कुनै आचार्यले पनि उपनयन-संस्कार नगराउनू, यिनलाई वेदादि नपढाउनू, यिनबाट यज्ञादि नगराउनू र यिनका साथ कुनै किसिमको व्यवहार नगर्नू ।

**कालातिक्रमे नियतवत् ॥४१॥**

भावार्थः गर्भाधानदेखि उपनयनसम्मका सबै संस्कारको समय निश्चित छ । कुनै कारणले यो नाघिए (कात्यायन) 'श्रौतसूत्र' मा बताइएको विधिले प्रायश्चित गर्नू ।

**त्रिपुरुषं पतितसावित्रीकाणामपत्ये संस्कारो नाध्यापनं च ॥४२॥**

भावार्थः तीन पुस्तासम्म सावित्रीको पतन हुने, तोकिएको समयमा उपदेश नहुने व्यक्तिको कुनै संस्कार हुन्न न त वेदादिको अध्यापन नै हुन्छ ।

**तेषा ँ संस्कारेप्सुर्व्रात्यस्तोमेनेष्ट्वा काममधीयीरन्**
**व्यवहार्या भवन्तीति वचनात्॥४३॥**

भावार्थः यदि तिमध्ये कसैले प्रायश्चित गर्न चाहन्छ भने उसले 'व्रातस्तोम' यज्ञ गरी शुद्ध हुन सक्दछ । उसका सबै संस्कार फेरी हुनेछन् । त्यसपछि वेदाध्ययनको पनि अधिकार हुनेछ । उसँग व्यवहार पनि गर्न सकिनेछ ।

इति पञ्चमी कण्डिका

✷

व्रतबन्ध गरिएका वटुकले पालना गर्नुपर्ने विविध नियमका बारेमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत दोश्रो काण्ड, पाँचौं कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## षष्ठी कण्डिका

### वेदꣳ समाप्य स्नायात् ॥१॥

भावार्थः वेदहरुको पद तथा अर्थ विधिवत् अध्ययन सकेर स्नान गर्नू ।

### ब्रह्मचर्यं वाऽष्टाचत्वारिꣳशकम् ॥२॥

भावार्थः अथवा अठचालीस वर्षसम्म ब्रह्मचर्यव्रतको पालना गर्नू ।

### द्वादशकेऽप्येके ॥३॥ गुरुणाऽनुज्ञातः ॥४॥

भावार्थः केही आचार्यले भने बाह्र वर्षपछि व्रत समाप्त गरी स्नान गराउने निर्णय दिएका छन् । अथवा गुरुको आज्ञा लिएर जहिले पनि स्नान गर्न सकिनेछ ।

### विधिर्विधेयस्तर्कश्च वेदः ॥५॥



भावार्थः विधि, मन्त्र तथा तर्क सहित वेद अध्ययन गर्नु पर्दछ ।

### षडङ्गमेके ॥६॥

भावार्थः केही आचार्यले छ अङ्ग सहित वेद अध्ययन गरी स्नान गर्नुपर्ने बताएका छन् ।

### न कल्पमात्रे ॥७॥

भावार्थः वेदको मन्त्र ब्राह्मण भाग मात्र अध्ययन गरेर स्नान नगर्नू ।

### कामं तु याज्ञिकस्य ॥८॥

भावार्थः अथवा यज्ञविद्याको मात्र अध्ययन गरेर स्वेच्छाले स्नान गर्न सकिन्छ ।

### उपसङ्गृह्य गुरुꣳसमिधोऽभ्याधाय परिश्रितस्योत्तरतः कुशेषु प्रागग्रेषु पुरस्तात् स्थित्वाऽष्टानामुदकुम्भानाम् ॥९॥

भावार्थः गुरुका चरणमा प्रणाम गरी यज्ञाग्निमा समिधा हाली चारैतिर बारिएको अग्निको उत्तरमा राखिएको जलले भरिएका आठ कलशभन्दा पूर्वतिर बिछ्याइएको कुशमाथि उभिएर ब्रह्मचारीले 'ये अप्स्वन्तरग्नयः...' आदि मन्त्र पढ्दै पहिलो कलशबाट जल लिई 'तेन मामभिषिञ्चामि...' आदि मन्त्र पढी आफूलाई सेचन गर्नू ।

**ये अप्स्वन्तरग्नयः प्रविष्टा गोह्य उपगोह्यो मयूखो मनोहास्खलो विरुजस्तनूदूषुरिन्द्रियहा तान् विजहामि यो रोचनस्तमिह गृह्णामि इत्येकस्मादपो गृहीत्वा ॥१०॥**

भावार्थः यो कलश-जलमा गोह्य, उपगोह्य आदि गरिएका जुन दूषित आठ अग्नि छन् तिनलाई त्याग्दछु र जुन प्रिय अग्नि छ त्यसलाई ग्रहण गर्दछु ।

**तेनाभिषिञ्चते-तेन मामभिषिञ्चामि श्रियै यशसे ब्रह्मणे ब्रह्मवर्चसायेति ॥११॥**

भावार्थः लक्ष्मी, कीर्ति, वेदज्ञान तथा ब्रह्मतेजको कामना गरी म यो कलशको जलले अभिषेक गर्दछु ।

**येन श्रियमकृणुतां येनावमृशताॐ सुराम् । येनाक्ष्यावभ्यषिञ्चतां यद्वां तदश्विना यश इति ॥१२॥ आपोहिष्ठेति च प्रत्यृचम् ॥१३॥ त्रिभिस्तूष्णीभितरैः ॥१४॥**

भावार्थः 'येन श्रियम्' मन्त्रले दोश्रो, 'आपोहिष्ठा..'ले तेश्रो, 'यो वः शिवतमः...' मन्त्रले चौथो तथा 'तस्मा अरङ्ग...' मन्त्रले पाँचौं घडाको जलले स्नान गरी बाँकी तीन घडाको जलले मन्त्र नपढी चुपचाप स्नान गर्नू ।

मन्त्रः **येन श्रियमकृणुतां येनावमृशताॐ सुराम् ।**
**येनाक्ष्यावभ्यषिञ्चतां यद्वां तदश्विना यश इति ॥**

मन्त्रार्थः हे अश्विनीकुमार ! हजुरले जुन जलले अभिषेक गरी देवतालाई श्रीसम्पन्न गर्नु भो, जुन अभिषेकले उपमन्युको नेत्ररोग हटाइ दिनु भो एवं जसको उपभोग गरेर हजुर यशस्वी बन्नु भएको छ, तिनै कित्तीका कामना गर्दै म पनि यो जजले स्नान गर्दछु ।

**उदुत्तममिति मेखलान्मुमुच्य दण्डं निधाय वासोऽन्यत् परिधायादित्यमुपतिष्ठते ॥१५॥ उद्यन्भ्राजभृष्णुरिन्द्रो मरुद्भि-रस्थात्प्रातर्यावभिरस्थाद्दशसनिरसिदशसनिं मा कुर्वाविदन्मागमय ।**

**उद्यन्भ्राजभृष्णुरिन्द्रो मरुद्भिरस्थाद्दिवा यावभिरस्थाच्छतसनिरसि शतसनिं मा कुर्वाविदन्मागमय । उद्यन्भ्राजभृष्णुरिन्द्रो मरुद्भिरस्थात्सायं यावभिरस्थात्सहस्रसनिरसि सहस्रसनिं मा कुर्वाविदन्मा गमयेति ॥१६॥**

भावार्थः 'उदुत्तम्...' आदि मन्त्र पढ्दै कन्धनी र दण्ड राख्नु र नयाँ वस्त्र लगाई 'उद्यन्भ्राज...' आदि मन्त्रले सूर्यको प्रार्थना गर्नू ।

मन्त्रार्थः हे प्रदीप्त सूर्यदेव ! हजुर आफ्नो तेजले अरु सबै तेजलाई अभिभूत गर्ने हुनुहुन्छ । हजुर शुभ र अशुभका ज्ञाता हुनुहुन्छ । हजुर प्रातः, मध्यान्ह र सन्ध्यामा आफ्ना उपासकहरुलाई दशसंख्यक दान दिनुहुन्छ । द्रुतगामी मरुतहरुका बीच जसरी इन्द्र रहन्छन्, त्यसरी नै हजुर आफ्ना उपासकहरुका बीचमा रहनु हुन्छ । म पनि हजुरको एक उपासक हुँ, त्यसैले ममा पनि हजूर दश, सय र हजार गुना दान दिने क्षमता भरि दिनुहोस् ।

**दधि तिलान्वा प्राश्य जटालोमनखानि सꣳहृत्यौदुम्बरेण दन्तान्धावेत ।अन्नाद्याय व्यूहध्वꣳ सोमो राजाऽयमागमत् । स मे मुखं प्रमाक्ष्यते यशसा च भगेन चेति ॥१७॥**



भावार्थः यसपछि दही वा तील खानु, जटा-कपाल र नङ कटाउनु र 'अन्नाद्याय...' आदि मन्त्र पढ्दै डुम्रीको दतिवनले दाँत सफा गर्नू ।

मन्त्रार्थः हे दाँत ! आत्मशुद्धिका लागि अन्न खान तिमि पंक्तिवद्ध होउ, किनकी यो दन्तधावनको दाउराको रुपमा सारा वनस्पतिका अधिष्ठाता राजा सोम स्वयं उपस्थित छन् । तिनले मेरो मुखलाई सत्कीर्ति तथा छ प्रकारका ऐश्वर्य प्रदान गरी त्यसलाई शुद्ध पारि राखेका छन् ।

**उत्साद्य पुनः स्नात्वाऽनुलेपनं नासिकयोर्मुखस्य चोपगृह्णीते-प्राणापानौ मे तर्पय, चक्षुर्मे तर्पय, क्षोत्रं मे तर्पयेति ॥१८॥**

भावार्थः मयल माड्ने साधनले मयल निकाली फेरी नुहाएर 'प्राणापानौ...' आदि मन्त्र पढ्दै नाक र मुखको नजिक चन्दन लगाउनू ।

मन्त्रार्थः हे उपलेपनाधिष्ठित देवता ! हजुर मेरो प्राण, अपान, आँखा तथा कानलाई प्रसन्न पार्नु होस् ।

## पितरः शुन्धध्वमिति पाण्योरवनेजनं दक्षिणानिषिच्यानुलिप्य जपेत्-सुचक्षा अहमक्षीभ्यां भूयासꣳ सुवर्चामुखेन सुश्रुत्कर्णाभ्यां भूयासमिति ॥१९॥

भावार्थः 'पितरः शुन्धध्वं...' आदि मन्त्र पढी हातमा लिएको जललाई दक्षिणतिर फ्याक्नु पर्दछ । फेरी शरीरमा चन्दन लगाई 'सुचक्षसा...' आदि मन्त्र जप्नू ।

मन्त्रः **सुचक्षा अहमक्षीभ्यां भूयासꣳ सुवर्चामुखेन सुश्रुत्कर्णाभ्यां भूयासम् ॥**

मन्त्रार्थः हे सूर्यदेव ! म आँखा राम्ररी देख्ने, मुखले वर्चस्वी र कानले राम्ररी सुन्ने बनूँ ।

## अहतं वासो धौतं वाऽमौत्रेणाच्छादयीतपरिधास्यै यशोधास्यै दीर्घायुत्वाय जरदष्टिरस्मि । शतं च जीवामि शरदः पुरूचीरायस्पोषमभिसंव्ययिष्य इति ॥२०॥

भावार्थः नयाँ धोती वा धोइएको तर धोबीको घरमा नधोइएको धोती 'परिधास्यै...' आदि मन्त्र पढ्दै लगाउनू ।



मन्त्रः **परिधास्यै यशोधास्यै दीर्घायुत्वाय जरदष्टिरस्मि । शतं च जीवामि शरदः पुरूचीरायस्पोषमभिसंव्ययिष्य ॥**

मन्त्रार्थः हे वस्त्राधिष्ठित देवता ! कीर्ति एवं लामो आयुका लागि म यो वस्त्र धारण गर्दछु । धन तथा ऐश्वर्य दिने यो वस्त्र लगाएका कारणले मैले सय वर्षको आयु पाऊँ ।

## अथोत्तरीयम्-यशसा मा द्यावापृथिवी यशसेन्द्राबृहस्पती । यशो भगश्च मा विन्दद्यशो मा प्रतिपद्यतामिति ॥२१॥

भावार्थः 'यशसा मा...' आदि मन्त्र पढी शरीरमा ओढ्ने ओड्नू ।

मन्त्रार्थः हे वस्त्राधिष्ठित देवता ! यशस्वी द्यावा पृथिवी, इन्द्र तथा बृहस्पति मेरा नजिक आउन्, यि यशोभिमानी भगाधिष्ठाता देवगण मेरा समिप आई मलाई पनि यशस्वी बनाउन् ।

## एकं चेत् पूर्वस्योत्तरवर्गेण प्रच्छादयीत ॥२२॥

भावार्थः यदि धोती सँगै ओड्ने छैन भने धोतीको आधा भागलाई ओड्ने बनाउनू ।

**सुमनसः प्रतिगृह्णाति-या आहरज्जमदग्निः श्रद्धायै मेधायै कामायेन्द्रियाय । ता अहं प्रतिगृह्णामि यशसा च भगेन च इति ॥२३॥**

भावार्थः 'या आहरत्...' आदि मन्त्र पढी फूलको माला लगाउनु पर्दछ ।

मन्त्रार्थः जुन फूलहरुलाई प्रजापति जमदग्निले श्रद्धा, बुद्धि, कामना तथा शारीरिक क्रियाहरु पूर्तिका लागि लगाउनु भएको थियो यश तथा ऐश्वर्य पाउने इच्छाले म पनि तिनलाई उपर्युक्त गुणको चाहनाले ग्रहण गर्न गइरहेको छु ।

**अथावबध्नीते-यद्यशोऽप्सरसामिन्द्रश्चकार विपुलं पृथु । तेन सङ्ग्रथिताः सुमनस आबध्नामि यशो मयीति ॥२४॥**

भावार्थः 'यद्यशो...' इत्यादि मन्त्र पढी त्यो फूलमाला शिरमा लगाउनू ।

मन्त्रार्थः इन्द्रले जुन फूललाई उनेर स्वर्गकी अप्सरा उर्वशीलाई लोकप्रिय बनाएका थिए, त्यसलाई म पनि आफ्नो शीरमा लगाइ रहेको छु । मेरो विपुल-यश सुस्थिर होस् ।

**उष्णीषेण शिरो वेष्टयते-युवा सुवासा इति ॥२५॥**

भावार्थः 'युवासुवासा...' इत्यादि मन्त्र पढी शिरमा पगडी बाँध्नू ।

**अलङ्करणमसि भूयोऽलङ्करणं भूयादिति कर्णवेष्टकौ ॥२६॥**

भावार्थः 'अलंकरणम्...' आदि मन्त्र पढी कानमा कुण्डल लगाउनू ।

**'वृत्रस्ये'त्यङ्क्तेऽक्षिणी ॥२७॥**

भावार्थः 'वृत्रस्य...' आदि मन्त्र पढी आँखामा गाजल लगाउनू ।

मन्त्रः वृत्रस्य कनीनिकाऽसि चक्षुर्दा असि चक्षुर्मे देहि ॥

**रोचिष्णुरसीत्यात्मानमादर्शे प्रेक्षते ॥२८॥**

भावार्थः 'रोचिष्णुरसि...' आदि मन्त्र पढी ऐनामा आफ्नो अनुहार हेर्नू ।

**छत्रं प्रतिगृह्णाति-बृहस्पतेश्छदिरसि पाप्मनो मामन्तर्धेहि तेजसो यशसो माऽन्तर्धेहीति ॥२९॥**

भावार्थः 'बृहस्पते...' आदि मन्त्र पढी छाता धारण गर्नू ।

मन्त्रार्थः हे छत्र ! बृहस्पतिलाई डाकेर तिमिले उनलाई घामबाट बचाएका थियौ, त्यसरी नै तिमि मेरो पापलाई ढाक तथा यश एवं तेजलाई प्रकाशित गर ।

**प्रतिष्ठेस्थो विश्वतो मा पातमित्युपानहौ प्रतिमुञ्चते ॥३०॥**

भावार्थः 'प्रतिष्ठे...' आदि मन्त्र पढेर जुत्ता लगाउनू ।

मन्त्रार्थः हे उपानह ! तिमि दुई स्थिर हुँदै सबैतिरबाट मेरो रक्षा गर ।

**विश्वाभ्यो मा नाष्ट्राभ्यस्परिपाहि सर्वत इति वैणवं दण्डमादत्ते ॥३१॥**

भावार्थः विश्वाभ्यो...' आदि मन्त्र पढी बाँसको लठ्ठी हातमा लिनू ।



मन्त्रार्थः हे वेणुदण्ड ! हजुर सारा राक्षसादि हिंसकबाट मेरो रक्षा गर्नुहोस् ।

**दन्तप्रक्षालनादीनि नित्यमपि वासश्छत्रोपानहश्चापूर्वाणि चेन्मन्त्रः ॥३२॥**

भावार्थः दन्तधावन गर्ने बेलामा नित्य मन्त्र पढ्नू तथा नयाँ कपडा, छाता, जुत्ता आदि लगाउँदा पनि अवश्य मन्त्र पढ्नू ।

इति षष्ठी कण्डिका

ब्रह्मचर्य-नियमका बारेमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत दोश्रो काण्ड, छैटौं कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

## सप्तमी कण्डिका

**स्नातस्य यमान् वक्ष्यामः ॥१॥**

भावार्थः यसपछि स्नातकद्वारा पालना गर्न योग्य यम बताइन्छ ।

**कामादितरः ॥२॥**

भावार्थः द्विजातिभिन्न वर्णका व्यक्तिले पनि आफ्नो इच्छाले यसको पालना गर्न सक्दछन् ।

**नृत्यगीतवादित्राणि न कुर्यान्न च गच्छेत् ॥३॥**

भावार्थः नाच, गान र बजानको काम आफूले पनि नगर्नू र अरुले गरेको ठाउँमा सहभागी पनि नहुनू ।

**कामं तु गीतं गायति-वैव गीते वा रमत इति श्रुतेर्ह्यपरम् ॥४॥**



भावार्थः आफ्नो इच्छा भएमा यो आफैं गर्नू वा अरुले गरेका यी कार्यमा सम्मिलित हुन सकिन्छ । किनकि श्रुतिको कथन छ कि यस्ता कार्यमा व्यक्तिको मन रमाउँदछ ।

**क्षेमे नक्तं ग्रामान्तरं न गच्छेन्न च धावेत् ॥५॥**

भावार्थः स्नातकले विपत्तिमा बाहेक रातमा अर्को गाऊँमा नजानू, अनावश्यक नदौडनू ।

**उदपानावेक्षण-वृक्षारोहण-फलप्रपतन-सन्धिसर्पण-विवृतस्नान-विषमलङ्घन-शुक्त वदनसन्ध्याऽऽदित्यप्रे-क्षणभैक्षणानि न कुर्यात् । न ह वै स्नात्वा भिक्षेतापह वै स्नात्वा भिक्षां जयतीति श्रुतेः ॥६॥**

भावार्थः कुवामा निहुरेर नहेर्नू । रुखमा नचढ्नू । फलफूल टिपेर नखसाल्नू । सन्धिबेलामा (प्रातः, सायं) यात्रा नगर्नू । नाङ्गै ननुहाउनू । अग्लाहोचो जमिन ननाघ्नू । अपशब्द नबोल्नू । संध्याकालमा सूर्यदर्शन नगर्नू र भिक्षा नमाग्नू । श्रुति वचनानुसार समावर्त्तन संस्कार पछिको भिक्षाटनले स्नातक पतन हुन्छ ।

## वर्षत्यप्रावृतो व्रजेत्-अयं मे वज्रः पाप्मानमपहनदिति ॥७॥

भावार्थः यदि वर्षा भइरहेको छ भने 'ॐ अयं मे वज्रः...' आदि मन्त्र पढी छाता नओढी हिँड्नू ।

## अप्स्वात्मानं नावेक्षेत ॥८॥

भावार्थः पानीमा आफ्नो अनुहार नहेर्नू ।

## अजातलोम्नीं विपुꣳसीꣳ षण्ढं च नोपहसेत् ॥९॥

भावार्थः जुन स्त्रीका शरीरमा रौं छैनन् वा मुखमा दाह्री जुँगा छन् वा जो नपुंसक छ त्यसको उपहास नगर्नू ।

## गर्भिणीं विजन्येति ब्रूयात् ॥१०॥

भावार्थः गर्भिणीलाई 'विजन्या' भन्नू ।



## सकुलमिति नकुलम् ॥११॥

भावार्थः न्याहुरीमुसोलाई 'सकुल' भन्नू ।

## भगालमिति कपालम् ॥१२॥

भावार्थः कपाललाई 'भगाल' भन्नू ।

## मणिधनुरितीन्द्रधनुः ॥१३॥

भावार्थः इन्द्रेणीलाई 'मणिधनु' भन्नू ।

## गां धायन्तीं परस्मै नाचक्षीत ॥१४॥

भावार्थः बाछोले दूध खाइरहेको अरुलाई नबताउनू ।

**उर्वरायामनन्तर्हितायां भूमावुत्सर्पंस्तिष्ठन्न मूत्रपुरीषे कुर्यात् ॥१५॥**

भावार्थः ऊर्बर वा बाँझो जमिनमा उभिएर वा बसेर मलमूत्रको त्याग नगर्नू ।

**स्वयं प्रशीर्णेन काष्ठेन गुदं प्रमृजीत ॥१६॥**

भावार्थः रुखबाट आफैं झरेका हाँगाका टुक्राले गुप्ताङ्ग सफा गर्नू ।

**विकृतं वासो नाच्छादयीत ॥१७॥**

भावार्थः स्नातकले गनाउने, च्यातिएको र अनुपयुक्त वस्त्र नलगाउनू ।

**दृढव्रतो वधत्रः स्यात् सर्वत आत्मानं गोपायेत् सर्वेषां मित्रमिव (शुक्रियमध्येक्ष्यमाणः) ॥१८॥**

भावार्थः स्नातकले निष्ठापूर्वक आफ्नो व्रतको पालना गर्नु पर्दछ, सबैसँग मित्रवत् व्यवहार गर्नू, अरुको रक्षक बन्नू र आफ्नो रक्षा सबैपक्षबाट गर्नू ।

इति सप्तमी कण्डिका

✷

स्नातक-नियमका बारेमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत दोश्रो काण्ड, सातौं कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# अष्टमी कण्डिका

## तिस्रो रात्रीर्व्रतं चरेत् ॥१॥

भावार्थः समावर्त्तनका दिनबाट तीन दिनसम्म स्नातकले व्रतमा बस्नू ।

## अमा꣡ꣳसाश्य मृण्मयपायी ॥२॥

भावार्थः स्नानतकले-मासु नखानू । माटाको भाँडामा पानी नपिउनू ।

## स्त्रीशूद्रशवकृष्णशकुनिशुनां चादर्शनमसम्भाषा च तैः ॥३॥

भावार्थः स्नातकले नारी, शूद्र, लाश, काग र कुकुरलाई नहेर्नू र तिसँग कुराकानी पनि नगर्नू ।

## शवशूद्रसूतकान्नानि च नाद्यात् ॥४॥



भावार्थः जुठो परेकाको, शूद्रको तथा सूतक परेकाको अन्न नखानू ।

## मूत्रपुरीषे ष्ठीवनं चातपे न कुर्यात् सूर्याच्चात्मानं नान्तर्दधीत ॥५॥

भावार्थः घाममा मलमूत्र नत्याग्नू, नथुक्नू । सूर्यको प्रकाशबाट आफूलाई टाढा नराख्नू ।

## तप्तेनोदकार्थान् कुर्वीत ॥६॥

भावार्थः तातो पानीले शौच वा आचमन आदि काम नगर्नू ।

## अवज्योत्य रात्रौ भोजनम् ॥७॥

भावार्थः रातमा बत्ती बालेर भोजन गर्नू ।

## सत्यवदनमेव वा ॥८॥

भावार्थः सधैं साँचो कुरा बोल्नू ।

## दीक्षितोऽप्यातपादीनि कुर्यात् प्रवर्ग्यवाँश्चेत् ॥९॥

भावार्थः यज्ञका लागि दीक्षा सम्पन्न व्यक्ति पनि यदि सोमयागको विशेष विधिले युक्त छ भने उसले पनि माथिका सूत्र संख्या पाँचदेखि आठसम्मका नियमको पालना गर्नु पर्दछ ।

इति अष्टमी कण्डिका

✷

स्नातक-नियमका बारेमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत दोश्रो काण्ड, आठौँ कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## नवमी कण्डिका

### अथात पञ्च महायज्ञाः ॥१॥

भावार्थः अब पञ्च महायज्ञका बारेका बताइन्छ ।

### वैश्वदेवादन्नात् पर्युक्ष्य स्वाहाकारैर्जुहुयात् । ब्रह्मणे, प्रजापतये, गृह्याभ्यः, कश्यपायानुमतय इति ॥२॥

भावार्थः विश्वेदेव सम्बन्धी अन्नमध्येबाट त्यो अन्नमा पानीका छीटा छर्की 'ब्रह्मणे स्वाहा, प्रजापतये स्वाहा, गृह्याभ्यः स्वाहा, कश्यपाय स्वाहा, अनुमतये स्वाहा' यसरी पाँच आहुति हाल्नू ।

### भूतगृह्येभ्यो मणिके त्रीन् पर्जन्यायद्भ्यः पृथिव्यै ॥३॥

भावार्थः भूतगृह्य होम पछि जलपात्रका नजिकै 'पर्जन्याय नमः', अद्भ्यः नमः' तथा पृथिव्यै नमः' पढी तीन आहुती दिनु पर्दछ ।



### धात्रे विधात्रे च द्वार्ययोः ॥४॥

भावार्थः दक्षिण तथा उत्तर ढोकामा क्रमैले 'धात्रे नमः' र 'विधात्रे नमः' पढी दुई आहुति दिनू ।

### प्रतिदिशं वायवे दिशां च ॥५॥

भावार्थः प्रत्येक दिशामा 'वायवे नमः' भनी बलि दिनु । 'प्राच्यै नमः' आदि पढी जम्मा चार बलि दिनू ।

### मध्ये त्रीन् ब्रह्मणेऽन्तरिक्षाय सूर्याय ॥६॥

भावार्थः प्रत्येक दिशामा दिइएको बलिको बिचमा 'ब्रह्मणे नमः', 'अन्तरिक्षाय नमः' तथा 'सूर्याय नमः' पढी तीन बलि दिनू ।

### विश्वेभ्यो देवेभ्यो विश्वेभ्यश्च भूतेभ्यस्तेषामुत्तरतः ॥७॥

भावार्थः ब्रह्मका लागि जहाँ बलि दिइएको छ त्यसको ठीक उत्तरतिर 'विश्वेदेवेभ्यो नमः' तथा 'विश्वेभ्यः भूतेभ्यः' पढी दुई बलि दिनु पर्दछ ।

## उषसे भूतानां च पतये परम् ॥८॥

भावार्थः यसको उत्तरतिर 'उषसे नमः' तथा 'भूतानां पतये नमः' पढी दुई वटा बलि दिइयोस् ।

## पितृभ्यः स्वधा नम इति दक्षिणतः ॥९॥

भावार्थः यी बलिको दक्षिणमा 'पितृभ्यः स्वधा नमः' पढी एक बलि दिइयोस् ।

## पात्रं निर्णिज्योत्तरापरस्यां दिशि निनयेद् यक्ष्मैतत्त इति ॥१०॥

भावार्थः उद्धरण पात्रलाई धोई त्यो पानी वायव्य दिशामा 'यक्ष्मैतत्ते निर्णेजनं नमः' मन्त्र पढ्दै फ्याँक्नू ।

## उद्धृत्याग्रं ब्राह्मणायावनेज्य दद्याद्धन्तत इति ॥११॥



भावार्थः वैश्वदेवका लागि राखिएको अन्नलाई 'हन्तत' भन्दै जल छर्कनू । अनि केही भाग निकाली ब्राह्मणलाई दिनू ।

## यथार्हं भिक्षुकानतिथींश्च सम्भजेरन् ॥१२॥

भावार्थः भिक्षुक तथा अतिथिहरुलाई यथाशक्ति भिक्षा र भोजनले सन्तुष्ट पार्नु पर्दछ ।

## बालज्येष्ठा गृह्या यथार्हमश्नीयुः ॥१३॥

भावार्थः जुन घरमा बच्चा छन् त्यहाँ पहिला तिनलाई खुवाउनू ।

## पश्चाद् गृहपतिः पत्नी च ॥१४॥

भावार्थः (अतिथि सत्कार) पछि घरको मूली र उसकी पत्नीले खानू ।

## पूर्वो वा गृहपतिः । तस्मादु स्वादिष्टं गृहपतिः पूर्वोऽतिथिभ्योऽश्नीयादिति श्रुतेः ॥१५॥

भावार्थः अथवा गृहपतिले पत्नीभन्दा पहिले खानू किन कि वेदको वचन छ कि त्यो अन्नबाट जो इष्ट (कर्म विशेष र उद्देश्य विशेष) छ त्यसलाई गृहपति अतिथिभन्दा पहिले ग्रहण गर्दछ ।

## अहरहः स्वाहा कुर्यादन्नाभावे केनचिदाकाष्ठाद् देवेभ्यः पितृभ्यो मनुक्ष्येभ्यश्चोदपात्रात् ॥१६॥

भावार्थः देवतालाई सन्तुष्ट पार्न नित्य हवन गर्नुपर्दछ । अन्नको अभावमा कुनै द्रव्यले हवन गर्नु पर्दछ । पारस्करका मतमा यदि केही पाइएन भने काठैले भएपनि हवन गर्नु पर्दछ । मनुष्ययज्ञ तथा पितृयज्ञ पनि जलपात्रबाट पानी लिएर नै प्रतिदिन गर्नुपर्दछ ।

इति नवमी कण्डिका

✷

पञ्चयज्ञका बारेमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत दोश्रो काण्ड, नवौं कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो



✷

## दशमी कण्डिका

### अथातोऽध्यायोपाकर्म ॥१॥

भावार्थः अब अध्ययनको उपाकर्म गर्ने विधिका बारेमा बताउँदछु ।

उपाकर्मः- जनैपूर्णिमाका दिनदेखि वा अरु वेदपाठ गर्न हुनेबेलामा वेदको अध्ययन शुरुगर्ने विधि ।

### ओषधीनां प्रादुर्भावे श्रवणेन श्रावण्यां पौर्णमास्याꣳश्रावणस्य पञ्चमीꣳहस्तेन वा ॥२॥

भावार्थः श्रावणमा औषधीहरु उम्रिएपछि श्रवण नक्षत्रले युक्त श्रावण पूर्णिमामा वा हस्तायुक्त भएको श्रावणशुक्ल पञ्चमीमा उपाकर्म गर्नु पर्दछ ।

नोटः- साउनभदौमा नदीहरु रजस्वला हुन्छन् । छन्दोगपरिशिष्ट-मासद्वयं श्रावणादि सर्वा नद्यो रजस्वलाः । तासु स्नानं न कुर्वीत वर्जयित्वा समुद्रगाः ॥ यस वचनको अपवादमा भनिएको छ-उपाकर्मणि चोत्सर्गे प्रेतस्नाने तथैव च । चन्द्रसूर्योपरागे च रजदोषो न विद्यते ॥



### आज्यभागाविष्ट्वाज्याहुतीर्जुहोति ॥३॥

भावार्थः ॐ अग्नये स्वाहा' र 'ॐ प्रजापतये स्वाहा' मन्त्रले अग्नि तथा सोमलाई आहुति दिए पछि घिउको आहुति हाल्नू ।

### पृथिव्याऽअग्नय इत्यृग्वेदे ॥४॥ अन्तरिक्षाय वायव इति यजुर्वेदे ॥५॥ दिवे सूर्याय इति सामवेदे ॥६॥ दिग्भ्यश्चन्द्रमस इत्यथर्ववेदे ॥७॥

भावार्थः उपाकर्ममा-ऋग्वेदको 'ॐ पृथिव्यै स्वाहा' र 'ॐ अग्नये स्वाहा', यजुर्वेदको 'ॐ अन्तरिक्षाय स्वाहा' र 'ॐ वायवे स्वाहा', सामवेदको 'ॐ दिवे स्वाहा' र 'ॐ सूर्याय स्वाहा' तथा अथर्ववेदको 'ॐ दिग्भ्यः स्वाहा' र 'ॐ चन्द्रमसे स्वाहा' भनी आहुति दिनू ।

### ब्रह्मणे छन्दोभ्यश्चेति सर्वत्र ॥८॥ प्रजापतये देवेभ्य ऋषिभ्यः श्रद्धायै मेधायै सदसस्पतयेऽनुमतय इति च ॥९॥

भावार्थः 'ॐ ब्रह्मणे स्वाहा' र 'ॐ छन्दोभ्यः स्वाहा' मन्त्रले प्रत्येक वेदको उपाकर्मको आहुति हाल्नू । यतिमात्र होइन 'प्रजापतये स्वाहा, देवेभ्यः स्वाहा, ऋषिभ्यः स्वाहा, श्रद्धायै स्वाहा, मेधायै स्वाहा, सदसस्पतये स्वाहा, अनुमतये स्वाहा' यि सात मन्त्रले पनि प्रत्येक वेदको आरम्भमा आहुति हाल्नू ।

**एतदेव व्रतादेशनविसर्गेषु ॥१०॥**

भावार्थः यही मन्त्रोच्चारण वेदारम्भ र समावर्तनका समयमा पनि गर्नु उचित हुन्छ ।

**सदसस्पतिमित्यक्षतधानास्त्रिः ॥११॥ सर्वेऽनुपठेयुः ॥१२॥ हुत्वा हुत्वौदुम्बर्यस्तिस्रस्तिस्रः समिध आदध्युरार्द्राः सपलाशा घृताक्ताः सावित्र्या ॥१३॥**

भावार्थः 'सदसस्पति...' आदि मन्त्रले आचार्य स्वयंले तीन पटक अक्षता र धानले हवन गर्नू, सबै शिष्यले यो मन्त्रलाई एकसाथ मिलेर पाठ गर्नू । एक, एक आहुति हाली डुम्रीका पात सहितका र घिउमा चोपिएका तीन-तीन समिधाले आचार्यको संरक्षणमा सबै शिष्यले सावित्री मन्त्रले होम हाल्नू ।



**ब्रह्मचारिणश्च पूर्वकल्पेन ॥१४॥**

भावार्थः यसपछि ब्रह्मचारीले उपनयनकर्मको विधिले आहुति हाल्नू ।

**शन्नो भवन्त्वित्यक्षतधाना अखादन्तः प्राश्नीयुः ॥१५॥**

भावार्थः यसपछि शिष्यहरुले 'शन्नो भवन्तु...' मन्त्रले जौ र चामल नचपाई निल्नू ।

**दधिक्राब्ण इति दधि भक्षयेयुः ॥१६॥**

भावार्थः 'दधिक्राब्णो...' आदि मन्त्र पढ्दै दही खानू ।

**स यावन्तं गणमिच्छेत् तावतस्तिलानाकर्षफलकेन जुहुयात् सावित्र्या, शुक्रज्योतिरित्यनुवाकेन वा ॥१७॥**

भावार्थः गुरुले चाहेजतिका शिष्यतुल्य संख्यामा तिल गनी आकर्षक वा डुम्रीको सर्पाकार चमसले गायत्री मन्त्रले 'शुक्रज्योति..' अनुवाकले त्यो तिलको आहुति दिनू ।

**प्राशनान्ते प्रत्यङ्मुखेभ्यः उपविष्टेभ्यः ओङ्कारमुक्त्वा त्रिश्च सावित्रीमध्यायादीन् प्रब्रूयात् ॥१८॥ ऋषिमुखानि बह्वृचानाम् ॥१९॥ पर्वाणि छन्दोगानाम् ॥२०॥ सूक्तान्यथर्वणानाम् ॥२१॥**

भावार्थः दही खाए पछि आचार्य पूर्व फर्की बस्नू ।अगिल्तिर पश्चिम फर्केर बसेका शिष्यलाई ॐ सहित तीन पटक सावित्री मन्त्र भन्दै यजुर्वेदका प्रत्येक अध्यायका प्रथम मन्त्र पढाउनू । ऋग्वेदीका लागि प्रत्येक मण्डलको पहिलो मन्त्र भन्नू । सामवेदीका लागि प्रत्येक पर्वका शुरुका मन्त्र भन्नू । अथर्ववेदीका लागि प्रत्येक सूक्तको शुरुको मन्त्र पढाइयोस् ।

**सर्वे जपन्ति-सह नोऽस्तु सह नोऽवतु सह न इदं वर्यिवदस्तु ब्रह्मा । इन्द्रस्तद्वेद येन यथा न विद्विषामह इति ॥२२॥**

भावार्थः आचार्य सँगै मिलेर सबै शिष्यले 'सहनोऽस्तु...विद्विषामहे' मन्त्रको पाठ गर्नू ।



**त्रिरात्रं नाधीयीरन् ॥२३॥ लोमनखानामनिकृन्तनम् ॥२४॥**

भावार्थः उपाकर्म पछिका तीन दिनसम्म अध्ययन नगर्नू । तीन दिनसम्म नङ र कपाल नकाट्नू ।

**एके प्रागुत्सर्गात् ॥२५॥**

भावार्थः केही आचार्यको समावर्त्तन-संस्कारभन्दा पहिले नङ र कपाल काट्न नहुने पनि मत छ ।

इति दशमी कण्डिका

उपाकर्मका बारेमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत दोश्रो काण्ड, दशौं कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

## एकादशी कण्डिका

**वातेऽमावस्यायाꣳ सर्वानध्यायः ॥१॥**

भावार्थः बेगले हावा चल्दा र औंसीमा अनध्याय हुन्छ ।

**श्राद्धाशने चोल्कावस्फूर्जद्भूमिचलनाग्न्युत्पातेष्वृतुसन्धिषु चाकालम् ॥२॥**

भावार्थः श्राद्धान्न खाएर, तारा खस्दा, बिजुली चम्कँदा, भुकम्प जाँदा, आगो लाग्दा र ऋतुहरुको सन्धिकालमा अनध्याय हुन्छ ।

**उत्सृष्टेष्वभ्रदर्शने सर्वरूपे च त्रिरात्रं त्रिसन्ध्यं वा ॥३॥**

भावार्थः वेदोत्सर्गका बेलामा, एकै पटक मेघ गर्जन र हावाहुरी सहित पानी पर्दा तीन दिन वा तीन सन्ध्या अध्ययन रोक्नू ।

**भुक्त्वाऽऽर्द्रपाणिरुदके निशायाꣳ सन्धिवेलयोरन्तः शवे ग्रामेऽन्तर्दिवाकीर्त्ये ॥४॥**



भावार्थः खाएर हात नसुकुन्जेल, पानीमा हुँदासम्म, रातमा बीचका दुई प्रहरमा, दिन र रातको सन्धिबेलामा, गाऊँमा शव रहिरहेसम्म र चाण्डाल रहेको स्थानमा अनध्याय मान्नू ।

**धावतोऽभिशस्तपतितदर्शनाश्चर्याभ्युदयेषु च तत्कालम् ॥५॥**

भावार्थः दौडँदै, कुनै पापी वा अपराधीलाई देख्दा, बाजीगरहरुको खेलतमाशा हेर्दा र विवाह-पुत्रजन्म आदिका आभ्युदयिक कर्ममा ती कुरा भइन्जेल वेदाध्ययन रोक्नु पर्दछ ।

**नीहारे वादित्रशब्द आर्तस्वने ग्रामान्ते श्मशाने श्वगर्दभोलूकश्रृगालसामशब्देषु शिष्टाचरिते च तत्कालम् ॥६॥**

भावार्थः कुहिरो लाग्दा, बाजा वा नगरा बज्दा, चित्कार सुनिएमा, गाऊँको सीमामा, मसानमा, कुकुर- लाटोकोसेरो-स्याल कराउँदा र सामवेदको ध्वनी सुनिरहँदासम्म अनध्याय राख्नु पर्दछ ।

## गुरौ प्रेतेऽपोऽभ्यवेयाद्दशरात्र चोपरमेत् ॥७॥

भावार्थः गुरुको मृत्यु हुँदा नुहाएर जलदान गर्नू र दश दिन अनध्याय राख्नू ।

## सतानूनप्त्रिणि सब्रह्मचारिणि च त्रिरात्रम् ॥८॥

भावार्थः सोमयज्ञमा एकै पटक दीक्षित भएका ऋत्विकहरु वा आज्यालम्भनलाई छुने ऋत्विक् तथा सहपाठी ब्रह्मचारीको मृत्युमा तीन दिन अनध्याय राख्नु पर्दछ ।

## एकरात्रमसब्रह्मचारिणि ॥९॥

भावार्थः आफ्नो सहपाठी नभई समान विद्यालयमा भिन्न गुरुबाट शिक्षा लिइरहेको ब्रह्मचारीको मृत्युमा एक दिनको अनध्याय हुनुपर्दछ ।

## अर्धषष्ठान्मासानधीत्योत्सृजेयुः ॥१०॥ अर्द्धसप्तमासान् वा ॥११॥



भावार्थः साढे छ महिना वा साढे सात महिना वेदाध्ययन गरी विराम गर्नु पर्दछ ।

## अथेमामृचं जपन्ति-उभा कवी युवा यो नो धर्मः परापतत् । परिसख्यस्य धर्मिणो विसख्यानि विसृजामहे इति ॥१२॥

भावार्थः आचार्यका साथ शिष्यले पनि वेदोत्सर्गका बेलामा 'उभा कवी...' आदि मन्त्र जप गर्नू ।

## त्रिरात्रꣳ सहोष्य विप्रतिष्ठेरन् ॥१३॥

भावार्थः यसपछि तीन दिन र तीन रातले गुरुशिष्यले सँगै बिताई आआफ्ना बाटो लाग्नू ।

इति एकादशी कण्डिका

✷

वेद अध्ययन विधिका बारेमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत दोश्रो काण्ड, एघारौं कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# द्वादशी कण्डिका

## पौषस्य रोहिण्यां मध्यमायां वाऽष्टकायामध्यायानुत्सृजेरन् ॥१॥

भावार्थः पौषको रोहिणी नक्षत्रमा वा कृष्ण अष्टमीमा पूर्व स्वीकृत वेदाध्ययनको उत्सर्ग गरियोस् (अर्थात् त्यसपछि जबसम्म पुनः उपाकर्म हुँदैन तबसम्म अध्ययन शुरु नगरियोस्) ।

## उदकान्तं गत्वाद्भिर्देवाँश्छन्दाꣳसि वेदानृषीन् पुराणाचार्यान् गन्धर्वानितराचार्यान् संवत्सरं च सावयवं पितृनाचार्यान् स्वाँश्च तर्पयेयुः ॥२॥

भावार्थः कुनै नदी वा तलाउमा गई आचार्य समेत सबै ब्रह्मचारीले देवताहरु (देवागातु विद पढ्दै देवास्तृप्यन्ताम्), छन्दहरु (छन्दांसि तृप्यन्ताम्), वेदहरु (वेदास्तृप्यन्ताम्), ऋषिहरु, पौराणिक आचार्यहरु, गन्धर्वहरु, दिन, रात, महिना, ऋतु, सबै अवयवले युक्त संवत्सर, पितृहरु, आफ्ना आचार्यहरु तथा अरु आचार्यहरुलाई तर्पण गर्नू ।

## सावित्रीं चतुरनुद्रुत्य विरताः स्म इति प्रब्रूयुः ॥३॥



भावार्थः यसपछि सावित्री मन्त्र चार पटक उच्चारण गरी 'विरताः स्मः' (हामीले उत्सर्गको काम सकेका छौं) भन्नू ।

## क्षपणं प्रवचनं च पूर्ववत् ॥४॥

भावार्थः उपाकर्मझैं अनध्याय हुन्छ, नङ-कपाल काटिन्न, अध्यायका प्रवचन चलिरहन्छ ।

इति द्वादशी कण्डिका

✷

वेद अध्ययन समापन विधिका बारेमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत दोश्रो काण्ड, बाह्रौं कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# त्रयोदशी कण्डिका

## पुण्याहे लाङ्गलयोजनं ज्येष्ठया वेन्द्रदैवत्यम् ॥१॥

भावार्थः पुण्य दिन वा ज्येष्ठामा हलो जोत्नु किनकि यो नक्षत्रका देवता इन्द्र हुन् ।

## इन्द्रं पर्जन्यमश्विनौ मरुत उदलाकाश्यपꣳ स्वातिकारीꣳसीतामनुमतिं च दध्ना तण्डुलैर्गन्धैरिष्ट्वाऽनडुहो मधुघृते प्राशयेत् ॥२॥

भावार्थः इन्द्र, पर्जन्य, अश्विनीकुमार, मरुत्, उदलाकाश्यप, स्वातिकारी, सीता तथा अनुमति नामक आठ देवतालाई 'इन्द्राय नमः' मन्त्रले दही, चामल, गन्ध र जौको होम हाल्नू र प्रत्येक साँढेलाई बिनामन्त्र घिउ र मह चटाउनू ।

## सीरा युञ्जन्तीति योजयेत् ॥३॥

भावार्थः 'सीरा युञ्जन्ति...' आदि मन्त्रले बयललाई नार्नू ।

मन्त्रः सीरा युञ्जन्ति कवयो युगा वितन्वते पृथक् । धीरा देवेषु सुम्नया (य.सं.१२।६७) ।

## शुनꣳसुफाला इति कृषेत् फालं वा लभेत ॥४॥

भावार्थः 'शुनꣳ...' आदि ऋचा पढी जमिन जोत्नु वा फाली छुनू ।

मन्त्रः शुनꣳसुफाला विकृषन्तु भूमिꣳ शुनं कीनाशा अभियन्तु वाहैः । शुनासीरा हविषा तोशमाना सुपिप्पला ओषधीः कर्त्तनास्मे ।

## नवाऽग्न्युपदेशाद्वपनानुषङ्गाच्च ॥५॥

भावार्थः यी दुई मन्त्रको विनियोग योजन जोत्नमा कर्ममा नगरियोस् किनकि अग्निचयनमा यी मन्त्र उपदिष्ट छन् ।

## अग्र्यमभिषिच्याकृष्टं तदा कृषेयुः ॥६॥

भावार्थः उत्तम साँढेलाई घण्टी आदिले विभूषित गरी बाँझो जमिन जोतियोस् ।

**स्थालीपाकस्य पूर्ववद्देवता यजेदुभयोर्व्रीहियवयोः प्रवपन् सीतायज्ञे च ॥७॥**

भावार्थः धान तथा जौ छर्दा र सीतायज्ञमा स्थालीपाकभन्दा पहिलेकोझैँ इन्द्रदेखि अनुमति सम्मका देवतालाई हवन गर्नू ।

**ततो ब्राह्मणभोजनम् ॥८॥**

भावार्थः यसपछि ब्राह्मणभोजन गराउनू ।

इति त्रयोदशी कण्डिका

✷

हलो जोत्ने विधिका बारेमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत दोश्रो काण्ड, तेह्रौँ कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## चतुर्दशी कण्डिका

**अथातः श्रवणाकर्म ॥१॥**

भावार्थः अब श्रवणाकर्मको विधि बताइन्छ ।

**श्रावण्यां पौर्णमास्याम् ॥२॥**

भावार्थः श्रावणीको अनुष्ठान श्रावणशुक्ल पूर्णिमामा गर्नु पर्दछ ।

**स्थालीपाꣳश्रपयित्वाऽक्षतधानाश्चैककपालं पुरोडाशम् ॥३॥**

भावार्थः स्थालीपाक पकाई भुस सहितको जौलाई भुटी पिँध्नू र मिसाई हवि तयार पार्नू ।

**धानानां भूयसीः पिष्ट्वाऽऽज्यभागाविष्ट्वाऽऽज्याहुती जुहोति । अपश्वेतपदा जहि पूर्वेण चापरेण च । सप्त च वारुणीरिमाः प्रजाः सर्वाश्च राजबान्धवैः स्वाहा ॥४॥ न वै श्वेतस्याध्याचारेऽहिर्ददर्श कञ्चन । श्वेताय वैदर्व्याय नमः स्वाहेति ॥५॥**



भावार्थः त्यो हविलाई चाहिँदो भुटेको जौसाथ मिसाई अग्नि र सोमलाई आहुति दिनू । यसपछि 'अपश्वेता...' र 'न वै श्वेतस्य...' आदि मन्त्रले घिउको आहुति हाल्नू ।

मन्त्रः **(क) अपश्वेतपदा जहि पूर्वेण चापरेण च । सप्त च वारुणीरिमाः प्रजाः सर्वाश्च राजबान्धवैः ॥ (ख) न वै श्वेतस्याध्याचारेऽहिर्ददर्श कञ्चन । श्वेताय वैदर्व्याय नमः ॥**

मन्त्रार्थः (क) हे गुप्तचर सर्प ! हजुर वासुकि आदि आफ्ना सबै राजबन्धुहरुका साथ आफ्नु सात पुस्तासम्म मबाट र हाम्रा आफन्तबाट धेरै टाढा जानुहोस् । हाम्रा वरिपरि बस्न छाड्नुहोस् । हाम्रा स्वजनमाथि वरुणको कृपा छ, उनका वरदहस्त हुन् । (ख) विशाल फणा भएका, पवित्र तथा प्रसन्न, सेता खुट्टा भएका सर्पलाई बारम्बार नमस्कार गर्दछु । उनका अधिनमा रहने कुनै पनि सर्पले मलाई पापदृष्टिले नहेरुन् ।

**स्थालीपाकस्य जुहोति-विष्णवे श्रवणाय श्रावण्यै पौर्णमास्यै वर्षाभ्यश्चेति ॥६॥**

भावार्थः यसपछि स्थालीपाक चरुले विष्णु, श्रवणा आदिको लागि 'विष्णवे..' आदि चार मन्त्रले चार आहुति दिनू ।

## धानावन्तमिति धानानाम् ॥७॥

भावार्थः यसपछि 'धानावन्तं करम्भिणमपूपवन्तमुक्थिनम् । इन्द्र प्रातर्जुषस्व नः' मन्त्रले पिसैको धानको एक आहुति दिनू ।

## घृताक्तान् सक्तून् सर्पेभ्यो जुहोति ॥८॥ आग्नेयपाण्डुपार्थिवानाꣳ सर्पाणामधिपतये स्वाहा । श्वेतवायवान्तरिक्षाणांꣳ सर्पाणामधिपतये स्वाहा । अभिभूः सौर्यदिव्यानाꣳ सर्पाणामधिपतये स्वाहेति ॥९॥

भावार्थः आग्नेयपाण्डु...' आदि तीन मन्त्रले घिउ मिसाइएको सातुले तीन आहुति दिनू ।

मन्त्रः आग्नेयपाण्डुपार्थिवानाꣳ सर्पाणामधिपतये स्वाहा ॥
श्वेतवायवान्तरिक्षाणांꣳ सर्पाणामधिपतये स्वाहा ॥
अभिभूः सौर्यदिव्यानाꣳ सर्पाणामधिपतये स्वाहा ॥

मन्त्रार्थः अग्निदेवका पाण्डु नामक तथा पृथ्वीमा विचरण गर्ने विषधरका लागि, सेता वायु र अन्तरिक्षमा घुम्ने सर्पका अधिपतिका लागि, सबैलाई अभिभूत गर्ने सूर्य र द्युलोकमा बस्ने सर्पका अधिपतिका लागि यो हवि समर्पण गर्दछु ।

## सर्वहुतमेककपालं ध्रुवाय भौमाय स्वाहेति ॥१०॥

भावार्थः 'ध्रुवाय भौमाय स्वाहा' मन्त्रले भाँडामा बाँकी सबै हवि एकैपटक होम गर्नू ।

## प्राशनान्ते सक्तूनामेकदेशꣳ शूर्पे न्युप्योपनिष्क्रम्य बहिःशालायाः स्थण्डिलमुपलिप्योल्कायां ध्रियमाणायां माऽन्तरागमतेत्युक्त्वा वाग्यतः सर्पानवनेजयति ॥११॥ आग्नेयपाण्डुपार्थिवानाꣳ सर्पाणामधिपतेऽवनेनिक्ष्व । श्वेतवायवान्तरिक्षाणाꣳ सर्पाणामधिपतेऽवनेनिक्ष्व । अभिभूः सौर्यदिव्यानाꣳ सर्पाणामधिपतेऽवनेनिक्ष्वेति ॥१२॥

भावार्थः संस्रव प्राशन पछि अलिकति सातु नाङ्लोमा लिई यज्ञशालाबाट बाहिर निक्लनू । बाहिर आँगनलाई आफ्नै हातले गोबरले लिप्नू । त्यसमाथि अँगार राख्नू । अनि 'मान्तरामागत (आगो र मेरा बीचमा कोही नआओ) भनी चुपचाप 'आग्नेय..., श्वेतवायव..., अभिभूः...' आदि तीन मन्त्रले सर्पलाई भनी जल छर्कनू ।

**यथाऽवनिक्तं दर्व्योपघातꣳ सक्तून् सर्पेभ्यो बलिꣳ हरति ॥१३॥**
**आग्नेयपाण्डुपार्थिवानाꣳ सर्पाणामधिपत एष ते बलिः । श्वेतवायवान्तरिक्षाणाꣳ सर्पाणामधिपत एष ते बलिः । अभिभूः सौर्यदिव्यानाꣳ सर्पाणामधिपत एष ते बलिः ॥१४॥**

भावार्थः जल छर्केको स्थानलाई ननाघी 'आग्नेय पाण्डु...' आदि तीन मन्त्रले दर्वीले सर्पलाई सातुको बलि दिनू ।

**अवनेज्य पूर्ववत् कङ्कतैः प्रलिखति ॥१५॥**
**आग्नेयपाण्डुपार्थिवानाꣳ सर्पाणामधिपतये प्रलिखस्व । श्वेतवायवान्तरिक्षाणाꣳ सर्पाणामधिपतये प्रलिखस्व । अभिभूः सौर्यदिव्यानाꣳ सर्पाणामधिपतये प्रलिखस्वेति ॥१६॥**

भावार्थः अवनेजन गराई 'आग्नेय पाण्डु...' आदि तीन मन्त्र पढी काइँयोले कोरी दिनू ।

**अञ्जनानुलेपनꣳ स्रजश्चाञ्जस्वानुलिम्पस्व स्रजोऽपि नह्यस्वेति ॥१७॥**



भावार्थः 'आग्नेय पाण्डु...' आदि तीन मन्त्रका अन्तमा क्रमैले 'अञ्जस्व', अनुलिम्पस्व' र 'स्रजोऽपिनह्यस्व' जोडी गाजल , चन्दन र माला लगाइ दिनू ।

**सक्तुशेषꣳ स्थण्डिले न्युप्योदपात्रेणोपनिनीयोपतिष्ठते-नमोऽस्तु सर्पेभ्य इति तिसृभिः ॥१८॥**

भावार्थः बचेको सातुलाई बलिका लागि लिपिएको जमिनमा हालि दिनू ।अनि जलपात्रले पानी बगाई 'नमोस्तु...' मन्त्रले सर्पको स्तुति गर्नू ।

मन्त्रः **नमोस्तु सर्पेभ्यो ये के च पृथिवीमनु । ये अन्तरिक्षे ये दिवि तेभ्यः सर्पेभ्यो नमः ।या इषवो यातुधानानां ये वा वनस्पतीꣳरनु । ये वाऽवटेषु शेरते तेभ्यः सर्पेभ्यो नमः । ये वामी रोचने दिवो ये वा सूर्यस्य रश्मिषु । येषामप्सु सदस्कृतं तेभ्य सर्पेभ्यो नमः ।**
(य.सं.१३।६-८) ।

**स यावत् कामयेत न सर्पा अभ्युपेयुरिति तावत् सन्ततयोदधारया निवेशनं त्रिः परिषिञ्चन् परीयादपश्वेतपदा जहोति द्वाभ्याम् ॥१९॥**

भावार्थः घरमालिकले जति स्थानमा सर्पको आवतजावत चाहँदैन, घरको त्यस भागलाई तीन पल्ट जलले सेचन गर्नू, तीन पटक परिक्रमा गर्नू र साथसाथै 'अपश्वेतपदा...' आदि माथिको दुई मन्त्र पनि पढ्दै जानू ।

## दर्वी शूर्पञ्च प्रक्षाल्य प्रतप्य प्रयच्छति ॥२०॥

भावार्थः दर्वी र नाङ्लोलाई धोई एक पटक तताएर मशलचीका हातमा दिनू ।

## द्वारदेशे मार्जयन्त आपोहिष्ठेति तिसृभिः ॥२१॥

भावार्थः 'आपोहिष्ठा...' आदि तीन मन्त्रले ब्रह्मा, यजमान र मशलचीले आआफ्नो मार्जन गर्नू ।

## अनुगुप्तमेतꣳ सक्तुशेषं निधाय ततोऽस्तमितेऽस्तमितेऽग्निं परिचर्य द्रव्योपघातꣳ सक्तून् सर्पेभ्यो बलिꣳहरेदाग्रहायण्याः ॥२२॥

भावार्थः बचेको सातुलाई कुनै भाँडामा सुरक्षित राखी श्रवणा कर्मदेखि हरेक दिन सूर्यास्त भए पछि आवसथ्याग्निको परिचर्या गर्नु । सुरोले नाङ्लोबाट सातु निकाली मार्ग पूर्णिमासम्म सर्पका लागि बलि दिइयोस् ।

## तꣳहरन्तन्नान्तरेण गच्छेयुः ॥२३॥

भावार्थः जतिबेला गृहपति बलिका लागि सातु निकाली राखेका हुन्छन् त्यतिबेला होमाग्नि र उसका बीचमा कोही नआउनू ।



## दर्व्याचमनं प्रक्षाल्य निदधाति ॥२४॥

भावार्थः दर्वीको मुखलाई पखालेर राख्ने गर्नु (नाङ्लो होइन) ।

## धानाः प्राश्नन्त्यसꣳस्यूताः ॥२५॥

भावार्थः त्यसपछि ब्रह्मा, यजमान र उल्काधारी (?) ले भुटेको जौ नचपाई खानू ।

## ततो ब्राह्मणभोजनम् ॥२६॥

भावार्थः यसपछि ब्राह्मण भोजन गराउनू ।

इति चतुर्दशी कण्डिका

✷

श्रवणाकर्म (नागपूजा) विधिका बारेमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत दोश्रो काण्ड, चौधौँ कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## पञ्चदशी कण्डिका

**इन्द्रयज्ञ-प्रौष्ठपद्यामिन्द्रयज्ञः ॥१॥**

भावार्थः भाद्रपूर्णिमामा इन्द्रयज्ञ गर्नु पर्दछ ।

**पायसमैन्द्रꣳश्रपयित्वाऽपूपाँश्चापूपैस्तीर्त्वाऽऽज्यभागाविष्ट्वाऽऽज्या हुतीर्जुहोतीन्द्रायेन्द्राण्या अजायैकपदेऽहिर्बुध्न्याय प्रौष्ठपदाभ्यश्चेति ॥२॥**

भावार्थः यसका लागि खीर र पुवा पकाउनू । पुवाले अग्नि र सोमलाई आहुति दिनू । 'इन्द्राय...' आदि पाँच मन्त्र पढी घिउको आहुति हाल्नू । यसपछि इन्द्रका लागि खिरको आहुति दिनू ।

**प्राशनान्ते मरुद्भ्यो बलिꣳहरत्यहुतादो मरुत इति श्रुतेः ॥३॥**



भावार्थः संस्रवप्राशन पछि मरुद्गणका लागि बलि अवश्य दिनु किनकि वेदको वचन छ जसले हामीलाई बलि दिँदैन त्यसलाई हामी (मरुद्गण) खान्छौं ।

**आश्वत्थेषु पलाशेषु मरुतोऽश्वत्थे तस्थुरिति वचनात् ॥४॥**

भावार्थः मरुतहरुलाई बलि पिपल वा पलाँसको पातमा नै दिइयोस् किनकि वैदिक वचनानुसार मरुद्गण पिपलका पातमा नै रहन्छन् ।

**शुक्रज्योतिरिति प्रतिमन्त्रम् ॥५॥ विमुखेन च ॥६॥ मनसा ॥७॥ नामान्येषामेतानीति श्रुतेः ॥८॥**

भावार्थः 'शुक्रज्योति...' आदि छ मन्त्रले प्रतिमन्त्र एक-एक बलि दिइयोस् । 'उग्रश्च भीमश्च...' आदि सातौं मन्त्र मनमनै पढी जम्मा सात बलि दिइयोस् । वेदवाक्य अनुसार 'शुक्रज्योतिः' तथा 'चित्तज्योतिः' आदि मरुतका नाम हुन् ।

मन्त्रहरू (यजुर्वेद १७।८०-८५, ३९।७)

(क) शुक्रज्ज्योतिश्च । चित्रज्ज्योतिश्चसत्त्यज्ज्योतिश्चज्ज्योतिष्म्माँश्च ॥
शुक्रश्चऽऋतपाश्चात्त्यꣳहाꣳ ॥

(ख) ईदृङ्ङ्च ॥ ईदृङ्ङ्चान्न्यादृङ्ङ्चसदृङ्ङ्चप्प्रतिसदृङ्ङ्च ॥
मितश्चसम्मितश्चसभराꣳ ॥

(ग) ऋतश्चसत्त्यश्चद्ध्रुवश्चधरुणश्च ॥ धर्त्ताचविधर्त्ताचविधारयꣳ ॥

(घ) ऋतजिच्च । सत्त्यजिच्चसेनजिच्चसुषेणश्च ॥ अन्तिमित्त्रश्चदूरेऽअमित्त्रश्चगणꣳ ॥

(ङ) ईदृक्षासऽएतादृक्षासꣳ ॥
ईदृक्षासऽएतादृक्षासऽऊषुण÷सदृक्षासꣳप्प्रतिसदृक्षासऽएतन ॥
मितासश्चसम्मितासोनोऽअद्द्यसभरसोमरुतोयज्ञेऽअस्म्मिन् ॥

(च) स्वतवाँश्च । प्प्रघासीचसान्तपनश्चगृहमेधीच ॥
क्रीडीचशाकीचोज्जेषी ॥

(क) उग्ग्रश्च । भीमश्चद्ध्वान्तश्चधुनिश्च ॥ सासह्वाँश्चाभियुग्ग्वाचविक्षिपꣳस्वाहा ॥

## इन्द्रं दैवीरिति जपति ॥९॥



भावार्थः बलिकर्म पछि 'इन्द्रं दैवी-...' आदि ऋचाको जप गर्नुपर्दछ ।

मन्त्रः- इन्द्रुन्दैवी÷ ॥
इन्द्रुन्दैवीर्विशोमरुतोऽनुवर्त्मानोऽभवन्न्यथेन्द्रुन्दैवीर्विशोमरुतोऽनुवर्त्मानोऽभवन् ।
एवमिमँय्यजमानन्दैवीश्चविशोमानुषीश्चानुवर्त्मानोभवन्तु ।(य.सं.१७।८६) ।

## ततो ब्राह्मणभोजनम् ॥१०॥

भावार्थः त्यसपछि ब्राह्मण भोजन गराउनू ।

इति पञ्चदशी कण्डिका

इन्द्रयज्ञका बारेमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत दोश्रो काण्ड, पन्ध्रौं कण्डिकाको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

## षोडशी कण्डिका

### आश्वयुज्यां पृषातकाः ॥१॥

भावार्थः आश्विन पूर्णिमामा 'पृषातक' (घीऊ मिसाइएको दही) कर्मको अनुष्ठान गर्नु पर्दछ।

### पायसमैन्द्रꣳ श्रपयित्वा दधिमधुघृतमिश्रं जुहोतीन्द्रायेन्द्राण्या अश्विभ्यामाश्वयुज्यै पौर्णमास्यै शरदे चेति ॥२॥

भावार्थः इन्द्रका लागि पायस पकाई दही, मह र घीऊ मिलाई 'इन्द्राय...' आदि पाँच मन्त्रले पाँच आहुति दिइयोस् ।

**मन्त्रः इन्द्राय स्वाहा इदमिन्द्राय, इन्द्राण्यै स्वाहा इदमिन्द्राण्यै, अश्विभ्यां स्वाहा इदमश्विभ्यां, आश्वयुज्यै पौर्णमास्यै स्वाहा इदमाश्वयुज्यै पौर्णमास्यै, शरदे स्वाहा इदं शरदे ।**

### प्राशनान्ते दधिपृषातकमञ्जलिना जुहोति-ऊनं मे पूर्यतां पूर्णं मे मा व्यगात् स्वाहेति ॥३॥



भावार्थः संस्रवप्राशन पछि दही तथा घीऊ मिश्रित आहुतिलाई 'ऊनं मे...' मन्त्र पढी अँजुलीले होम गर्नू ।

मन्त्रार्थः- हे प्रजापति ! मेरा कमी पूरा गरि दिनुहोस् । जेजति पूर्ण छ त्यसलाई अपूर्णतामा नबदली दिनुहोस् ।

### दधिमधुघृतमिश्रममात्या अवेक्षन्त आयात्विन्द्र इत्यनुवाकेन ॥४॥

भावार्थः यजमानका भाई , पुत्र तथा परिजनले 'आयातु ...सदा नः' (य.सं.२०।४७ देखि २०।५४) आदि अनुवाक पढी दही, मह र घिउ मिसाइएको पायसलाई हेर्नू ।

### मातृभिर्वत्सान् सꣳसृज्य ताꣳ रात्रिमाग्रहायणीं च ॥५॥

भावार्थः त्यो आश्विन र मार्ग पूर्णिमाका रातमा बाच्छा बाच्छीलाई तिनकी आमाका साथ नै रहन दिनुपर्दछ ।

## ततो ब्राह्मणभोजनम् ॥६॥

भावार्थः त्यसपछि ब्राह्मण भोजन गराउनू ।

इति षोडशी कण्डिका

✷

पृषातक-कर्मका बारेमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत दोश्रो काण्ड, सोह्रौं कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# सप्तदशी कण्डिका

## अथ सीतायज्ञः ॥१॥

भावार्थः अब सीतायज्ञ (हलो जोत्दा गरिने यज्ञ) को विधि बताइन्छ ।

## व्रीहियवानां यत्र यत्र यजेत तन्मयꣳस्थालीपाकꣳश्रपयेत् ॥२॥

भावार्थः धान र जौ पाक्ने बेलामा (शरद र वसन्त) मा जब सीतायज्ञ गरिन्छ तब धानको गर्दा चामलको र जौको गर्दा जौको खीर पकाई चरु बनाउनू ।

## कामादीजानोऽन्यत्रापि व्रीहियवयोरेवान्यतरꣳस्थालीपाꣳश्रपयेत् ॥३॥

भावार्थः पक्षादि कर्ममा पनि आफ्नो इच्छा अनुसार धान वा जौमध्ये एक थोकको मात्र स्थालीपाक बनाउनु पर्दछ ।

## न पूर्वचोदितत्वात् सन्देहः ॥४॥



भावार्थः यहाँ शङ्का हुन्छ धान वा जौ कै यज्ञको विधान त 'आश्वलायनश्रौतसूत्र १।९।१' मा पहिल्यै बताइएको थियो यहाँ छुट्टै यसको विधान किन गरिएको हो त ?

## असम्भवाद् विनिवृत्तिः ॥५॥

भावार्थः जौ को स्थालीपाक असम्भव हुनाले गर्दा यसको विधान गरिएको हो ।

## क्षेत्रस्य पुरस्तादुत्तरतो वा शुचौ देशे कृष्टे फलानुपरोधेन ॥६॥

भावार्थः खेतको उत्तर वा पूर्वको जोतिएको कुनै पवित्र स्थानमा फसललाई कुनै हानी नपुर्‍याई सीतायज्ञ गर्नु पर्दछ ।

## ग्रामे वोभयसम्प्रयोगादविरोधात् ॥७॥

भावार्थः अथवा गाउँमा पनि गर्न सकिन्छ किनकि यी दुवै स्थान एकअर्काका विरोधी होइनन् ।

**यत्र श्रपयिष्यन्नुपलिप्त उद्धतावोक्षितेऽग्निमुपसमाधाय
तन्मिश्रैर्दर्भैस्तीर्त्वाऽऽज्यभागाविष्ट्वाऽऽज्यहुतीर्जुहोति ॥८॥**

भावार्थः जब स्थालीपाक बनाउन खोजिन्छ तब त्यस ठाउँको माटो रेखाङ्कित गरी हटाउनू । जल सेचन गर्नू । त्यसमाथि औपासनाग्निको स्थापना गर्नू । जौ वा चामलमध्ये जेको हव्यान्न बनाउन चाहेको त्यसले कुशलाई बेर्नू । दुई कुशले वेदीलाई बढारी सफा गर्नू र घिउको दुई आहुति दिनू ।

**पृथिवी द्यौः प्रदिशो दिशो यस्मै द्युसभरावृता ।
तमिहेन्द्रमुपह्वये शिवा नः सन्तु हेतयः स्वाहा ॥
यन्मे किञ्चिदुपेप्सितमस्मिन् कर्मणि वृत्रहन् ।
तन्मे सर्वꣳ समृध्यतां जीवतः शरदः शतꣳ स्वाहा ॥
सम्पत्तिर्भूतिर्भूमिर्वृष्टिर्ज्यैष्ठ्यꣳ श्रैष्ठ्यꣳ श्रीः प्रजामिहावतु स्वाहा ॥
यस्याभावे वैदिकलौकिकानां भूतिर्भवति कर्मणाम् । इन्द्रपत्नीमुपह्वये सीताꣳ सा
मे त्वनपायिनी भूयात् कर्मणि कर्मणि स्वाहा ॥
अश्वावती, गामती, सूनृतावती, बिभर्ति या प्राणभृतो अतन्द्रिता ।
खलमालिनीमुर्वरामस्मिन् कर्मण्युपह्वये ध्रुवाꣳ सा मे त्वनपायिनी
भूयात् स्वाहेति ॥९॥**



भावार्थः त्यसपछि 'पृथिवी द्यौः...' देखि '...भूयात् स्वाहा' सम्मका पाँच मन्त्रले आज्याहुति मात्र दिनू ।

मन्त्रार्थ :

१. धरती, आकाश, दिशाहरु र विदिशाहरु जुन इन्द्रका तेजले प्रभामयी बनेका छन्, म ती इन्द्रको आवाहन गर्दछु । उनका वज्र आदि हतियारले हाम्रो रक्षा गरुन् ।

२. हे वृत्रहन्ता इन्द्र ! मैले जुन यो अनुष्ठान गरेको छु, यसमा मेरा जे कामना छन् तिनको आपूर्ति हजुर गर्नुहोस् । मलाई सय वर्षको आयु प्रदान गर्नुहोस् ।

३. हे हलाधिपति देवगण ! हजुर ऐश्वर्य, समृद्धि, आश्रय, स्थान, वर्षा, श्रेष्ठता तथा सौन्दर्यप्रदाता हुनुहुन्छ । हजुर हाम्रा सन्तान र आश्रितजनको रक्षा गर्नुहोस् ।

४. सबै वैदिक र लौकिक अनुष्ठानमा जसको उपस्थिति रहँदा सारा भौतिक ऐश्वर्यको प्राप्ति हुन्छ, म ति इन्द्रपत्नी सीतालाई आह्वान गर्दछु, तिनले मेरा सबै अनुष्ठानमा अन्नको भण्डारलाई भरि दिउन् ।

५. म यो अनुष्ठानमा जमिनको उर्वराशक्ति बढाउने, अन्नको शक्ति र शोभा बढाउने ति अटल देवीको आह्वान गर्दछु जसका साथमा अनन्त गाई र असंख्य घोडा छन् । सो सधैं सत्य र प्रिय बोल्दछिन् । जो सारा जीवलाई निरन्तर भरणपोषण गर्दछिन् । तिनले हाम्रो दुःख पनि नष्ट पारुन् ।

**स्थालीपाकस्य जुहोति सीतायै यजायै शमायै भूत्या इति ॥१०॥**

भावार्थः त्यसपछि 'सीतायै स्वाहा, यजायै स्वाहा, शमायै स्वाहा र भुत्या स्वाहा' पढी स्थालीपाकले चार आहुति हाल्नू ।

**मन्त्रवत् प्रदानमेकेषाम् ॥११॥**

भावार्थः कसैले स्वाहा नजोडी होम गनुपर्ने बताएका छन् ।

**स्वाहाकारप्रदाना इति श्रुतेर्विनिवृत्तिः ॥१२॥**

भावार्थः श्रौतकर्मका यज्ञमा स्वाहा भनिन्छ, तिनै बाह्य नियम यहाँ प्रयोग हुने भनी जान्नू । स्मार्तकर्ममा पनि स्वाहा भन्ने विधान छ ।

**स्तरणशेषकुशेषु सीतागोप्तृभ्यो बलिᳫं हरति पुरस्ताद् ये त आसते सुधन्वानो निषङ्गिणः । ते त्वा पुरस्ताद् गोपायन्त्वप्रमत्ता अनपायिनो नम एषां करोम्यहं बलिमेभ्यो हरामीममिति ॥१३॥**



भावार्थः अङ्गभावमा प्राप्त कुशासनमा सीतागोप्ता आदि देवताका लागि 'पुरस्ताद् ये त...' आदि चार मन्त्र पढी क्रमैले पूर्व, दक्षिण, पश्चिम र उत्तर दशामा बलि दिनू ।

मन्त्रार्थः हे सीता ! श्रेष्ठ धनुर्धर जो वाण लिई हजुरका पूर्वमा उभिएका छन् ती आलस्य रहित भई पूर्व दिशामा हजुरको रक्षा गरून् । हजुरको कष्ट हटाऊन् । म तिनलाई नमस्कार गरी बलि चढाउँदछु ।

**अथ दक्षिणतोऽनिमिषा वर्मिण आसते । ते त्वा दक्षिणतो गोपायन्त्वप्रमत्ता अनापायिनो नम एषां करोम्यहं बलिमेभ्यो हरामीममिति ॥१४॥**

भावार्थः हे सीता ! हजुरका दक्षिणतिर आँखा नझिम्क्याई जुन देवता हजुरतिर हेरी रहेका छन् तिनले हजुरको रक्षा गरुन् । म तिनलाई नमस्कार गरी बलि चढाउँदछु ।

**अथ पश्चादाभुवः प्रभुवो भूतिर्भूमिः पार्ष्णिः शुनङ्कुकरिः । ते त्वा पश्चाद् गोपायन्त्वप्रमत्ता अनापायिनो नम एषां करोम्यहं बलिमेभ्यो हरामीममिति ॥१५॥**

भावार्थः हे सीता ! जुन देवता हजुरका पश्चिममा उभिएका छन् ती सबै प्रकारले प्रभावी छन् । जसका भूति, भूमि, पार्ष्णि र शुनङ्करी आदि अनेक नाम छन् । म तिनलाई नमस्कार गरी बलि चढाउँदछु ।

**अथोत्तरतो भीमा वायुसमा जवे । ते त्वोत्तरतः क्षेत्रे खले गृहेऽध्वनि गोपायन्त्वप्रमत्ता अनापायिनो नम एषां करोम्यहं बलिमेभ्यो हरामीममिति ॥१६॥**

भावार्थः हे सीता ! हजुरका उत्तरतिर जुन देवता उभिएका छन् ती अत्यन्त भयानक छन्, वायुसरह वेगवान् छन् । म तिनलाई नमस्कार गरी हजुरको रक्षाका लागि बलि चढाउँदछु ।

**प्रकृतादन्यस्मादाज्यशेषेण च पूर्ववद् बलिकर्म ॥१७॥**

भावार्थः प्रधान मन्त्रसम्बन्धी स्थालीपाक भन्दा भिन्न जुन पकाइएको खीर छ त्यसले तथा बचेको घिउले पहिले बताइए भैँ (तह्रौँ कण्डिकाको दोश्रो सूत्र) 'इन्द्रं पर्जन्य...' आदि मन्त्रले उक्त लाङ्गलयोजन देवतालाई पनि बलि चढाइयोस् ।

**स्त्रियश्चोपयजेरन्नाचरितत्वात् ॥१८॥**

भावार्थः यसपछि गृहस्वामीकी पत्नी आदि घरका स्त्रीले इन्द्र तथा क्षेत्रपाल आदिलाई बलि दिनू किनकि पूर्वज स्त्रीले यसो गर्दै आएका छन् ।



**सꣳस्थिते कर्मणि ब्राह्मणान् भोजयेत् सꣳस्थिते कर्मणि ब्राह्मणान् भोजयेत् ॥१९॥**

भावार्थः कर्म समाप्त भएपछि तीन वा दश ब्राह्मणलाई भोजन गराउनु पर्दछ ।

इति सप्तदशी कण्डिका

✷

सीता यज्ञका बारेमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत दोश्रो काण्ड, सत्रौँ कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

॥ इति श्रीपारस्करविरचिते गृहसूत्रे द्वितीयः काण्डः समाप्तः ॥

✷

पारस्करगृह्यसूत्र अन्तर्गत दोश्रो काण्डको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# तृतीयकाण्डम्
## प्रथमा कण्डिका

### अनाहिताग्नेर्नवप्राशनम् ॥१॥

भावार्थः अनाहिताग्नि व्यक्तिको नवान्न भक्षणको विधि बताइन्छ ।

**नव७ँ स्थालीपाक७ँ श्रपयित्वाऽऽज्यभागाविष्ट्वाऽऽज्याहुती जुहोति । शतायुधाय शतवीर्याय शतोतये अभिमातिषाहे । शतं यो नः शरदोऽजीजानिन्द्रोनेषदति दुरितानि विश्वा स्वाहा । ये चत्वारः पथयो देवयाना अन्तरा द्यावापृथिवी वियन्ति । तेषां योऽज्यावि निमजीतिमावहात्तस्मैनोदेवाः परिधत्तेहसर्वे स्वाहेति ॥२॥**

भावार्थः (शरद तथा वसन्त ऋतुमा उत्पन्न) नवान्नको स्थालीपाक बनाएर अग्नि र सोमलाई आहुति दिई सकेपछि 'शतायुधाय...' र 'ये चत्वार-...' यी दुई मन्त्रले घिउको दुई आहुति हाल्नू ।



मन्त्रार्थः- (क) यो आहुति त्यो देवताका लागि हो जोसँग अनगिन्ती हतियार छन्, जसको शक्तिको सीमा नै छैन, जोसँग असङ्ख्य रक्षा-साधन छन्, जसले शत्रुलाई हराउने गर्दछन्, त्यस्ता देवराज इन्द्रले हाम्रा सबै दुःख र खराब आदत हटाउन् । उनले हामीलाई सय वर्ष लामो आयु दिउन् । (ख) हे अमर देवताहरू हो ! आकाश र पृथ्वीका बीचमा भएका दुःख र पीर नभएका जुन चार आकाशसमान निर्मल बाटाहरु भएर हजुरहरू अनेक दिशामा घुम्ने गर्नु हुन्छ, त्यस्तै पीर एवं हानी नभएको र विजयी बाटो मलाई पनि हिँड्न निर्देशन दिनु होस् ।

**स्थालीपाकस्याऽऽग्रयणदेवताभ्यो हुत्वा जुहोति स्विष्टमग्नेअभि तत्पृणीहि विश्वाँश्च देवः पृतना अविष्यक् सुगन्नु पन्थां प्रदिशन्न एहि ज्योतिष्मद्धेह्यजरन्न आयुः स्वाहेति ॥३॥**

भावार्थः यसपछि स्थालीपाकले आग्रयण देवताहरु (इन्द्राग्नि, विश्वेदेव र द्यावापृथिवी) प्रत्येकलाई एक-एक आहुति दिई 'स्विष्टमग्ने ...' मन्त्रले घिउको एक आहुति हाल्नू । अनि स्विष्टकृत् अग्निलाई स्थालीपाकले 'स्विष्टकृते स्वाहा' भनी एक आहुति दिई 'स्विष्टमग्ने...' मन्त्रले घिउको आहुति दिनू ।

मन्त्रार्थः- हे अग्निदेवता ! स्विष्टकृत्का लागि दिइएको यो आहुतिमा जेजति कमीकमजोरी भए, हजुर त्यसलाई पूरा गरि दिनुहोस् । शत्रुका सेनाबाट मेरो र मेरो सबै परिवारको रक्षा गर्नु होस् । हामीलाई अर्चि (ज्वाला, किरण) आदि गरिएका सहज मार्ग देखाउँदै हजुर यहाँ आएर हामीलाई अजर र अमर हुने आशिर्वाद दिनुहोस् ।

**अथ प्राश्नातिअग्निः प्रथमः प्राश्नातु स हि वेद यथा हविः । शिवा अस्मभ्यमोषधीः कृणोतु विश्वचर्षणिः । भद्रान्नः श्रेयः समनैष्ट देवास्त्वयाऽवशेन समशीमहि त्वा । स नो मयोऽभूः पितो आविशस्व शं तोकाय तनुवे स्योन ॥४॥ अन्नपतीयया वा ॥५॥**

भावार्थः बाँकी नौ आहुति हाली 'अग्निः प्रथम..' आदि मन्त्र वा 'अन्नपते...' आदि ऋचा पढ्दै संस्रवप्राशन गर्नू ।

मन्त्रार्थः- (क) सबै धनधनन्यका मालिक हे अग्नि ! हजुर यो हविष्यसँग परिचित हुनुहुन्छ । हजुरले पहिले यसलाई खाएर औषधी र वनस्पतिलाई हाम्रा लागि सुखद बनाउनु होस् । हे इन्द्र आदि देवता ! हजुरहरू सबैले हामीलाई कल्याणदायक श्रेय भोग गराउँदै निरोगी बनाउनु होस् । (ख) हे अन्न देवता ! हामी हजुरको सेवन विधिपूर्वक गर्न पाउँ । हजुर हामी भित्र छिरी हामीलाई सुखी, शान्त, पुष्ट र प्रजननका लागि समर्थ बनाउन सक्षम भइ दिनुहोस् ।



**अथ यवानाम् एतमुत्यं मधुना संयुतम् । यवꣳसरस्वत्या अधिमनाय चकृषुः । इन्द्र आसीत् सीरपतिः शतक्रतुः कीनाशा आसन्मरुतः सदानव इति ॥६॥**

भावार्थः प्राशन गर्दा 'एतमुत्यंꣳ..' मन्त्रको जप गर्नू ।

मन्त्रार्थः- दृश्य र अदृश्य मिठासले युक्त भएको यो अनाजलाई सरस्वती नदीका तीरमा भएका वन्यभूमिमा, कृषकले तथा मरुद्गणले, हलोका स्वामी एवं यज्ञ सम्पन्न गर्ने इन्द्रको रेखदेखमा, खेती गरेर उब्जाइएको हो ।

**ततो ब्राह्मणभोजनम् ॥७॥**

भावार्थः यसपछि ब्राह्मण भोजन गराउनू ।

इति प्रथमा कण्डिका

✷

नयाँ अन्न खाने विधिका बारेमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत तेश्रो काण्ड, पहिलो कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# द्वितीया कण्डिका

## मार्गशीर्ष्यां पौर्णमास्यामाग्रहायणी कर्म ॥१॥

भावार्थः मंसिर पूर्णिमामा आग्रहायणी कर्मको अनुष्ठान गर्नुपर्दछ ।

**स्थालीपाकꣳ श्रपयित्वा श्रवणवदाज्याहुतिं हुत्वाऽपरा जुहोति-यां जनाः प्रतिनन्दन्ति रात्रीं धेनुमिवायतीम् । संवत्सरस्य या पत्नी सा नो अस्तु सुमङ्गली स्वाहा । संवत्सरस्य प्रतिमा या ताꣳ रात्रीमुपास्महे । प्रजाꣳ सुवीर्यां कृत्वा दीर्घमायुर्व्यश्नवै स्वाहा । संवत्सराय परिवत्सरायेदावत्सरायेद्वत्सराय वत्सराय कृणुते बृहन्नमः । तेषां वयꣳ सुमतौ यज्ञियानां न्योग्जीता अहताः स्याम स्वाहा । ग्रीष्मो हेमन्त उत नो वसन्तः शिवा वर्षा अभया शरन्नः । तेषामृतूनाꣳ शतशारदानां निवात एषामभये वसेम स्वाहेति ॥२॥**

भावार्थः स्थालीपाक पकाएर श्रवणाकर्मकोझैं 'ॐ अपश्वेतपदाजहि...' आदि दुई मन्त्र पढी घिउको दुई आहुति हाली 'ॐ यां जना...' आदि चार मन्त्रले घिउकै अर्को चार आहुति हाल्नू ।

मन्त्रार्थः- (क) जङ्गलबाट (चरी सकेर साँझमा) फर्किरहेको गाईझैं जुन आउन लागेको रातलाई देखी मानिसको मन खुशीले विह्वल हुन्छ, प्रजापतिको पत्नीको रूप मानिने त्यो रात हाम्रा लागि मङ्गलदायक होस् ।
(ख) प्रजापतिकी प्रतिमारूपी त्यो रातको उपासना गरी हामीले बलवान् छोरानाती र लामो आयु प्राप्त गर्न सकौं ।
(ग) हे संवत्सर ! हे परिवत्सर ! हे इदावत्सर ! हे इद्वत्सर ! र हे वत्सर ! हजुरहरू सबै यज्ञभोक्ता विशिष्ट देवगणलाई मेरो नमस्कार छ । हजुरहरूका कृपाबाट हाम्रो बुद्धि निर्मल होस्, हामी कसैले जित्न नसक्ने बनौं र हाम्रो अस्तित्व कहिल्यै ननासियोस् ।
(घ) ग्रीष्म, हेमन्त, वसन्त, वर्षा र शरद ऋतु हाम्रा लागि कल्याणकारी बनून्, हामीलाई निडर बनाउन् । हाम्रा लागि बाधारहीत बास र गाँस दिई जीवन प्रदान गरुन् ।

**स्थालीपाकस्य जुहोति सोमाय मृगशिरसे मार्गशीर्ष्यै पौर्णमास्यै हेमन्ताय चेति ॥३॥**

'ॐ सोमाय...' आदि चार मन्त्रले स्थालीपाकबाट हव्यान्न लिई चारचोटी हवन गर्नू ।

**प्राशनान्ते सक्तुशेषꣳशूर्पे न्युप्योपनिष्क्रमणप्रभृत्यामार्जनात् ॥४॥**

भावार्थः संस्रवप्राशन पछि बलिहरणका लागि बचेको सातूलाई नाङ्लोमा लिई ढोकामा श्रवणाकर्मको बेलामा गरिएझैं उपनिष्क्रमणदेखि मार्जनसम्मका कर्म सम्पादन गर्नू ।

**मार्जनान्त उत्सृष्टो बलिरित्याह ॥५॥**

भावार्थः मार्जन पछि 'उत्सृष्टो बलिः' भन्नू ।

**पश्चादग्नेः स्रस्तरमास्तीर्य्याहतं च वास आप्लुता अहतवाससः प्रत्यवरोहन्ति दक्षिणतः स्वामी जायोत्तरा यथाकनिष्ठमुत्तरतः ॥६॥**

भावार्थः होमाग्निको पश्चिममा कुशको आसन ओछ्याउनू । त्यसमा एकपटक मात्र धोइएको वस्त्र ओछ्याई, नुहाएर नयाँ वा एकपटक धोइएको धोती लगाई गृहपति बस्नू । सबभन्दा दाहिनेतिर गृहपति, त्यसको उत्तरमा उनकी पत्नी र त्यसको उत्तरतिर ज्येष्ठता अनुसार क्रमशः घरका अरु व्यक्ति बस्नू ।



**दक्षिणतो ब्रह्माणमुपवेश्योत्तरत उदपात्रꣳ शमीशाखासीतालोष्ठाश्मनो निधायाग्निमीक्षमाणो जपति-अयमग्निर्वीरतमोऽयं भगवत्तमः सहस्रसातमः । सुवीर्योऽयꣳ श्रैष्ठ्ये दधातु नाविति ॥७॥**

भावार्थः होमाग्निको दाहिनेतिर ब्रह्मालाई एवं उत्तरतिर कलश, शमीका हाँगा, हलो जोतेर निस्किएको माटोको ढिस्को वा थुप्रो तथा पत्थरको टुक्रा राख्नू । त्यसपछि गृहपतिले होमाग्नितिर हेर्दै 'ॐ अयमग्नि ...' आदि मन्त्र जप गर्नू ।

मन्त्रार्थः- यी आवसथ्याग्नि अती बलिया छन् । छ ऐश्वर्यले युक्त छन् । हजारौं अन्नदानका अधिष्ठाता हुन् । यी ठूला पराक्रम कर्ता हुन् । त्यसैले हामी पतिपत्नी श्रेष्ठ कर्म गर्ने उद्देश्यले यिनको स्थापना गर्दछौं ।

**पश्चादग्ने प्राञ्चमञ्जलिं करोति-दैवीं नावमिति तिसृभिः ॥८॥**

भावार्थः होमाग्निको पश्चिमतिर उभिएर पूर्व फर्की अँजुली बाँधी 'दैवी नावम्...' आदि तीन ऋचा (य.सं.२१।६-८) पाठ गर्नू ।

## स्त्रस्तरमारोहन्ति ॥९॥

भावार्थः गृहपतिसँगै सबै जना बिछ्यौना माथि चढ्नू ।

## ब्रह्माणमामन्त्रयते-ब्रह्मन् प्रत्यवरोहामेति ॥१०॥

भावार्थः गृहस्वामीले ब्रह्मालाई ' हे ब्रह्मन् ! म ओर्लिउँ ?' भनी सोध्नू ।

## ब्रह्मानुज्ञाताः प्रत्यवरोहन्त्यायुः कीर्तिर्यशो बलमन्नाद्यं प्रजामिति ॥११॥

भावार्थः ब्रह्माबाट आदेश पाए पछि सबैले 'आयुः कीर्ति...' आदि मन्त्र पढ्दै बिछ्यौनाबाट ओर्लनू ।

## उपेता जपन्ति-सुहेमन्तः सुवसन्तः सुग्रीष्मः प्रतिधीयतान्नः । शिवा नो वर्षाः सन्तु शरदः सन्तु नः शिवा इति ॥१२॥

भावार्थः तीमध्ये यज्ञोपवित संस्कार भएकाहरुले बिछ्याउनामा चढी 'सुहेमतः- ...' मन्त्र पाठ गर्नू ।

## स्योना पृथिवी नो भवेति दक्षिणपार्श्वैः प्राक्शिरसः संविशन्ति ॥१३॥

भावार्थः 'स्योना पृथिवी...' मन्त्र पढ्दै गृहपति परिवारजनसँगै बिछ्याउनामा चढी पूर्वतिर सिरान गरी उत्तरतिर मुख फर्काएर सुत्नू ।

## उपोदुत्तिष्ठन्ति-उदायुषा स्वायुषोत्पर्जन्यस्य वृष्ट्या पृथिव्याः सप्तधामभिरिति ॥१४॥

भावार्थः 'उदायुषा ...' मन्त्र पढी बिछ्याउनाबाट उठ्नू ।

## एवं द्विरपरं ब्रह्मानुज्ञाताः ॥१५॥

भावार्थः यसरी नै अरुहरुले पनि ब्रह्मको आज्ञाले उठ्नेसम्मका कार्य गर्नू ।

## अधः शयीरँश्चतुरो मासान्यथेष्टं वा ॥१६॥

भावार्थः यसपछि चार महिनासम्म जमिनमा सुत्नु वा इच्छानुसार खाटमा सुत्नू ।

इति द्वितीया कण्डिका

✷

आग्रहायणी कर्मका बारेमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत तेश्रो काण्ड, दोश्रो कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# तृतीया कण्डिका

## ऊर्ध्वमाग्रहायण्यास्तिस्रोऽष्टकाः ॥१॥

भावार्थः अग्रहण (मंसिर) पूर्णिमापछि त्यसैसँग सम्बन्धित तीनवटा अष्टका नामका श्राद्धकर्म हुन्छ ।

## ऐन्द्री वैश्वदेवी प्राजापत्या पित्र्येति ॥२॥

भावार्थः इन्द्र, विश्वेदेव, प्रजापति र पितृदेवको गरी चार अष्टका हुन्छन् ।

नोटः- ऐन्द्री अष्टका पौषकृष्ण अष्टमीमा, विश्वेदेवको अष्टका माघकृष्ण अष्टमीमा, प्राजापत्यको अष्टका फाल्गुणकृष्ण अष्टमीमा र पितृदेवको अष्टका चैत्रकृष्ण अष्टमीमा गर्नू ।

## अपूपमाꣳसशाकैर्यथासङ्ख्यम् ॥३॥

भावार्थः यिनमा पुवा, मासु र सागले यजन गर्नू ।



## प्रथमाऽष्टका पक्षाष्टम्याम् ॥४॥

भावार्थः कृष्णपक्षको अष्टमीमा पहिलो अष्टकाको अनुष्ठान गर्नू ।

## स्थालीपाकꣳ श्रपयित्वाऽऽज्यभागाविष्ट्वाऽऽज्याहुतीर्जुहोति ।

भावार्थः त्यसपछि स्थालीपाक बनाई अग्नि र सोमलाई आहुति हाली 'त्रिꣳशत्स्वसारः...' आदि (निम्न) दश मन्त्रले घिउको दश आहुति हाल्नू ।

मन्त्रः १.त्रिꣳशत्स्वसार उपयन्ति निष्कृतꣳ समानं केतुं प्रतिमुञ्चमानाः । ऋतूँस्तवन्ते कवयः प्रजानतीर्मध्ये छन्दसः परियन्ति भास्वतीः स्वाहा ॥

मन्त्रार्थः अष्टकाकी अधिष्ठाता देवीका तिथिरुपी तीस दिदीबहिनी छन् । ती शुद्धस्वरुप धारण गरी ऋतुहरुको विस्तार गर्दै हविष्यान्न ग्रहण गर्न अष्टकाका सामु आउँदछन् । यी सबै सबै कुरा जान्न सक्षम हुन् र यिनलाई अतीतको ज्ञान हुन्छ । यी तेजोमयी हुन् र यिनले संवत्सरलाई ढाक्ने गर्दछन् ।

मन्त्रः **२.ज्योतिष्मती प्रतिमुञ्चते नमो रात्री देवी सुर्यस्य व्रतानि । विपश्यन्ति पशवो जायमाना नानारूपा मातुरस्या उपस्थे स्वाहा ॥**

मन्त्रार्थः नक्षत्रहरुले सुशोभित ज्योतिर्मय, कान्तिमयी, दानादि गुणयुक्त रात्रिलाई म नमस्कार गर्दछु । यिनले आकाशमण्डललाई ढाकी दिनका कर्म पनि हुन दिँदैनन् । रातमा अनेक पशुसमुदाय मातृस्वरुपा धरतीमा उभिएर माथिका क्रियाकलापलाई विशेषरुपले हेरिरहन्छन् ।

मन्त्रः **३.एकाष्टका तपसा तप्यमाना जजान गर्भं महिमानमिन्द्रम् । तेन दस्यून्व्यसहन्त देवा हन्ताऽसुराणामभवच्छचीभिः स्वाहा ॥**

मन्त्रार्थः चौथो अष्टकाले आफ्नो तमोमयी शरीरले परमप्रतापी ऐश्वर्यवान् इन्द्रलाई जन्माइन् । तिनै इन्द्रको छत्रछायामा सङ्गठित भई देवताले असुरको विनाश गरे । त्यही आफ्नो कर्मले गर्दा इन्द्र दैत्यहन्ता भनी चिनिए ।

मन्त्रः **४.अनानुजामनुजां मामकर्त्त सत्यं वदन्त्यन्विच्छ एतत् । भूयासमस्य सुमतौ यथा यूयमन्यावो अन्यामति मा प्रयुक्त स्वाहा ॥**



मन्त्रार्थः हे रातका देवी हो ! हामी चारै अष्टका सत्य भन्दछौँ कि तिमी हामीभन्दा सानी छौ । तै पनि तिमिले हामीलाई श्रेष्ठता प्रदान गरेकी छौ । हामी सबै यसलाई स्वीकार गर्दछौँ । हामीतिमी सबै मिली यी जजमानलाई श्रेष्ठ बुद्धि प्रदान गरौँ । तिमी बीचको कुनै रातले यी जजमानको कुनै अनुष्ठानलाई खण्डित नबनाओस् । हामी सबै एकसाथ मिली प्रेमपूर्वक यी जजमानका सारा अनुष्ठानमा उसलाई सफलता दिऊँ ।

मन्त्रः **५.अभून्मम सुमतौ विश्ववेदा आष्ट प्रतिष्ठामविदद्धि गाधम् । भूयासमस्य सुमतौ यथा यूयमन्यावो अन्यामति मा प्रयुक्त स्वाहा ॥**

मन्त्रार्थः हे दीदिबहिनी हो ! मेरो सुमतिको निर्देशनमा रहँदै यो जजमानले सारा धन, ज्ञान, प्रतिष्ठा, प्रगति र आफ्नो निश्चित उद्देश्य पाओस् ।

मन्त्रः **६.पञ्च व्युष्टीरनु पञ्चदोहा गां पञ्चनाम्नीमृतबोऽनुपञ्च पञ्च दिशःपञ्चदशेन क्लृप्ताः समानमूर्ध्नीरधिलोकमेकꣳ स्वाहा ॥**

मन्त्रार्थः यो जजमानलाई पाँच प्रकारका अधिकार दिने भएकी पाँच रातहरु उषाका अनुगामिनी हुन् । यो धरतीमा हाम्रा जजमानको मङ्गलका लागि संवत्सररुपा पाँच नाम भएकी गाई छन् तथा पाँच ऋतुहरु उनका बाच्छाबाच्छी जस्तै हुन् । यिनका अतिरिक्त आदित्यरुपका समान मस्तक भएकी पन्ध्र यज्ञहरुकी शक्तिले समन्वित पाँच दिशाहरु छन् । (पाँच गाईः-संवत्सर, परिवत्सर, इदावत्सर, इदवत्सर र वत्सर अथवा नन्दा, भद्रा, सुरभि, सुशीला र सुमना) ।

मन्त्रः **७.ऋतस्य गर्भः प्रथमा व्यूषि ष्यपामेका महिमानं बिभर्त्ति । सूर्यस्यैका चरति निष्कृतेषु धर्मस्यैका सवितैकान्नियच्छतु स्वाहा ॥**

मन्त्रार्थः एक रात यज्ञ, सत्य र वेदको संरक्षण गर्दछिन् । अर्को रात चन्द्रोदयका रुपमा अन्धकारलाई हटाएर जलको महिमाको वर्णन गर्दछिन् । सूर्यास्त भएपछि तेश्री आउँदछिन् र चौथी घाम ढल्नासाथ तैयार हुन्छिन् । भगवान् भुवनभाष्कर त्यही एक रातलाई सुखद पारुन् ताकी अरु रात आफैं सुखद होऊन् ।

मन्त्रः **८.या प्रथमा व्यौच्छत्सा धेनुरभवद्यमे । सा नः पयस्वती धुक्ष्वोत्तरामुत्तरा७ँ समा७ँ स्वाहा ॥**



मन्त्रार्थः यमराजले जब पहिलो गाईलाई आफ्नो पाशमा बाँधे तब ती गाई बनिन् । तिनै पयस्विनी गाईले सारा जिन्दगी हामीलाई चाहेको वस्तु दिएर हाम्रा मनोरथलाई सिद्धि प्रदान गरुन् ।

मन्त्रः **९.शुक्रऋषभा नभसा ज्योतिषागाद्विश्वरूपा शबली अग्निकेतुः । समानमर्थ७ँ स्वपस्यमाना बिभ्रती जरामजर उष आगाः स्वाहा ॥**

मन्त्रार्थः हे चिरतरुपी उषा ! हजुर सबका लागि समान हितसाधिका हुनुहुन्छ, जो व्यक्ति उषाकालमा बिउँझिन्छ, उसलाई उषा देवी दीर्घायु प्रदान गर्दछिन् । यिनी कान्तिपूर्णा, दृष्टिमयी, श्रेष्ठ र बहुविधरुप सजाउने खालकी हुन् । यिनी आकाशका तेजोमय प्रदीप्त नक्षत्रका साथ आएकी हुन् । उषाकालमा हुने यज्ञका अग्निशिखा उनलाई प्रदीप्त गर्दछन् ।

मन्त्रः **१०.ऋतूनां पत्नी प्रथमेयमागादह्नां नेत्री जनित्री प्रजानाम् । एका सती बहुधोषो व्यौच्छत्साऽजीर्णा त्वं जरयसि सर्वमन्यत्स्वाहेति ॥५॥**

मन्त्रार्थः ऋतुहरुकी पालनकर्ता हे उषा ! हजूर दिनको आभिर्वावक हुनुहुन्छ ।प्रसुप्त जनजीवनमा हजूर जागरणको मन्त्र फुक्नु हुन्छ । हजूर एक्ली हुनुहुन्छ र पनि सम्पूर्ण विश्वका सारा प्राणीका वृद्धावस्थासम्म निर्दुष्ट जीवन प्रदान गर्नुहुन्छ ।

**स्थालीपाकस्य जुहोति-शान्ता पृथिवी शिवमन्तरिक्ष‌ꣳ शन्नो द्यौरभयं घृणोतु । शन्नो दिशः प्रदिश आदिशो नोऽहोरात्रे कृणुतं दीर्घमायुर्व्यश्नवै स्वाहा ॥ आपो मरीचीः परिपान्तु सर्वतो धाता समुद्रो अपहन्तु पापम् । भूतं भविष्यदकृन्तद् विश्वमस्तु मे ब्रह्माभिगुप्तः सुरक्षितः स्याꣳस्वाहा ॥ विश्वे आदित्या वसवश्च देवा रुद्रा गोप्तारो मरुतश्च सन्तु । ऊर्जं प्रजाममृतं दीर्घमायुः प्रजापतिर्मयि परमेष्ठी दधातु नः स्वाहेति च ॥६॥ अष्टकायै स्वाहेति ॥७॥ मध्यमा गवा ॥८॥**

भावार्थः स्थालीपाक पकाएर 'शान्ता पृथिवी...' आदि मन्त्रले तीन आहुति हाल्नू । त्यसपछि 'अष्टकायै स्वाहा' भनी चौथो आहुति हाल्नू । यो मध्यमा अष्टका गौले सम्पन्न हुनु पर्दछ । (कसैले गाईको सट्टा अनिन्दित बोको आदि पशुको वा चरुमात्रले पनि सम्पन्न गर्न सकिन्छ भनेका छन्) ।

**तस्यै वपां जुहोतिवह वपां जातवेदः पितृभ्य इति ॥९॥**

भावार्थः 'वपा...' आदि मन्त्रले बोसोको होम गर्नू ।

**अथ अन्वष्टका श्वोऽन्वष्टकासु सर्वासां पार्श्वसक्थिसव्याभ्यां परिवृते पिण्डपितृयज्ञवत् ॥१०॥**

भावार्थः अर्को दिन नवमीमा पिण्डपितृयज्ञमा जस्तै पछि हुने सबै अष्टकाहरुको अनुष्ठान पार्श्व तथा सक्थि, पशुको मासुले पूरै ढाकिएको स्थानमा गर्नु पर्दछ ।

**स्त्रीभ्यश्चोपसेचनञ्च कर्षूषु सुरया तर्पणेन चाञ्जनानुलेपनꣳस्रजश्च ॥११॥**

भावार्थः स्त्रीहरु (आमा, हजूरआमा, कुप्री आमा) लाई पनि पिण्डदान गर्नु पर्दछ । यिनलाई पिण्डदान गर्दा सुरा र सातु पनि अर्पित गरियोस् । सुरा कुनै भाँडामा दिइयोस् । गाजल र मालाहरु पनि दिइयोस् ।

**आचार्यायान्तेवासिभ्यश्चानपत्येभ्य इच्छन् ॥१२॥**

भावार्थः इच्छानुसार सन्तानहीन आचार्य एवं शिष्यहरुलाई पनि पिण्डदान गर्न सकिन्छ ।

**मध्यावर्षे च तुरीया शाकाष्टका ॥१३॥**

भावार्थः वर्षको मध्यमा जब खनजोत शुरु हुन्छ तब चौथो अष्टका सागले सम्पन्न गर्नुपर्दछ ।

इति तृतीया कण्डिका

✷

अष्टका होमका बारेमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत तेश्रो काण्ड, तेश्रो कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## चतुर्थी कण्डिका

### अथातः शालाकर्म ॥१॥

भावार्थः अब शालाकर्म (शिलान्यास) का विषयमा बताइन्छ ।

### पुण्याहे शालां कारयेत् ॥२॥

भावार्थः ज्योतिषशास्त्र अनुसार शुभ नक्षत्रमा शिल्पकारबाट शालाकर्मको शुरुवात गर्नु पर्दछ ।

### तस्या अवटमभिजुहोत्यच्युताय भौमाय स्वाहेति ॥३॥

भावार्थः भवनको खम्बा राख्न खनिएको खाल्टोमा 'ॐ अच्युताय स्वाहा' र 'ॐ भौमाय स्वाहा' मन्त्रले घिउको होम गर्नू ।

**१.इमामुच्छ्रयामि भुवनस्य नाभिं वसोर्धारां प्रतरणीं वसूनाम् । इहैव ध्रुवान्निमिनोमि शालां क्षेमे तिष्ठतु घृतमुक्षमाणा ॥ २.अश्वावती गोमती सूनृतावत्युच्छ्रयस्व महते सौभगाय । आत्वा शिशुराक्रन्दत्वा गावो धेनवो वाश्यमानाः ॥ ३.आत्वा कुमारस्तरुण आवत्सो जगदैः सह । आत्वा परिस्रुतः कुम्भ आदध्नः कलशैरुपक्षेकस्य पत्नी बृहती सवासा रयिं नो धेहि सुभगे सुवीर्य्यम् ॥ ४.आश्वावद्गोमदूर्जस्वत् पर्णं वनस्पतेरिव । अभिनः पूर्यताँ रयिरिदमनुश्रेयो वसानः ॥ इति चतुरः प्रपद्यते ॥४॥**

भावार्थः 'ॐ इमामुच्छ्रयामि...' आदि चार मन्त्र पढी खम्बा उठाई पहिले आग्नेय कोणको खाल्टोमा र बाँकी आवश्यकता अनुसार राख्नू (शिलान्यासमा पनि यिनै मन्त्र र विधि जान्नू) ।

मन्त्रार्थः १.म धरती, धरती मुनी शालाको आधारशिला रुपी यो खम्बा उठाउँदछु । यो खम्बा वा शिला धनप्रदायक, खजानाहरुको श्रोत तथा विविध धनको विस्तारक हो । म यो अचल खम्बा (शिला) माथि आफ्नो भवन स्थापना गर्दछु । यो भवन मेरा लागि सुखदायी होस् र आफ्नो स्थानमा निश्चल भावले उपद्रव नगरी बसिरहोस् ।

मन्त्रार्थः २. हे भवन ! तिमी सधैं गाई, घोडा तथा प्रिय एवं सत्य वचनले सम्पन्न रहू । तिम्रो निर्माण हाम्रो भाग्योदयका लागि हो । तिमी हरहमेशा बचाबच्चीको स्वरले गुञ्जी रहू, बाच्छाबाच्छी सहितका र बाच्छाबाच्छी नभएका गाईले भरिपूर्ण रहू ।

मन्त्रार्थः ३.हे भवन ! तिमी कहाँ बस्नेहरू मार्फत यो घरलाई वेदध्वनीबाट गुञ्जायमान गराइ रहू । नोकरका काखमा खेल्दै गरेका बालकहरु दूध खान आमालाई बोलाउन पाऊन् । तिम्रा ढोकामा मङ्गल कलशका रुपमा जल र दहीले भरिएका कलश ऋद्धिसिद्धिका कलशका रुपमा भरिपूर्ण रहून् । हे भवन ! तिमी हाम्रो रक्षक हौ । तिमी भव्य र अनेक गुणका प्रदायक हौ । तिमी आफैं समृद्ध त छौ नै मलाई पनि धनधान्यले परिपूर्ण गर । तिमी अनेक प्रकारका ध्वजापताकाले सुशोभित भई मलाई ओजस्वी, शक्तिशाली र वीर्यवान् बनाउ । तिमी हामीलाई हरदृष्टिले सम्पन्न गर जसले गर्दा हामी सधैं दान गरि राखौं ।

मन्त्रार्थः ४.हे भवन ! तिमी कल्याणका मालिक हौ । यो भवनमा बस्दै गर्दा म त्यसरी नै गाई, घोडा, रस र अन्य सबै प्रकारका धनराशिले पूर्ण बनू जसरी विभिन्न वनस्पतिका बीचमा पलाशदण्ड पल्लवित हुने गर्दछ ।

**अभ्यन्तरतोऽग्निमुपसमाधाय दक्षिणतो ब्रह्माणमुपवेश्योत्तरत उदपात्रं प्रतिष्ठाप्य स्थालीपाकꣳ श्रपयित्वा निष्क्रम्य द्वारसमीपे स्थित्वा ब्रह्माणमामन्त्रयते ब्रह्मन् प्रविशामीति ॥५॥**



भावार्थः भवन भित्र पञ्च भूसंस्कारले जमिन पवित्र गरी त्यहाँ अग्निको स्थापना गर्नू । त्यसपछि गृह्याग्निको दाहिनेतिरको आसनमा ब्रह्मालाई बसाउनू ।अग्निको उत्तरतिर जलपूर्ण कलशको स्थापना गर्नू । फेरी त्यो अग्निमा हविष्यान्न पकाउनू । घर बाहिर निक्ली ढोकामा उभिएर ब्रह्मालाई "हे ब्रह्मन् ! अब म घरमा छिरुँ ?" भनी सोध्नू ।

**ब्रह्मानुज्ञातः प्रविशत्यृतं प्रपद्ये शिवं प्रपद्य इति ॥६॥**

भावार्थः ब्रह्माको आज्ञा लिई 'ॐ ऋतं प्रपद्ये शिवं प्रपद्ये...' आदि मन्त्र पढ्दै घरमा प्रवेश गर्नू ।

**आज्यꣳसंस्कृत्येहरतिरित्याज्याहुती हुत्वाऽपरा जुहोति-१.वास्तोष्पते प्रतिजानीह्यस्मान्स्वावेशो अनमीवो भवानः । यत्त्वेमहे प्रति तन्नो जुषस्व शन्नो भव द्विपदे शं चतुष्पदे स्वाहा ॥ २.वास्तोष्पते प्रतरणो न एधि गयस्फानो गोभिरश्वेभिरिन्दो । अजरासस्ते सख्ये स्याम पितेव पुत्रान् प्रति तन्नो जुषस्व । शन्नो भव द्विपदे शं चतुष्पदे स्वाहा ॥ ३.वास्तोष्पते शग्मया सꣳसदा ते सक्षीमहि**

**रण्वया गातुमत्या । पाहि क्षेम उत योगे वरन्नो यूयम्पात स्वस्तिभिः सदा नः स्वाहा ॥ ४. अमीवहा वास्तोष्पते विश्वारूपाण्याविशन् । सखा सुशेव एधि नः स्वाहेति ॥७॥**

भावार्थः आज्य संस्कार गरेर 'ॐ इहरति...' आदि मन्त्रले घिउको एक आहुति हाल्नू । त्यसपछि 'ॐ वास्तोष्पते...एधि नः स्वाहा' यि चार मन्त्रले घिउको चार आहुति हाल्नू । यसपछि आधार र आज्य भागको होम गर्नू ।

मन्त्रार्थः १.हे गृहका मालिक इन्द्र ! म यो नयाँ भवनमा प्रवेश गर्दछु । मेरो यो प्रवेश मङ्गलमय होस् । मेरो रक्षाको जिम्मा हजुरलाई छ । यसको लागि हजुर प्रतिज्ञा गर्नुहोस् । मेरो शरीरलाई श्रेष्ठ, निरोगी र स्वस्थ बनाएर हजुर मलाई यो घरमा प्रवेश गराउनु होस् । मलाई जुन वस्तुको अभिलाषा हुन्छ, त्यो पाउन हामी हजुरलाई प्रार्थना गरौं । हजुर यथाशीघ्र मैले चाहेको वस्तु प्रदान गरि दिनुहोस् ।म मनुष्यका लागि कल्याणकारी तथा पशुका लागि पनि शुभदायक होऊँ ।

मन्त्रार्थः २.हे इन्द्र ! हजुर गोधनरुपी चलसम्पत्ति र अश्वसाध्य पराक्रमले म माथि आइपर्ने हर विपत्तिलाई विनाश गर्नुहोस् । मेरो प्राणशक्तिलाई हजुर सदैव अभिवर्द्धन गर्नुहोस् । हजुर मित्रवत् मेरो सम्पत्तिको संवर्द्धन गर्नुहोस् । म लामो समय जवान बनिरहूँ, यस्तो व्यवस्था गर्नुहोस् । जसरी बाबु छोरालाई स्नेह गर्दछ त्यसरी नै हजुर मलाई स्नेह गर्नुहोस्, प्रेमको डोरीमा बाँधी राख्नुहोस् । हजुर मनुष्य तथा पशु दुबैका लागि समानरुपले हितकारी हुनुहुन्छ ।

मन्त्रार्थः ३.हे गृहपति इन्द्र ! यो घर यज्ञमय होस् । वेदत्रयको स्वरले गुञ्जायमान रहोस् । शास्त्रीय ध्वनीले सधैं गुञ्जिरहोस् । यो घरसँग म सधैं सम्बद्ध रहिरहूँ । मेरो हालखबरको जिम्मा हजुरले लिनुहोस् ।नपाएको दिनुहोस् र पाएकाको संरक्षण गर्नुहोस् । हे इन्द्रका अरुचरहरु ! मेरा कर्मजन्य अभीष्ट फलले हजुरहरु मेरो रक्षा गर्नुहोस् ।

मन्त्रार्थः ४.हे वास्तोष्पति ! हजुरले मेरा पाप र ताप दुबै नष्ट गरिदिनु भएको छ, त्यसैले हजुर मेरो बन्धु हुनुहुन्छ । हजुर अनेक शरीरमा छिरेको हुनुहुन्छ । हजुर मेरो अनुकूल सुखको कारण बन्नुहोस् ।

**स्थालीपाकस्य जुहोति-१.अग्निमिन्द्रं बृहस्पतिं विश्वान् देवानुपह्वये । सरस्वतीं च वाजीं च च वास्तु मे दत्त वाजिनः स्वाहा ॥ २.सर्पदेवजनान्त्सर्वान् हिमवन्तꣳ सुदर्शनम् । वसूँश्च रुद्रानादित्यानीशानं जगदैः सह । एतान्त्सर्वान् प्रपद्येऽहं**

**वास्तु मे दत्त वाजिनः स्वाहा ॥ ३.पूर्वाह्णमपराह्णं चोभौ मध्यन्दिना सह । प्रदोषमर्द्धरात्रञ्च व्युष्टां देवीं महापथाम् । एतान्त्सर्वान् प्रपद्येऽहं वास्तु मे दत्त वाजिनः स्वाहा ॥ ४.कर्त्तारञ्च विकर्त्तारं विश्वकर्माणमोषधींश्च वनस्पतीन् । एतान्त्सर्वान् प्रपद्येऽहं वास्तु मे दत्त वाजिनः स्वाहा ॥ ५.धातारञ्च विधातारं निधीनां च पतिꣳ सह । एतान्त्सर्वान् प्रपद्येऽहं वास्तु मे दत्त वाजिनः स्वाहा ॥ ६.स्योनꣳ शिवमिदं वास्तु दत्तं ब्रह्मप्रजापति । सर्वाश्च देवताः स्वाहेति ॥८॥**

भावार्थः 'ॐ अग्निमिन्द्रं...' इत्यादि छ ऋचाले स्थालीपाक हविष्यान्नले छ आहुति हाल्नू ।

मन्त्रार्थः १.हे अग्नि ! इन्द्र, बृहस्पति तथा सबै देवगण एवं अन्नकी प्रतिमूर्ति देवी सरस्वती म हजुरहरु सबैलाई एकैपटक बोलाउँदछु । हजुरहरुमा अत्यन्त वेग छ । आहुनुहोस् मलाई गृहपति बनाउनु होस् । साथै, मलाई अन्न र धनले परिपूर्ण गरिदिनु होस् ।

मन्त्रार्थः २. हे सम्पूर्ण सर्पदेवता ! सुदर्शन हिमालय, वसुगण, रुद्रगण, आदित्यगण यि सबै देवतालाई म अनुचर सहित आमन्त्रण गर्दछु । म यी सबैको शरणमा छु । हजुरहरु सबै मलाई यस घरमा सुखद वास दिनुहोस् ।



मन्त्रार्थः ३.बहुमुखी प्रतिभा भएकी तेजोमयी उषादेवी, दिन तथा रातका सबै प्रहरका एवं प्रदोष कालका अधिष्ठाता देवगण सबैलाई म आह्वान गर्दछु ।म यी देवताको शरणमा छु मलाई यस घरमा सुखद वास दिनुहोस् ।

मन्त्रार्थः ४.कर्त्ता, विकर्त्ता, विश्वकर्मा, औषधी तथा वनस्पतिका अधिष्ठाता देवताहरुलाई म आह्वान गर्दछु । म यी सबैको शरणमा छु । यी सबै देवताले यो घरमा मेरो कुशलमङ्गलको जिम्मा लिएर सुखद वास दिऊन् ।

मन्त्रार्थः ५.धाता, विधाता, र विभिन्न खजानाका अधिपति देवगणलाई म आह्वान गर्दछु । यी सबैको म शरणमा छु । यी सबै यो घरमा सुखपूर्वक रहन मेरा सहयोगी होऊन् ।

मन्त्रार्थः ६.ब्रह्मा, प्रजापति आदि समस्त देवगण मलाई यो सुखद एवं मङ्गलमय घरको मालिक बनाऊन् । म यी सबैको शरणमा पर्दछु ।

**प्राशनान्ते काꣳस्ये सम्भारानोप्यौदुम्बरपलाशानि ससुराणि शाड्वलं गोमयं दधि मधु घृतं कुशान् यवाꣳश्चासनोपस्थानेषु प्रोक्षेत् ॥९॥**

भावार्थः संस्रवप्राशन पछि काँसको भाँडामा दूध, डुम्रीका पात, दुबो, गोबर, दही, मह, घिउ, कुश र जौ राखी त्यसले नागदन्त आदि देवस्थानलाई अभिषेक गर्नू ।

**पूर्वे सन्धावभिमृशति-श्रीश्च त्वा यशश्च पूर्वे सन्धौ गोपायेतामिति ॥१०॥**

भावार्थः 'ॐ श्रीश्च त्वा...' आदि मन्त्र पढी पूर्वपट्टिको (सन्धि) गाऱ्हो छुनू ।

मन्त्रार्थः हे भवन ! तिम्रो पूर्वसन्धिको रक्षा यशोदेवी र भगवती लक्ष्मीले गरुन् ।

**दक्षिणे सन्धावभिमृशति-यज्ञश्च त्वा दक्षिणा च दक्षिणे सन्धौ गोपायेतामिति ॥११॥**

भावार्थः 'ॐ यज्ञश्च...' मन्त्रले दक्षिणतिरको गारो छुनू ।

मन्त्रार्थः हे शाला ! यज्ञ र दक्षिणाले तिम्रो दाहिने तिरको गारोको रक्षा गरुन् ।

**पश्चिमे सन्धावभिमृशति-अन्नञ्च त्वा ब्राह्मणाश्च पश्चिमे सन्धौ गोपायेतामिति ॥१२॥**



भावार्थः 'ॐ अन्नञ्च...' मन्त्रले पश्चिमतिरको गारो छुनू ।

मन्त्रार्थः हे भवन ! अन्नदेव र ब्राह्मणगण तिम्रो पश्चिम तिरको गारोको रक्षा गरुन् ।

**उत्तरे सन्धावभिमृशति-ऊर्क्च त्वा सुनृता चोत्तरे सन्धौ गोपायेतामिति ॥१३॥**

भावार्थः 'ऊर्क्च...' मन्त्रले उत्तरतिरको गारो छुनू ।

मन्त्रार्थः हे भवन ! तेजोमयी प्राण तथा प्रिय एवं सत्य वचनले तिम्रो उत्तरतिरको गारोको रक्षा गरुन् ।

**निष्क्रम्य दिश उपतिष्ठतेकेता च मा सुकेता च पुरस्ताद् गोपायेतामित्यग्निर्वै केताऽऽदित्यः सुकेता तौ प्रपद्ये ताभ्यां नमोऽस्तु तौ मा पुरस्ताद् गोपायेतामिति ॥१४॥**

भावार्थः घरबाट बाहिर निक्ली 'ॐ केता च मा...गोपायेताम्' यी चार मन्त्रले चार दिशाको स्तुति गर्नू ।

मन्त्रार्थः केता र सुकेताले सामुन्नेबाट मेरो रक्षा गरुन् । केता, सुकेता वा आदित्य अग्निदेव नै हुन् ।म यिनका शरणमा परेको छु । म यिनलाई प्रणाम गर्दछु । यिनले मेरो घरको सामुन्ने (पूर्वको) को भागलाई सदैव रक्षा गरुन् ।

**अत दक्षिणतो-गोपायमानं च मा रक्षमाणा च दक्षिणतो गोपायेतामित्यहर्वै गोपायमानꣳ रात्रीरक्षमाणा ते प्रपद्ये ताभ्यां तमोऽस्तु ते मा दक्षिणतो गोपायेतामिति ॥१५॥**

मन्त्रार्थः दिन र रातका देवता (सूर्यचन्द्र) दक्षिणतिरबाट मेरो घरको रक्षा गर्न मेरा साथमा रहुन् । ती दुबैलाई नमस्कार छ ।त्यो दिशालाई नमस्कार छ ।

**अत पश्चात्-दीदिविश्च मा जागृविश्च पश्चाद्गोपायेतामित्यन्नं वै दीदिविः प्राणो जागृविस्तौ प्रपद्ये ताभ्यां तमोऽस्तु तौ मा पश्चाद्गोपायेतामिति ॥१६॥**



मन्त्रार्थः दीदिवि र जागृविले मेरो घरको पश्चिमी भागलाई रक्षा गरुन् । म तिनलाई नमस्कार गर्दछु ।

**अथोत्तरतः-अस्वप्नश्च मानवद्राणश्चोत्तरतो गोपायेतामिति चन्द्रमा वा अस्वप्नो वायुरनवद्राणस्तौ प्रपद्ये ताभ्यां तमोऽस्तु तौ मा मोत्तरतो गोपायेतामिति ॥१७॥**

मन्त्रार्थः अस्वप्न, मानवद्राण अथवा चन्द्रमाले मेरो घरको उत्तरी भागलाई रक्षा गरुन् । तिनलाई नमस्कार छ।

**निष्ठितां प्रपद्यते-धर्मस्थूणा राजꣳश्रीस्तूपमहोरात्रे द्वारफलके । इन्द्रस्य गृहा वसुमन्तो वरूथिनस्तानहं प्रपद्ये सह प्रजया पशुभिः सह ॥ यन्मे किञ्चिदस्त्युपहूतः सर्वगणसखायसाधुसंवृतः । त्वां त्वा शालेऽरिष्टवीरा गृहान्नः सन्तु सर्वत इति ॥१८॥**

भावार्थः गृह निर्माण पछि 'ॐ धर्मस्थूणा...' तथा 'ॐ यन्मे किञ्चिदस्ति...' यी दुई मन्त्र पढी गृहमा प्रवेश गर्नू ।

मन्त्रार्थः १.धर्मस्वरुप अति विशाल खम्बा सुशोभित छन् । लक्ष्मीको यसमा वास छ । ढोकाका पल्लामा लोकालोकरुपमा दिन र रात्रीका अधिष्ठाता देवता यहाँ उपस्थित छन् । यस्तै इन्द्रको घर रक्षा-प्रहरीबाट धनसम्पत्ति सुरक्षित छ । म आफ्ना छोरा नाति तथा पशुसमूहका साथ उनको आश्रयमा छु ।

मन्त्रार्थः २. हे शाला ! म आफ्नो सारा शक्तिले हजुरको प्रार्थना गर्दछु । जबजब म हजुरलाई बोलाउँदछु हजुर मेरो परिवार तथा स्वजनको रक्षाका लागि आउनुहोस् र सधैं हामीलाई रोगमुक्त गरि दिनुहोस् ।

## ततो ब्राह्मणभोजनम् ॥१९॥

भावार्थः त्यसपछि ब्राह्मण भोजन गराउनू ।

इति चतुर्थी कण्डिका

✷

शिलान्यास आदिका बारेमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत तेश्रो काण्ड, चौथो कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## पञ्चमी कण्डिका

### अथातो मणिकावधानम् ॥१॥

भावार्थः गृह प्रवेश पछि 'मणिकावधान' को विधि बताइन्छ ।

### उत्तरपूर्वस्यां दिशि यूपवदवटं खात्वा कुशानास्तीर्याक्षतानरिष्टकाँ (सुमनसः कपर्दिकान्)श्चान्यानि चाभिमङ्गलानि तस्मिन् मिनोति, मणिकꣳसमुद्रोऽसीति ॥२॥

भावार्थः शाला (गृह)को उत्तर पूर्वको कुनु (ईशान) मा यज्ञका खम्बाको झैँ खाल्टो खनी त्यसबाट निक्लेको माटो पूर्वतिर फ्याँकी, त्यो खाल्टोमा कुश ओछ्याएर एउटा माटोको भाँडोमा अक्षता, फूल, कौडी आदि माङ्गलिक वस्तु हाली 'ॐ समुद्रोऽसि...(य.सं.१८।४५)' मन्त्र पढी त्यो माटोको भाँडोलाई खाल्टोमा स्थापना गर्नू ।

### अथ आसिञ्चति-आपो रेवतीः क्षयथा हि वस्वः ऋतुं च भद्रं बिभृथामृतं च । रायश्च स्थ स्वपत्यस्य पत्नी सरस्वती तद्गृणते वयोधादिति ॥३॥

भावार्थः 'ॐ आपो रेवती...' आदि मन्त्र पढ्दै त्यो भाँडामा जल हाल्नू ।



मन्त्रार्थः हे जलदेव समुद्र ! हजुर रत्नाकर हुनुहुन्छ, त्यसैले धनी हुनुहुन्छ, हजुर श्रेष्ठयज्ञ र अमृतफल धारण गर्नुहुन्छ । हजुर धन र सन्तती दुवै दिन सक्नु हुन्छ । अतः म हजुरको यो रुपको स्तुति गर्दछु । देवी सरस्वतीले मलाई चिरायु बनाउन् ।

### आपोहिष्ठेति च तिसृभिः ॥४॥

भावार्थः 'ॐ आपोहिष्ठा...' आदि तीन मन्त्र पढी त्यो भाँडोमा फेरी एकपटक जल राख्नू ।

### ततो ब्राह्मणभोजनम् ॥५॥

भावार्थः यसपछि ब्राह्मण भोजन गराउनू ।

इति पञ्चमी कण्डिका

✷

मणिकावधान कर्म विशेषका बारेमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत तेश्रो काण्ड, पाँचौं कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# षष्ठी कण्डिका

## अथातः शीर्षरोगभेषजम् ॥१॥

भावार्थः यसपछि टाउको दुखेको औषधी विधि बताइन्छ ।

## पाणी प्रक्षाल्य भ्रुवौ विमार्ष्टि-चक्षुर्भ्या ᳬ श्रोत्राभ्यां गोदानच्छुबुकादधि । यक्ष्म ᳬ शीर्षण्य ᳬ रराटाद्विवृहामीममिति ॥२॥

भावार्थः दुवै हातलाई पानीले धोएर 'ॐ चक्षुर्भ्यां.' आदि मन्त्रले दुबै आँखीभौंलाई पानीले धुनू ।

मन्त्रार्थः आँखा, कान, निधार, चिउँडो, पुर्पुरो आदि अङ्गबाट म यो पीडादायी टाउको दुखाई हटाउँदछु ।

## अर्द्ध चेदवभेदकविरूपाक्ष श्वेतपक्ष महायशः । अथो चित्रपक्ष शिरो मास्याभितापसीदिति ॥३॥



भावार्थः यदि आधा कपाल दुखेको भए 'ॐ अवभेदकः...' आदि मन्त्र पढ्दै पहिलेझैं हात धोई दाहिने तिर दुखे दाहिने हातले र बायाँतिर दुखे देब्रे हातले दुखेको आँखीभौं पुछ्नू ।

मन्त्रार्थः शरीरका अङ्गलाई झुकाएर त्यसलाई भेदन गर्ने हे विरुपाक्ष ! हजुर श्वेतपक्षधारी हुनुहुन्छ, महान् यशस्वी हुनुहुन्छ । हजुरको कृपाले यो रोगीको टाउको नदुखोस्, हजुर यसको शीरमा दुःख पैदा नगर्नुहोस् ।

## क्षेम्यो ह्येव भवति ॥४॥

भावार्थः यसरी उ टाउको दुखाईबाट मुक्त हुने नै छ ।

इति षष्ठी कण्डिका

✶

टाउको दुखेकोको ओखतीका बारेमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत तेश्रो काण्ड, छैटौं कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✶

## सप्तमी कण्डिका

### उतूलपरिमेहः ॥१॥

भावार्थः घुमन्ते ठाडो स्वभावको दासलाई बशमा राख्न अभिषेक कर्मको विधि बताइन्छ ।

**स्वपतो जीवविशाणे स्वं मूत्रमासिच्यापसलवि त्रिः परिषिञ्चन्परीयात्-परि त्वा गिरेरहं परिमातुः परिस्वसुः परिपित्रोश्च भ्रात्रोश्च सख्येभ्यो विसृज्याम्यहम् । उतूल परिमीढोऽसि परिमीढः क्व गमिष्यसीति ॥२॥**

भावार्थः जब त्यो दास सुतिराखेको हुन्छ तब जीवित पशु गाई, भैंसीको सिङमा आफ्नो मुत्र भरी त्यो दासको बायाँ तिरबाट दायाँतिर तीन पटक घुम्नू र 'परि त्वा...' मन्त्र पढी उसको शरीरमा मूत्र छर्कनू ।

मन्त्रार्थः हे दास ! म तिमिलाई पहाडबाट तानेर आमाबाबु, भाईबहिनी र मित्रबाट अलग पारी आफूमा अनुरक्त पार्दछु । अब तिमि मन्त्र शक्तिले बाँधिएका छौ । अब तिमि मलाई छाडी कहिँ जान सक्दैनौ ।

**स यदि भ्रम्याद्वावाग्निमुपसमाधाय घृताक्तानि कुशेण्ड्वानि जुहुयात् परि त्वा ह्वलनो ह्वलनिर्वृत्तेन्द्रवीरुधः । इन्द्रपाशेन सित्वा मह्यं मुक्त्वाऽथान्यमानयेदिति ॥३॥**



भावार्थः यसपछि पनि उ स्वेच्छाचारी हुन नछाडे यो दोश्रो कर्म गर्नू । पञ्चभूसंस्कारपूर्वक अरण्याग्निको स्थापना गरी त्यसमा आधारादि चौध आहुति दिनू, फेरी तीन कुशलाई घिउमा भिजाई 'परि त्वा ह्वलनो...' आदि मन्त्रले आहुति दिनू ।

मन्त्रार्थः हे चञ्चल दास ! हुन त तिमि मेरो नियन्त्रण बाहिर गएका छौ त्यसैले यो प्रज्वलित होमाग्नि रुपी इन्द्रपाशले म तिमिलाई बाँधी अर्को ठाऊँ जहाँ तिम्रो मन रमाउने गरेको छ त्यबाट हटाएर आफूमा तिमीलाई केन्द्रित गर्दछु ।

### क्षेम्यो ह्येव भवति ॥४॥

भावार्थः यसो गर्दा निश्चय नै दास आफ्नो वशमा हुन्छ ।

इति सप्तमी कण्डिका

दास वशीकरणका बारेमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत तेश्रो काण्ड, सातौं कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

## अष्टमी कण्डिका

### शूलगवः ॥१॥

भावार्थः अब स्वर्ग पाउन शूलगव नामक याग (यज्ञ) विशेषको विधि बताइन्छ ।

### स्वर्ग्यः पशव्यः पुत्र्यो धन्यो यशस्य आयुष्यः ॥२॥

भावार्थः यसको अनुष्ठानले जजमानलाई स्वर्ग, पशु, पुत्र, धन, यश र दीर्घ आयु मिल्दछ ।

### औपासनमरण्यꣳहृत्वा वितानꣳसाधयित्वा रौद्रं पशुमालभेत ॥३॥ साण्डम् ॥४॥

भावार्थः औपासन अर्थात आवसथ्याग्निलाई जङ्गलमा लगी त्यहाँ पाल हाली शुल्ब शास्त्र विधिले रुद्रदेवताको लागि बोकाको बली दिनू । त्यो पशु खसी पारिएको नहोस् ।

### गौर्वा शब्दात् ॥५॥



भावार्थः अथवा 'शूलगव' कर्ममा 'गो' शब्दको उल्लेख छ । त्यसैले रुद्रका लागि गवालम्भन नै गरिनु पर्दछ, बोकाको बली होइन ।

### वपाꣳश्रपयित्वा स्थालीपाकमवदानानि च रुद्राय वपामन्तरिक्षाय वसाꣳस्थालीपाकमिश्राण्यवदानानि जुहोत्यग्नये रुद्राय शर्वाय पशुपतये उग्रायाशनये भवाय महादेवायेशानायेति च ॥६॥

भावार्थः बोसो पकाएर स्थालीपाक तथा कलेजो आदि पकाएर 'अन्तरिक्षाय वसाम्...' आदि मन्त्रले रुद्रका लागि बोसोको आहुति दिनू । अग्नये, रुद्राय, शर्वाय, पशुपतये, उग्राय, अशनये, भवाय, महादेवाय र इशानाय स्वाहा भनी यिनलाई स्थालीपाक मिसिएको हृदयादिका टुक्राको होम हाल्नू । (डा. हरिदासले वपाको अर्थ जौको बीजलाई कुटीपिसी घिउ र चिनीमा मिलाएर बनाइने स्थालीपाक भनेका छन् )

### वनस्पतिः ॥७॥ स्विष्टकृदन्ते ॥८॥ दिग्व्याघारणम् ॥९॥

भावार्थः वनस्पति र स्विष्टकृत् आहुतिका बीचमा दिशाका नाममा छ आहुति हाल्नू । (दिशः, प्रदिशः, आदिशः, विदिशः, उद्दिशः, दिग्भ्यः स्वाहा) ।

**व्याघारणान्ते पत्नीः संयाजयन्तीन्द्राण्यै रुद्राण्यै शर्वाण्यै भवान्या अग्निं गृहपतिमिति ॥१०॥**

भावार्थः दिशाहोम पछि जजमानकी पत्नीले पशुको तिघ्राको : यी पाँच आहुति दिनु-इन्द्राण्यै, रुद्राण्यै, शर्वाण्यै, भवान्यै, अग्नये र गृहपतये स्वाहा ।

**लोहितं पालाशेषु कूर्चेषु रुद्राय सेनाभ्यो बलिꣳ हरति-**
**१.यास्ते रुद्र पुरस्तात् सेनास्ताभ्य एष बलिस्ताभ्यस्ते नमः ।**
**२. यास्ते रुद्र दक्षिणतः सेनास्ताभ्य एष बलिस्ताभ्यस्ते नमः ।**
**३. यास्ते रुद्र पश्चात् सेनास्ताभ्य एष बलिस्ताभ्यस्ते नमः ।**
**४. यास्ते रुद्रोत्तरतः सेनास्ताभ्य एष बलिस्ताभ्यस्ते नमः ।**
**५. यास्ते रुद्रोपरिष्टात् सेनास्ताभ्य एष बलिस्ताभ्यस्ते नमः ।**
**६. यास्ते रुद्राधस्तात् सेनास्ताभ्य एष बलिस्ताभ्यस्ते नमः ॥११॥**



भावार्थः यसपछि महाव्याहृतिले प्राजापत्यान्त नौ आहुति पनि हाल्नु र संस्रवप्राशन र दक्षिणा दान गर्नू । यसपछि पशुको रक्तिलाई पलाशको पातमा र कुशासनमा हाली 'ॐ यास्ते...' आदि छ मन्त्रले रुद्रदेवताका सेनालाई छ बलि प्रदान गरियोस् ।

**ऊवध्यं लोहितलिप्तमग्नौ प्रास्यत्यधो वा निखनति ॥१२॥**

भावार्थः रक्तिले लतपत मलाशयको थैलीलाई आगोमा हालिदिनू या जमिनमा गाडिदिनू ।

**अनुवातं पशुमवस्थाप्य रुद्ररुपतिष्ठते, प्रथमोत्तमाभ्यां वाऽनुवाकाभ्याम् ॥१३॥**

भावार्थः पशुका बाँकी बचेका शरीरका अवयवलाई हावा जातातिर बहेको छ उतैतिर राखी रुद्राध्यायका मन्त्रले या त्यसका प्रथम र अन्तिम अनुवाकले स्तुति गर्नू ।

**नैतस्य पशोर्ग्रामꣳ हरति ॥१४॥**

भावार्थः यो रुद्रयज्ञको बलि (मासु) लाई जङ्गलबाट गाऊँमा लेराइँदैन ।

## एतेनैव गोयज्ञो व्याख्यातः ॥१५॥

भावार्थः यही शूलगवका विधानले नै गोयज्ञको विधिको पनि सम्पादन गर्दछ ।

## पायसेनानर्थलुप्तः ॥१६॥

भावार्थः यसको अर्थ यो होइन कि शूलगवका देवताको होम पायसचरुले हुँदैन ।

## तस्य तुल्यवया गौर्दक्षिणा ॥१७॥

भावार्थः शूलगवमा प्रयुक्त पशुझैँ वा त्यही उमेरको गाई ब्राह्मणलाई दक्षिणामा दिनु पर्दछ ।

इति अष्टमी कण्डिका

✷

शूलगव यज्ञ विशेषका बारेमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत तेश्रो काण्ड, आठौं कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो



✷

## नवमी कण्डिका

**अथ वृषोत्सर्गः ॥१॥**

भावार्थः अब वृषोत्सर्गको विधान बताइन्छ ।

**गोयज्ञेन व्याख्यातः ॥२॥**

भावार्थः यसको फल पनि गोयज्ञ सरह जान्नू ।

**कार्त्तिक्यां पौर्णमास्याँ रेवत्यां वाऽऽश्वयुजस्य ॥३॥**

भावार्थः कार्तिक पूर्णिमा वा आश्विन महिनाको रेवती नक्षत्रमा वृषोत्सर्ग गर्नु पर्दछ ।

**मध्येगवाँ सुसमिद्धमग्निं कृत्वाऽऽज्यꣳ संस्कृत्येहरतिरिति षट् जुहोति प्रतिमन्त्रम् ॥४॥**



भावार्थः गाईका बीचमा आगो बालेर आज्य संस्कार गर्नू । यसपछि 'इह रतिः, इह रमध्वं, इह धृतिः, इह स्वधृतिः, उपसृजन् धरुणं मात्रे धरुणो मातरं धयन् र रायस्पोषमस्मासुदीधरत् स्वाहा भनी छ आहुति दिनू ।

**'पूषा गा अन्वेतु नः पूषा रक्षत्वर्वतः । पूषा वाजꣳ सनोतु नः स्वाहा' इति पौष्णस्य जुहोति ॥५॥**

भावार्थः 'पूषा गाः...' आदि मन्त्रले एक आहुति पूषालाई दिइयोस् ।

मन्त्रार्थः पूषन् देव ! मलाई गाई र अन्न दिनुहोस्, मेरो प्राणलाई सधैं स्वस्थ बनाइ राख्नुहोस् ।

**रुद्राञ्जपित्वैकवर्णं द्विवर्णं वा यो वा यूथं छादयति यं वा यूथं छादयेद्रोहितो वैव स्यात् । सर्वाङ्गैरुपेतो जीववत्सायाः पयस्विन्याः पुत्रो यूथे च रूपस्वित्तमः स्यात्तमलङ्कृत्य यूथे मुख्याश्चतस्रो वत्सतर्यस्ताश्चलङ्कृत्य-एतं युवानं पतिं वो**

## ददामि तेन क्रीडन्तीश्चरथ प्रियेण । मा नः साप्तजनुषाऽसुभगा रायस्पोषेण समिषा मदेमेत्येतयैवोत्सृजेरन् ॥६॥

भावार्थः पहिले रुद्राध्यायका मन्त्र जप गर्नू । फेरी 'एतं...' आदि मन्त्र जप्दै गाईका चार बाच्छीका साथ जवान साँढिलाई अलंकृत गरी छोड्नू । साँढि एकरङ्गी वा दुई रङ्गी होस् र बथानलाई ढाक्नका लागि पूर्ण शक्तिशाली होस् । बाच्छी रातो र स्वस्थ होस् । उसकी माता सवत्सा होस् । दूधालु होस् र आफ्नो बथानमा सर्वाधिक सुन्दर होस् ।

मन्त्रार्थः बाच्छी हो ! यो जवान र बलियो साँढिको रुपमा म तिमीलाई पति प्रदान गर्दछु । तिमी आफ्नो यस पतिका साथ उफ्री खेली आनन्दले घुम । यो तिम्रो सात जन्मको साथी हो, तिमी सौभाग्यवती हौ । तिमी ममाथि दयालु बन र तिम्रा कृपाले म पनि समृद्धशाली बनू ।

## नभ्यस्थमभिमन्त्रयते मयोभूरित्यनुवाकशेषेण ॥७॥

भावार्थः बाच्छीका बीचमा उभिएको त्यो साँढिका सामु उभिएर 'केन मयोभूः (शु.य.वे. १८।४५-५०)' आदि अनुवाकले स्तुति गर्नू ।



## पायस-प्राशनम् सर्वासां पयसि पायसꣳ श्रपयित्वा ब्राह्मणान् भोजयेत् ॥८॥

भावार्थः जसका जति गाई छन् ती सबैको दूधले खीर बनाएर यथाशक्ति ब्राह्मणलाई भोजन गराउनू ।

## पशुमप्येके कुर्वन्ति । तस्य शुलगवेन कल्पो व्याख्यातः ॥९-१०॥

भावार्थः केही आचार्यले पशुको आलम्भन पनि गर्न सकिने बताएका छन् । शूलगवको प्रसङ्गमा आलम्भन विधि बताइ सकिएको छ ।

इति नवमी कण्डिका

✷

शूलगव यज्ञका बारेमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत तेश्रो काण्ड, नवौं कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## दशमी कण्डिका

### अथोदकर्म ॥१॥

भावार्थः अब जलदानका बारेमा बताइन्छ ।

### अद्विवर्षे प्रेते मातापित्रोराशौचम् ॥२॥ शौचमेवेतरेषाम् ॥३॥ एकरात्रं त्रिरात्रं वा ॥४॥

भावार्थः दुई वर्ष मुनिका बालकको मृत्युमा मातापितालाई आशौच लाग्दछ । अरु आफन्त नुहाउनाले शुद्ध हुन्छन् । मातापिता एक वा तीन रातमा शुद्ध हुन्छन् ।

### शरीरदग्ध्वा निखनन्ति ॥५॥

भावार्थः दुई वर्ष मुनिका बालकको अग्निसंस्कार हुँदैन खाल्टो खनी गाडिन्छ ।



### अन्तःसूतके चेदोत्थानादाशौचꣳसूतकवत् ॥६॥

भावार्थः जननाशौचको बिचमा अन्य अशुद्धि पूर्व-सूतक नचोखिँदै आई परे अघिल्लो सूतकको बाँकी दिनले नै पछिल्लोको शुद्धि हुन्छ ।

### नात्रोदककर्म ॥७॥

भावार्थः जलाञ्जली दिइँदैन ।

### द्विवर्षप्रभृति प्रेतमाश्मशानात् सर्वेऽनुगच्छेयुः ॥८॥

भावार्थः दुई वर्षको बालकको मरणमा सबै सपिण्डी घाट सम्म जानू (दाहसंस्कार गर्नू) ।

### यमगाथां गायन्ती यमसूक्तं च जपन्त इत्येके ॥९॥

भावार्थः कसैले यमगाथा गाउँदै र यमसूक्त जप्दै घाट सम्म जानु भनेका छन् ।

## यद्युपेतो भूमिजोषणादिसमानमाहिताग्नेरोदकान्तस्य गमनात् ॥१०॥

भावार्थः उपनयन पछि मर्ने बालकको भूमि संस्कारदेखि जलाञ्जलि दानसम्मका कर्म आहिताग्निको सरह गर्नू ।

## शालाग्निना दहन्त्येनमाहितश्चेत् ॥११॥

भावार्थः मर्नुभन्दा पहिले गृह्याग्निको स्थापना गर्ने व्यक्तिको मृत्युपछिको दाहसंस्कार शालाग्निले नै गर्नु पर्दछ ।

## तूष्णीं ग्रामाग्निनेतरम् ॥१२॥

भावार्थः मर्नुभन्दा पहिले गृह्याग्निको स्थापना नगर्नेलाई चुपचाप बिना मन्त्र लौकिक अग्नि दिनू ।

## संयुक्तं मैथुनं वोदकं याचेरन्नुदकं करिष्यामह इति ॥१३॥



भावार्थः कोही यौनतः सम्बन्धी ( सालो) भए उसँग 'उदकं करिष्यामहे' आदि मन्त्र पढ्दै बन्धुजन जलदानको आज्ञा मागुन् ।

## कुरुष्वं मा चैवं पुनरित्यशतवर्षे प्रेते ॥१४॥

भावार्थः सालोले सय वर्ष मुनिकाको मरणमा 'कुरुध्वं मा चैवं पुनः' (यस्तो कर्म तिमिले फेरी गर्नू हुँदैन) भन्नू ।

## कुरुध्वमित्वेतरस्मिन् ॥१५॥

भावार्थः सय वर्षको आयु भोगी मरे 'कुरुध्वं' (गर) भन्नू ।

## सर्वे ज्ञातयोऽपोभ्यवयन्त्यासप्तमातत्पुरुषाद्दशमाद्वा ॥१६॥

भावार्थः दाहसंस्कार पछि नदी वा तलाउमा गई स्नान गर्नू, सात वा दश पुस्तासम्मका सबै सम्बन्धी जलमा प्रवेश गर्नू ।

## समानग्रामवासे यावत्सम्बन्धमनुस्मरेयुः ॥१७॥

भावार्थः एउटै गाउँमा बस्ने जति पनि मृतकका आफन्त छन् वा मृतकलाई आफन्त मान्दछन् ती सबैले नुहाउनु पर्दछ ।

## एकवस्त्राः प्राचीनावीतिनः ॥१८॥ सव्यस्यानामिकयाऽपनोद्यापनः शोशुचदघमिति ॥१९॥ दक्षिणामुखा निमज्जन्ति ॥२०॥

भावार्थः एउटा वस्त्रमात्र लगाउनू, अपसव्य हुनू, बायाँ हातको साहिँली औंलाले पानी पन्छाएर 'अपनः शेशुचदघम्... यजु.३५।६' मन्त्र पढ्दै स्नान गर्नू । स्नान गर्दा दक्षिण फर्कनू ।

## प्रेतायोदकꣳ सकृत्प्रसिञ्चन्त्यञ्जलिनाऽसावेतत्त उदकमिति ॥२१॥

भावार्थः स्नानपछि 'असौ अमुकप्रेत एतत्त उदकम्' भनी एक पटक जलाञ्जलि दिनू ।

## उत्तीर्णाञ्छुचौ देशे शाड्वलवत्युपविष्टाँस्तत्रैतानपवदेयुः ॥२२॥



भावार्थः पानीबाट निक्ली पवित्र, हरियो चौरमा बसेका मृतकका नातेदारलाई मृतकका गुण बताउँदै संसारको अनित्यताको उपदेश दिँदै तिनको शोक हटाउनू ।

## अनवेक्षमाणा ग्राममायान्ति रीतीभूताः कनिष्ठपूर्वाः ॥२३॥

भावार्थः पछाडि फर्केर नहेरी कम उमेरकालाई अघि लाएर लामवद्ध भई सबै गाउँमा फर्कनू ।

## निवेशनद्वारे पिचुमन्दपत्राणि विदश्याचम्योदकमग्निं गोमयं गौरसर्षपाँस्तैलमालभ्याश्मानमाक्रम्य प्रविशन्ति ॥२४॥

भावार्थः घरको ढोकामा राखिएको निमको पातलाई पहिले दाँतले चपाउनू त्यसपछि आचमन गर्नू । फेरी पानी, आगो, घिउ, गोबर, सर्स्यूँ र तिलको तेललाई छुनू । अनि पत्थरलाई नाघेर त्यसपछि घरभित्र छिर्नू ।

## त्रिरात्रं ब्रह्मचारिणोऽधः शयिनो न किञ्चन कर्म कुर्युर्न प्रकुर्वीरन् ॥२५॥

भावार्थः कर्त्ता पुरुष तीन दिनसम्म जमिनमा सुत्नू, ब्रह्मचर्यमा रहनू, आफैंले पनि कुनै लौकिक कर्म नगर्नू र अरुबाट पनि नगराउनू ।

**क्रीत्वा लब्ध्वा वा दिवैवान्नमश्नीयुरमा ँ सम् ॥२६॥**

भावार्थः किनेर वा नमागिकन दिनमा जेजति अन्न मिल्छ, त्यो दिनमै खानू । यो अवधिमा मासु नखानू ।

**प्रेताय पिण्डं दत्त्वाऽवनेजनदानप्रत्यवनेजनेषु नामग्राहम् ॥२७॥**

भावार्थः मृतकको नाम सम्झँदै पिण्डदानार्थ तयार पारिएको वेदीमा ओछ्याइएका कुशमा जल छर्कनू ।

**मृन्मये ता ँ रात्रीं क्षीरोदके विहायसि निदध्युः प्रेतात्र स्नाहोति ॥२८॥**

भावार्थः मरेकै दिन माटोको भाँडामा दुधपानी मिसाई 'प्रेतात्र स्नाहि...' मन्त्रले आकाश वा अग्लो स्थानको काठ आदिमा त्यो भाँडो झुन्ड्याउनू ।



**त्रिरात्र ँ शावमाशौचम् ॥२९॥**

भावार्थः मरणाशौच तीन दिन रहन्छ ।

**दशरात्रमित्येके ॥३०॥**

भावार्थः कसैले दश रात रहने कुरा बताउँदछन् ।

**न स्वाध्यायमधीयीरन् ॥३१॥**

भावार्थः आशौचभर वेदको अध्ययन र अध्यापन नगर्नु नगराउनू ।

**नित्यानि निवर्तेरन्वैतानवर्जम् ॥३२॥**

भावार्थः गार्हपत्यादि अग्निसाध्य कर्मबाहेकका सन्ध्याबन्धनादि नित्यकर्म यस स्थितिमा पनि गर्नु पर्दछ ।

## शालाग्नौ चैके ॥३३॥ अन्य एतानि कुर्युः ॥३४॥

भावार्थः कसैले शालाग्नि साध्यकर्म आफैंले नगर्नू तर अरुबाट गराउनु पनि भनेका छन् ।

## प्रेतस्पर्शिनो ग्रामं न प्रविशेयुरानक्षत्रदर्शनात् ॥३५॥

भावार्थः लाश छुनेले तारा नदेखिएसम्म गाऊँमा नछिर्नू ।

## रात्रौ चेदादित्यस्य ॥३६॥

भावार्थः रातमा शवस्पर्श भए सूर्योदय नभई घरमा नछिर्नू ।

## प्रवेशनादि समानमितरैः ॥३७॥

भावार्थः प्रवेशसम्बन्धी यो नियम मृतकका आफन्त लगायत सबैमा लागू हुन्छ ।



## पक्षं द्वौ वाऽऽशौचम् ॥३८॥

चार वर्णलाई क्रमशः दश, बाह्र, पन्ध्र र तीस दिन आशौच रहन्छ ।

## आचार्ये चैवम् ॥३९॥ मातामहयोश्च ॥४०॥

भावार्थः आचार्य, मावली हजूरबा र मावली हजूरआमाको मरणमा पनि यस्तै कर्म गर्नू ।

## स्त्रीणां चाप्रत्तानाम् ॥४१॥

भावार्थः अविवाहित कन्याको मरणमा पनि निखनन, दहन, उदकदान आदि कर्म गर्नू ।

## प्रत्तानामितरे कुर्वीरन् ॥४२॥ ताश्च तेषाम् ॥४३॥

भावार्थः विवाहिता स्त्रीको दाहसंस्कार उनका पतिले र विवाहिता स्त्रीले आफ्नो पतिको दाहसंस्कार गर्नू ।

## प्रोषितश्चेत्प्रेतयाच्छ्रवणप्रभृति कृतोदकाः कालशेषमासीरन् ॥४४॥

भावार्थः पति परदेश हुने स्त्रीको उदकादि कर्म उनका पुत्रले गर्दै आशौच काल बिताउनू ।

## अतीतश्चेदेकरात्रं त्रिरात्रं वा ॥४५॥

भावार्थः आशौचको अवधि सकिएर थाहा पाइए एक दिन वा तीन दिन अशुद्धि हुन्छ ।

## अथ कामोदकान्यृत्विक्श्वसुरसखिसम्बन्धिमातुलभागिनेयानाम् ॥४६॥ प्रत्तानाञ्च ॥४७॥

भावार्थः यो सामान्य नियम हो । विशेष परिस्थितिमा विभिन्न स्मृतिकारका वचन मान्य छन् । यस सन्दर्भमा केही स्वैच्छिक कर्मका पनि विधान छन् । यज्ञ गराउने पुरोहित, सासुससुरा, मामाभानिज, बिबाहित दीदिबहिनी वा छोरी, साथी एवं सम्बन्धीलाई जलाञ्जली दिने कुरा दिनेको इच्छामा भर पर्दछ । यो दिन वा नदिनमा कुनै किसिमको प्रतिबन्ध छैन । 

## एकादश्यामयुग्मान् ब्राह्मणान् भोजयित्वा माꣳसवत् ॥४८॥ प्रेतयोद्दिश्य गामप्येके घ्नन्ति ॥४९॥

भावार्थः एघारौं दिन बिजोर ब्राह्मणलाई मासु सहित भोजन गराउनू । कसैले गवालम्भन पनि प्रेतका उद्देश्यले गर्नुपर्ने बताएका छन् । (पारस्कर यसमा सहमत देखिन्नन् । **कलौ च गवालम्भः निषिद्ध** । डा. हरिहर शास्त्रीले गवालम्भको अर्थ गोदान र घ्नन्ति को अर्थ पुरोहितलाई घर पुऱ्याउने भनेर पनि लेखेका छन्) ।

## पिण्डकरणे प्रथमः पितृणां प्रेतः स्यात् पुत्रवाँश्चेत् ॥५०॥

भावार्थः पुत्रले पिण्ड दिँदा पितृमध्ये ठूलोलाई पहिले पिण्ड दिनू । (अग्निहोत्री पुत्रले जेठालाई नभई पहिला अग्निहोत्री पितृलाई पिण्ड दिनू) ।

## निवर्तेत चतुर्थः ॥५१॥

भावार्थः सपिण्डीकरणपछि तीन पुस्तासम्म मात्र पिण्ड दिनू चौथो पुस्ता स्वतः छोडिन्छ ।

## संवत्सरं पृथगेके ॥५२॥

भावार्थः कसैले एक वर्षसम्म अलग पिण्डदान दिनुपर्ने भनेका छन् ।

## न्यायस्तु न चतुर्थः पिण्डो भवतीति श्रुतेः ॥५३॥

भावार्थः तर अलग पिण्डदान गर्नु 'चौथो पिण्ड हुँदैन' भन्ने श्रुतिको वचनको विरुद्ध हुने हुनाले अलग पिण्डदान नगर्नू ।

## अहरहन्नमस्मै ब्राह्मणायोदकुम्भं च दद्यात् ॥५४॥

भावार्थः एक वर्षसम्म दिनहुँ मृतकका लागि ब्राह्मणलाई अन्न र जलले भरिएको घडा दान दिनु पर्दछ ।

## पिण्डमप्येके निपृणन्ति ॥५५॥



भावार्थः एक वर्षसम्म मृतकका लागि कसैले दिनहुँ पिण्डदान गर्नु भनेका छन् ।

इति दशमी कण्डिका

✷

अन्तिम संस्कारका बारेमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत तेश्रो काण्ड, दशौं कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## एकादशी कण्डिका

**पशुश्चेदाप्लाव्यागामग्रेणाग्नीन्परीत्य पलाशशाखां निहन्ति ॥१॥**

भावार्थः यदि पशुकर्मको अनुष्ठान गर्ने हो भने गाई बाहेकका अरु पशुलाई नुहाएर अगाडिबाट होमाग्निको प्रदक्षिणा गरी पलाँसको हाँगामा बाँध्नू ।

**परिव्ययणोपाकरणनियोजनप्रोक्षणान्यावृता कुर्याद्यच्चान्यत् ॥२॥**

भावार्थः पशुका सामु बाह्र हातको डोरीलाई तेब्बर पारी पलाँसको हाँगामा चारैतिर बेर्नू, छेस्काले पशुलाई छुनू, आठ हातको डोरी दोब्बर पारी सिङका बीचमा बाँधिएको पशुलाई पलाशको हाँगामा बाध्नू, प्रोक्षणी पात्रको जलले पशुको शरीरमा छर्कनू-यी सबै कर्म तथा अरु पशु-संस्कार पनि पशु-प्रकरणमा बताइएका विधानले बिनामन्त्र गरियोस् ।

**परिपशव्ये हुत्वा तूष्णीमपराः पञ्च ॥३॥**

भावार्थः घिउको परिशव्य नामक दुई आहुति दिई बिनामन्त्र अरु पाँच आहुति दिनू ।

**वपोद्धरणं चाभिघारयेत् ॥४॥**

भावार्थः पशुको नाइटोको बोसो हातमा लिई त्यसलाई घिउले भिजाउनू ।

**देवतां चादिशेदुपाकरणनियोजनप्रोक्षणेषु ॥५॥**

भावार्थः उपाकरण, नियोजन तथा प्रोक्षणका समयमा देवतालाई आदिष्ट गर्नू ।

**स्थालीपाके चैवम् ॥६॥**

भावार्थः चरुमा पनि 'अमुष्मै त्वा उपाकरोमि' आदि भनी देवतालाई आदिष्ट गर्नू ।

**वपा ँ हुत्वाऽवदानान्यवद्यति सर्वाणि त्रीणि पञ्च वा ॥७॥**

भावार्थः बोसोको होम गरेर पशुका बाँकी अङ्गमध्ये तीन, पाँच वा सबै अङ्ग काट्नू ।

## स्थालीपाकमिश्राण्यवदानानि जुहोति ॥८॥

भावार्थः यिनलाई स्थालीपाकमा मिसाएर होम गर्नू ।

## पश्वङ्गं दक्षिणा ॥९॥

भावार्थः यो होमको दक्षिणामा पनि पशु-अङ्ग नै दिनु पर्दछ ।

## यद्देवते तद्देवतं यजेत्तस्मै च भागं कुर्यात्तं च ब्रूयादिममनुप्रापयेति ॥१०॥

भावार्थः जुन देवतालाई प्रसन्न पार्न यो पशुकर्म गरिएको हो होम पछि उनको पूजा गर्नू र 'ॐ इममनुप्रापय' आदि भनी अर्घ्य दिनू ।

## नद्यन्तरे नावं कारयेन्न वा ॥११॥

भावार्थः यो पशुकर्म गर्नेले नदीको बीचको कुनै द्वीपमा गर्नू अन्यथा यो कर्म वैकल्पिक हो ।



इति एकादशी कण्डिका

✷

पशु होम विशेषका बारेमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत तेश्रो काण्ड, एघारौँ कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## द्वादशी कण्डिका

### अथातोऽवकीर्णिप्रायश्चित्तम् ॥१॥

भावार्थः अब अवकीर्णीको प्रायश्चितको विधि बताइन्छ ।

### अमावश्यायां चतुष्पथे गर्दभं पशुमालभते ॥२॥

भावार्थः औंसीका दिन कुनै चौबाटोमा कुनै गधाको आलम्भन गर्नू ।

### निर्ऋतिं पाकयज्ञेन यजेत ॥३॥

भावार्थः 'निर्ऋति' देवताको पूजन-यजन पाकयज्ञले गर्नू ।

### अप्स्ववदानहोमः ॥४॥



भावार्थः पशुका काटिएका अङ्गलाई देवताका निमित्त पानीमा फ्याँक्नू ।

### भूमौ पशुपुरोडाशश्रपणम् ॥५॥

भावार्थः जमिनमा त्यो पशुको पुरोडाश पकाउनू ।

### तां छविं परिदधीत ॥६॥ ऊर्ध्वबालामित्येके ॥७॥ संवत्सरं भिक्षाचर्यं चरेत् स्वकर्म परिकीर्तयन् ॥८॥

भावार्थः मारिएको गधाको छाला ओढ्नू । कसैले त्यसको पुच्छर भएको भाग माथितिर तेर्सो रहनुपर्ने भनेका छन् । त्यसपछि एकवर्षसम्म 'मैले ब्रह्मचर्य व्रत भङ्ग गरेको छु, त्यसै म अवकीर्णि हुँ' भन्दै भिक्षा मागेर खानू ।

### अथापरमाऽऽज्याहुती जुहोति-कामावकीर्णोऽस्म्यवकीर्णोऽस्मि कामकामाय स्वाहा । कामाभिद्रुग्धोऽस्म्यभिद्रुग्धोऽस्मि कामकामाय स्वाहेति ॥९॥

भावार्थः प्रायश्चित पछि 'कामाव..' आदि मन्त्रले घिउको दुई आहुति हाल्नू ।

मन्त्रार्थः हे मदन ! तिमीले मलाई क्षुब्ध गरेका छौ । तिम्रै कारण मैले व्रत भङ्ग गरेँ । तिमीले मलाई क्षुब्ध गरेका छौ त्यसैले कामशोधनका लागि हविष्मान् बनेको छु ।

**अथोपतिष्ठते-सं मा सिञ्चन्तु मरुतः समिन्द्रः सं बृहस्पतिः । सं मायमग्निः सिञ्चतु प्रजया च धनेन चेति ॥१०॥ एतदेव प्रायश्चित्तम् ॥११॥**

भावार्थः होम पछि एक वर्षसम्म मरुद्गण, इन्द्र, बृहस्पति र अग्निको प्रार्थना गर्दै रहनू । यही नै व्रतभङ्गको प्रायश्चित हो ।

इति द्वादशी कण्डिका

✷

अवकीर्णिको प्रायश्चितका बारेमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत तेश्रो काण्ड, बाह्रौं कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## त्रयोदशी कण्डिका

### अथातः सभाप्रवेशनम् ॥१॥

भावार्थः अब सभा प्रवेशको विधि बताइन्छ ।

### सभामभ्येति-सभाङ्गिरसि नादिर्नामासित्विषिर्नामासि तस्यै ते नम इति ॥२॥

भावार्थः ब्राह्मणले 'ॐ सभाङ्गिरसि...' मन्त्र पढ्दै अगिल्तिरबाट सभामा छिर्नू ।

मन्त्रार्थः हे अङ्गिरा ! हजूर कान्तिपूर्ण तथा शब्दशील सभाका अधिष्ठाता हुनुहुन्छ, त्यसैले हजुरलाई नमस्कार छ ।

### अथ प्रविशति-सभा च मा समितिश्चोमे प्रजापतेर्दुहितरौ सचेतसौ । यो मा न विद्यादुपमा स तिष्ठेत्स चेतनो भवतु शꣳसथे जन इति ॥३॥



भावार्थः 'सभा च...' आदि मन्त्र पढ्दै सभामा छिर्नू ।

मन्त्रार्थः प्रजापतिका दुई छोरी सभा र समिति हुन् । यी उन्नत र प्रत्यक्ष ज्ञानदायिनी हुन् । सभा आफ्ना सभासद्लाई भन्दछिन्-यस्तो व्यक्ति जसलाई सभाको शिष्टाचार थाहा छैन, उ सभामा नबस्नू । सभामा बस्नेको वुद्धि तीक्ष्ण हुनु पर्दछ र उ भाषण गर्न प्रवीण हुनु पर्दछ ।

### पर्षदमेत्य जपेत्-अभिभूरहमागमविराडप्रतिवाश्याः । अस्याः पर्षद ईशानः सहसा सुदुष्टरो जन इति ॥४॥

भावार्थः सभामा छिरेपछि 'अभिभूरहम्' आदि मन्त्र जप गर्नू ।

मन्त्रार्थः अरुलाई आक्रान्त पार्ने, निर्विघ्न शक्तिको, प्रतिवादशून्य म अब यस सभामा आएको छु । यो सभाको अध्यक्ष यदि दुष्ट स्वभावको छ ता पनि उसले ममाथि शिष्टतापूर्वक व्यवहार गरोस् ।

**स यदि मन्येत क्रुद्धोऽयमिति तमभिमन्त्रयते-या त एषा रराट्या तनूर्मन्योः क्रोधस्य नाशनी । तां देवा ब्रह्मचारिणो विनयन्तु सुमेधसः । द्यौरहं पृथिवी चाहं तौ ते क्रोधं नयामसि गर्भमश्वतर्यसहासाविति ॥५॥**

भावार्थः कुनै कारणले सभापति रिसाए रिसशान्त पार्न 'या त एषा...' मन्त्र प्रयोग गर्नू ।

मन्त्रार्थः हे सभापति ! तिम्रो रातो मुहारमा देखिएको रिसका रेखालाई मेधावी तथा ब्रह्मचर्यव्रती देवगण हटाउन् । म धरती र आकाशको एकाकार शक्तिको प्रतिक हुँ । म आफ्नो मन्त्रशक्तिले तिम्रो रिस त्यसरी हटाइरहेछु जसरी असह्य गर्भ भार सहन असमर्थ खच्चड दुःख पर हटाइ दिन्छे ।

**अथ यदि मन्येत द्रुग्धोऽयमिति तमभिमन्त्रयते-तां ते वाचमास्य आदत्ते हृदय आदधे यत्र यत्र निहिता वाक् तां ततस्तत आददे यदहं ब्रवीमि तत् सत्यमधरो मत्तांद्यस्वेति ॥६॥ एतदेव वशीकरणम् ॥७॥**

भावार्थः यदि उसले केही अनिष्ट गर्न चाहे 'तां ते वाचमास्य...' मन्त्रले अभिमन्त्रित गर्नू । यो वशीकरण मन्त्र हो ।



मन्त्रार्थः हे सभापति ! मलाई अनिष्ट वचन नगर । तिम्रो कल्याण यसैमा छ कि मप्रतिको द्रोहको भावना हटाई आफ्नो नीचता छोड र तिमि मेरो आफ्नो बन ।

इति त्रयोदशी कण्डिका

सभा प्रवेश विधिका बारेमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत तेश्रो काण्ड, तेह्रौं कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

## चतुर्दशी कण्डिका

### अथातो रथारोहणम् ॥१॥

भावार्थः अब रथारोहणको विधि बताइन्छ ।

### युङ्क्तेति रथं सम्प्रेष्य युक्त इति प्रोक्ते सा विराडित्येत्य चक्रे अभिमृशति ॥२॥ रथन्तरमसीति दक्षिणम् ॥३॥ बृहदसीत्युत्तरम् ॥४॥

भावार्थः 'रथ तयार गर' भनी सारथीलाई पठाउनू । उसले तयार भो भने पछि 'सा विराट्...' मन्त्र पढी रथको नजिकै गई चक्का छुनू । त्यसपछि 'रथन्तरम् ...' मन्त्रले दाहिने चक्का र 'बृहदसि...' मन्त्रले देब्रे चक्का छुनू ।

### वामदेव्यमसीति कूबरीम् ॥५॥

भावार्थः 'वामदेव्यमसि' मन्त्रले रथको जुआ छुनू ।



### हस्तेनोपस्थमभिमृशति-अङ्कौ न्यङ्कावभितो रथं यौ ध्वान्तं वाताग्रमनुसञ्चरन्तम् । दूरेहेतिरिन्द्रियवान्पतत्रि ते नोऽग्नयः पप्रयः पारयन्त्विति ॥६॥ नमो माणिचरायेति दक्षिणं धुर्यं प्राजति । गवां मध्ये स्थापयति ॥७॥

भावार्थः 'अङ्कौ...' आदि मन्त्र पढी हातले रथको बिचभाग छुनू । 'नमो माणिचराय' मन्त्र पढी नारिएका घोडालाई अगि बढ्न हिर्काउनू र देब्रे घेडालाई चुपचाप अघि बढाउनू ।

### अप्राप्य देवताः प्रत्यवरोहेत्सम्प्रति ब्राह्मणान्मध्ये गा अभिक्रम्य पितृन् ॥८॥

भावार्थः देवमन्दिरलाई देखे टाढैबाट रथबाट ओर्लनू । ब्राह्मण नजिक परे, गाईको बचानका बिचमा र मान्यजन सामु आउँदा रथबाट ओर्लनू ।

### न स्त्रीब्रह्मचारिणौ सारथी स्याताम् ॥९॥

भावार्थः स्त्री र ब्रह्मचारीलाई सारथी नबनाउनू ।

**मुहूर्त्तमतीयाय जपेदिहरतिरिहरमध्वम् ॥१०॥ एके मास्त्विहरतिरिति च ॥११॥**

भावार्थः सम्माननीय व्यक्तिका सामु एकैछिन रथ रोकी रथबाट ओर्लिएर 'इह रति' आदि मन्त्र जप गर्नू । कसैले जप गर्नु पर्दैन भनेका छन् ।

**स यदि दुर्बलो रथः स्यात् तमास्थाय जपेत्-अयं वामश्विना रथो मा दुर्गे मास्तरोरिषदिति ॥१२॥ स यदि भ्रम्यात् स्तम्भमुपस्पृश्य भूमिं वा जयेत्-एष वामश्विना रथो मा दुर्गे मास्तरोरिषदिति ॥१३॥**

भावार्थः बाटोमा रथ कमजोर भए रथारोहीले ' अयं वामश्विना...' आदि मन्त्रको जप गर्नू । हिँडाउँदा रथ बाङ्गो भए रथको ध्वजदण्ड वा धरतीलाई छोई 'एष वामश्विना...' मन्त्रको जप गर्नू ।

**तस्य न काञ्चनार्त्तिर्न रिष्टिर्भवति ॥१४॥**

भावार्थः यसपछि त्यो रथीलाई कुनै किसिमको कष्ट हुँदैन ।



**या त्वाऽध्वानं विमुच्य रथं यवसोदके दापयेदेष उ ह वाहनस्यापह्नव इति श्रुते ॥१५॥**

भावार्थः लक्षित स्थानमा पुगेर बाटो छोडी रथबाट ओर्लिनू । नोकरलाई भनी घोडालाई दानापानी दिनू । श्रुतिको वचनानुसार यसले घोडाको थकाइ हट्दछ ।

इति चतुर्दशी कण्डिका

✷

रथारोहण विधिका बारेमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत तेश्रो काण्ड, चौधौं कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## पञ्चदशी कण्डिका

**अथातो हस्त्यारोहणम् ॥१॥**

भावार्थः अब हाती चढ्ने विधि बताइन्छ ।

**एत्य हस्तिनमभिमृशति-हस्तियशसमसि हस्तिवर्चसमसीति ॥२॥**

भावार्थः हाती नजिकै गई 'ॐ हस्तियशस...' मन्त्र पढी हातीलाई छुनू ।

**अथारोहति-इन्द्रस्य त्वा वज्रेणाभितिष्ठामि स्वस्ति मा सम्पारयेति ॥३॥**

भावार्थः 'ॐ इन्द्रस्य त्वा...' आदि मन्त्र पढी हातीको पीठमा चढ्नू ।

**एतेनैवाश्वारोहणं व्याख्यातम् ॥४॥**

भावार्थः यति कर्म अश्वारोहणमा पनि हुन्छ । त्यसबेला हस्तिका स्थानमा अश्व शब्दको प्रयोग गर्नू ।

**उष्ट्रमारोक्ष्यन्नभिमन्त्रयते-त्वाष्ट्रोऽसि त्वष्ट्रदैवत्यः स्वस्ति मा सम्पारयेति ॥५॥**

भावार्थः ऊँटमा चढ्ने हो भने 'ॐ त्वाष्ट्रोऽषि...' यो मन्त्रले ऊँटलाई छुनू ।

**रासभमारोक्ष्यन्नभिमन्त्रयते-शूद्रोऽसि शूद्रजन्माग्नेयो वै द्विरेताः स्वस्ति मा सम्पारयेति ॥६॥**

भावार्थः गधामा चढ्ने हो भने 'ॐ शूद्रोऽसि...' यो मन्त्रले गधालाई छुनू ।

**चतुष्पथमभिमन्त्रयते-नमो रुद्राय पथिषदे स्वस्ति मा सम्पारयेति ॥७॥**

भावार्थः 'ॐ नमो रुद्राय...' मन्त्र पढी चौबाटोलाई अभिमन्त्रित गरी तिमी मेरो कल्याण गर भन्नू ।

## नदीमुत्तरिष्यन्नभिमन्त्रयत-नमो रुद्रायाप्सुषदे स्वस्ति मा सम्पारयेति ॥८॥

भावार्थः नदी तर्नु परे 'ॐ नमो रुद्राय...' मन्त्र पढी नदीको जल छुनू ।

## नावमारोक्ष्यन्नभिमन्त्रयते-सुनावमिति ॥९॥

भावार्थः डुङ्गा चढी नदी तर्नु परे 'ॐ सुनावम्...य.सं.२१।७' मन्त्रले डुङ्गालाई अभिमन्त्रित गर्नू ।

## उत्तरिष्यन्नभिमन्त्रयते सुत्रामाणमिति ॥१०॥

भावार्थः डुङ्गाबाट ओर्लने बेलामा 'ॐ सुत्रामाणम्...य.सं.२१।६' मन्त्रले डुङ्गालाई अभिमन्त्रित गर्नू ।

## वनमभिमन्त्रयते-नमो रुद्राय वनसदे स्वस्ति मा सम्पारयेति ॥११॥

भावार्थः जङ्गलमा प्रवेश गर्न चाहे 'ॐ नमो रुद्राय वनसदे...' मन्त्रले अभिमन्त्रित गर्नू ।



## गिरिमभिमन्त्रयते-नमो रुद्राय गिरिषदे स्वस्ति मा सम्पारयेति ॥१२॥

भावार्थः पर्वत चढ्नु परे 'ॐ नमो रुद्राय गिरिषदे...' मन्त्रले अभिमन्त्रित गर्नू ।

## श्मशानमभिमन्त्रयते-नमो रुद्राय पितृषदे स्वस्ति मा सम्पारयेति ॥१३॥

भावार्थः मसान भूमिमा छिर्न परे 'ॐ नमो रुद्राय पितृषदे...' मन्त्र पढ्नू ।

## गोष्ठमभिमन्त्रयते-नमो रुद्राय शकृत्पिण्डसदे स्वस्ति मा सम्पारयेति ॥१४॥

भावार्थः 'ॐ नमो रुद्राय...' आदि मन्त्र पढी गोशालामा छिर्नू ।

## यत्र चान्यत्रापि नमो रुद्रायेत्येव ब्रूयाद्रुद्रो ह्येवेदꣳसर्वमिति श्रुतेः ॥१५॥

भावार्थः जहाँ सुकै गए पनि 'ॐ नमो रुद्राय' आदि मन्त्र पढेरै कुनै कार्य शुरु गर्नू । किनकि वेदका प्रमाणले यी सबै तथ्यका अधिष्ठाता रुद्र नै हुन् ।

**नैमित्तिकदोषनिवारणम्-सिचाऽवधूतोऽभिमन्त्रयते -सिगसि न वज्रोऽसि नमस्तेऽअस्तु मा माहिꣳसीरिति ॥१६॥**

भावार्थः आपस्तम्बका अनुसार हावामा लुगाको छेउ उड्नु अमङ्गलसूचक हो । यसबेला 'ॐ सिगसि न वज्रोऽसि' मन्त्र पढी दोष निवारण गर्नु पर्दछ ।

**स्तनयित्नुमभिमन्त्रयते-शिवा नो वर्षाः सन्तु शिवा नः सन्तु हेतयः । शिवा नस्ताः सन्तु यास्त्वꣳ सृजसि वृत्रहन्निति ॥१७॥**

भावार्थः बादल गर्जदा 'ॐ शिवा नो वर्षाः...' मन्त्र जप गर्नु पर्दछ ।

**शिवां वाश्यमानामभिमन्त्रयते-शिवो नामेति ॥१८॥**

भावार्थः स्यालको अमङ्गल आवाज सुनिए 'ॐ शिवो नाम' आदि मन्त्र जप गर्नू ।

**शकुनिं वाश्यमानमभिमन्त्रयते-हिरण्यपर्णशकुने देवानां प्रहितङ्गम । यमदूत नमस्तेऽस्तु किन्त्वाकाक्कारिणोऽब्रवीदिति ॥१९॥**

भावार्थः कागको कर्कश का का आवाज सुनिए 'ॐ हिरण्येति...' आदि मन्त्रले अभिमन्त्रित गर्नू ।

**लक्षण्यं वृक्षमभिमन्त्रयते-मात्वाऽशनिर्मा परशुर्मा वातो मा राजप्रषितो दण्डः । अङ्कुरास्ते पुरोहन्तु निवते त्वाऽभिवर्षतु । अग्निष्टेमूलं माहिꣳसीत्स्वस्ति तेऽस्तु वनस्पते स्वस्ति मेऽस्तु वनस्पत इति ॥२०॥**

भावार्थः माङ्गलिक वृक्षहरुलाई 'ॐ मा तवा...' आदि मन्त्रले अभिमन्त्रित गर्नू ।

**प्रतिग्रहविधानम्-स यदि किञ्चिल्लभेत तत् प्रतिगृह्णाति-द्यौस्त्वा ददातु पृथिवी त्वा प्रतिगृह्णात्विति । साऽस्य न ददतः क्षीयते भूयसी च प्रतिगृहीता भवति ॥२१॥**

भावार्थः ब्राह्मणलाई दक्षिणामा जमिन वा सुन मिले 'ॐ द्यौस्त्वा...' आदि मन्त्र पढी दान लिनू । यस्तो दक्षिणा दिनेलिने दुवैलाई शुभद हुन्छ ।यो विधिले दिइएको दक्षिणाले दाताको धन घट्दैन, बढ्दछ । जसले पाउँछ उसँग पनि प्रशस्त हुन्छ ।

**अथ यद्योतनं लभेत तत् प्रतिगृह्य द्यौस्त्वेति तस्य द्विः प्राश्नाति-ब्रह्मात्वाऽश्नातु ब्रह्मा त्वा प्राश्नातु इति ॥२२॥**

भावार्थः ब्राह्मणलाई भात दानमा मिलेमा पनि 'ॐ द्यौस्त्वा...' आदि तीन मन्त्र पढी दान लिनू ।

**अथ यदि मन्थं लभेत तं प्रतिगृह्य द्यौस्त्वेति तस्य त्रिः प्राश्नाति-'ब्रह्मात्वाऽश्नातु' 'ब्रह्मा त्वा प्राश्नातु' 'ब्रह्मा त्वा पिबत्वि'ति ॥२३॥**

भावार्थः ब्राह्मणलाई लस्सी दानमा मिलेमा पनि 'ॐ द्यौस्त्वा...' आदि तीन मन्त्र पढी दान लिनू । अनी 'ॐ ब्रह्मा त्वा...' आदि तीन मन्त्र पढी तीन पटक पिउनू ।

**अथातोऽधीत्याधीत्यानिराकरणम्प्रतीकं मे विचक्षणं जिह्वा मे मधु यद्वचः । कर्णाभ्यां भूरिशुश्रुवे मा त्वᳬहार्षीः श्रुतं मयि ॥ ब्रह्मणः प्रवचनमसि ब्रह्मणः प्रतिष्ठानमसि, ब्रह्मकोशोऽसि सनिरसि शान्तिरस्यनिराकरणमसि ब्रह्मकोशं मे विश । स्वरकरणकण्ठ्यौरसदन्त्यौष्ठ्यग्रहणधारणोच्चारणशक्तिर्मयि भवतु । आप्यायन्तु मेऽङ्गानि वाक् प्राणश्चक्षुः श्रोत्रं यशो बलम् ॥ वाचा त्वा पिदधामि वाचा त्वा पिद्धामीति (तिष्ठ प्रतिष्ठ) । यन्मे श्रुतमधीतं तन्मे मनसि तिष्ठतु तिष्ठतु ॥२४॥**



भावार्थः नित्य अध्ययन गरि सकेपछि 'ॐ प्रतीकं मे...तिष्ठतु' आदि मन्त्रको जप गरेर मात्र अध्ययन बन्द गर्नू ।

इति पञ्चदशी कण्डिका

रथारोहण विधिका बारेमा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत तेश्रो काण्ड, चौधौं कण्डिकाको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

॥ इति श्रीपारस्करविरचिते गृहसूत्रे तृतीयः काण्डः समाप्तः ॥

पारस्करगृह्यसूत्र अन्तर्गत तेश्रो काण्डको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

॥ इति पारस्कराचार्यकृतं गृह्यसूत्रं समाप्तम् ॥

पारस्करगृह्यसूको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

# परिशिष्टानि

## अथ वापी-कूप-तडागादि-स्थापन विधिः

**अथातो वापीकूपतडागारामदेवतायतनानां प्रतिष्ठापनं व्याख्यास्यामः । तत्रोदगयन आपूर्यमाणपक्षे पुण्याहे तिथिवार-नक्षत्रकरणे च गुणान्विते तत्र वारुणं यवमयं चरुँ श्रपयित्वाऽऽज्यभागाविष्ट्वाऽऽज्याहुतीर्जुहोति त्वं नो अग्न इमं मे वरुण तत्त्वायामि ये ते शतमयाश्चाग्न उदुत्तममुरुँ हि राजा वरुणस्योत्तम्भनमग्नेरनीकमिति दशर्चँ हुत्वा स्थालीपाकस्य जुहोत्यग्नये स्वाहा सोमाय स्वाहा वरुणाय स्वाहा यज्ञाय स्वाहोग्राय स्वाहा भीमाय स्वाहा शतक्रतवे स्वाहा व्युष्ट्यै स्वाहा स्वर्गाय स्वाहेति यथोक्तँ स्विष्टकृत् प्राशनान्ते जलचराणि क्षिप्त्वाऽलङ्कृत्य गां तारयित्वा पुरुषसूक्तं जपन्नाचार्याय वरं दत्वा कर्णविष्टकौ वासाँसि धेनुर्दक्षिणा ततो ब्राह्मणभोजनम् ।**

भावार्थः यसपछि पोखरी, कुवा, तलाउ, बगैंचा र मन्दिर स्थापनाको विधि बताइन्छ । यिनको स्थापना कुनै शुभ दिनमा नै गर्नु पर्दछ । कामदेव दीक्षितका अनुसार जब उत्तरायण हुन्छ तब शुक्लपक्षमा शुभ तिथि-दिन-नक्षत्र र करणको विचार गरी जौको साना पुरी पकाई कुशकण्डिकामा बताइएको विधिले अग्नि र सोमका लागि आहुति दिनू । यसपछि अग्नये स्वाहा आदि दश मन्त्रले स्थालीपाक हविष्यान्नले दश आहुति दिनू । यसपछि 'भू' देखि 'प्रजापति' सम्म घिउको आहुति हाल्नू । यसपछि संस्रवप्राशन गर्नू । फेरी ब्रह्मालाई दक्षिणा दिनू । तदनन्तर माछा वा अन्य जलजर जीवलाई पानीमा हाल्नू । अनि गाईको सिङलाई सुनले र खुरलाई चाँदीले अलङ्कृत गर्नू । पुनः पुरुषसूक्त पाठ गर्दै जलमा छिरी नुहाउनू । अनि उपस्थित ब्राह्मणलाई भरपूर दान दिई आचार्य वरण गरी उनलाई यथेष्ट सम्मानित गर्नू । दक्षिणामा सुन, चाँदी, वस्त्र एवं गाई दान गर्नू । यसपछि यथेच्छ ब्राह्मण भोजन गराउनू । (पारस्करले गृह्यसूत्रमा आफ्नो विधिलाई दक्षिणा दानसम्म नै सीमित राखे तर यस सन्दर्भमा कामदेव दीक्षितको मान्यता छ कि मनुष्य फल चाहन्छ । अधिक फल चाहनेले गृह्यसूत्रमा नै सीमित नरही पुराणमा बताइएका विधि अनुसार उत्सर्ग आदि कर्मको अनुष्ठान पनि गर्नु पर्दछ । त्यस अनुसार अक्षता, तिल, जल र कुश लिई पूर्व फर्की बसेर यो मन्त्र पढ्नू-"सामान्यं सर्वभूतेभ्यो मया दत्तमिदं जलम् । रमन्तु सर्वभूतानि स्नानपानावगाहनैः ।" । यसपछि नवनिर्मित कुवा या तलाउमा गङ्गा आदि तीर्थको जल निम्न मन्त्र पढी मिसाउनू । "कुरुक्षेत्रं गया गङ्गा, प्रभासः पुष्कराणि च । एतानि पञ्च तीर्थानि तडागे निवसन्तु मे ।१। वितस्ता कौशिकी सिन्धुः सरयुश्च सरस्वती । एतानि पञ्च तीर्थानि तडागे निवसन्तु मे ।२। दशार्णा मुरला सिन्धुरयावर्त्तादृषद्वती ।

एतानि पञ्च तीर्थानि तडागे निवसन्तु मे ।३। यमुना नर्मदा रेवा चन्द्रभागा च वेदिका । एतानि पञ्च तीर्थानि तडागे निवसन्तु मे ।४। गोमती वाङ्मती शोणा गण्डकी सागरस्तथा । एतानि पञ्च तीर्थानि तडागे निवसन्तु मे ।५।" यसपछि कामगर्नेलाई यथेष्ट ज्याला दिनु र तिनको औजारलाई पूजा गर्नू ।

~ इति तडागादि स्थापन विधि ~

~✷~

~ तलाउ आदि स्थापना विधि बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत पहिलो परिशिष्टको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो ~

~✷~

## अथ कात्यायनकृतं परिशिष्टशौचसूत्रम्

**अथातः शौचविधिं व्याख्यासामो दूरं गत्वा दूरतरं गत्वा यज्ञोपवितꣳ शिरसि दक्षिणकर्णे वा धृत्वा तृणमन्तर्धानं कृत्वोपविश्याहनीत्युत्तरतो निशायां दक्षिणत उभयोः सन्ध्ययोरुदङ्मुखो नाग्नौ न गोसमीपे नाप्सु नागे वृक्षमूले चतुष्पथे गवाङ्गोष्ठे देवब्राह्मणसन्निधौ दहनभूमिं भस्माच्छन्नं देशं फालकृष्टभूमिं च वर्जयित्वा मूत्रपुरीषे कुर्यात् ।**

भावार्थः अब शौचविधिका बारेमा बताउँदछु । घरबाट केही पर वा धेरै पर गई, जनैलाई दाहिने कान वा टाउकोमा सिउरी, बुट्यानको ओतमा बसेर, दिनमा उत्तर र रातमा दक्षिण एवं सन्ध्याकालमा उत्तर फर्की अग्नि र गाईको समीप; पानी, सर्पको दुलो, रुखको जरा, चौबाटो र गाईगोठमा, देवालय एवं ब्राह्मणका सामु तथा मशान, खरानीको थुप्रो र जोतिएको जमिनलाई छाडेर अन्यत्र मलमूत्र त्याग गर्नू ।

**ततः शिश्नं गृहीत्वोत्थायाद्भिः शौचं गन्धलेपहरं विदध्यात् । लिङ्गे देया सकृन्मृद्वै त्रिवारं गुदे दशधा वामपाणामुभयोः सप्तवारं कृत्तिकां दद्यात् । करयोः पादयोः सकृत्सकृदेव कृत्तिका देयेति शौचं गृहस्थानां द्विगुणं ब्रह्मचारिणां त्रिगुणं वनस्थानां चतुर्गुणं यतीनामिति । यद्दिवा विहितं शौचं तदर्धं निशायां भवति मार्गे चेत्तदर्धमार्त्तश्चेद्यथाशक्ति कुर्यात् ।**

भावार्थः मलमूत्र त्यागी उठेर जननेन्द्रियलाई पानीले सफा गर्नू । जननेन्द्रियलाई एक, मलद्वारलाई तीन, बायाँ हातलाई दश र दुबै हातलाई सात पटक माटो लगाई सफा गर्नू । दुवै हात गोडामा एक पटक माटो लगाई राम्ररी सफा गर्नू । पवित्रताको यो नियम केवल गृहस्थका लागि हो । ब्रह्मचारीले यसको दोब्बर, वानप्रस्थीले तेब्बर र सन्यासीले चौबर गर्नू । दिनका लागि बताइएको यो विधि रातमा आधा, बाटोमा त्यसको आधा र विरामी हुँदा जेजति गर्न सकिन्छ त्यति नै गर्नु पर्दछ ।

**प्रक्षालितपाणिपादः शुचौ देश उपविश्य नित्यं बद्धशिखी यज्ञोपवीती प्रागुदङ्मुखो वा भूत्वा जान्वोर्मध्ये करौ कृत्वाऽशूद्रानीतोदकैर्द्विजातयो यथाक्रमं हृत्कण्ठतालुगैराचामन्ति । न तद्भिन्नोष्ठेन न विरलाङ्गुलिभिर्न तिष्ठन्नैव हसन्नापि फेनबुद्बुदयुतम् । ब्रह्मतीर्थेन त्रिः पिबेत् द्विः परिमृजेत् ।**

भावार्थः बिहानबेलुकी प्रतिदिन हातगोडा धोएर, टुपी गाँठो पारी एकान्त एवं पवित्र स्थानमा पूर्व वा उत्तर फर्की दुबै घुँडाका बीचमा हात राखी पवित्र जलले आचमन गर्नू । फिँज उठेको पानीले आचमन नगर्नू । छुट्टाछुट्टै ओठले, नजोरिएका औंलाले , उभिएर र हाँस्दै कहिल्यै आचमन नगर्नू । बूढी औंलाको फेदले तीन पटक आचमन गर्नू र दुई पटक धोएर सफा गर्नू ।

**ब्राह्मणस्य दक्षिणहस्ते पञ्चतीर्थानि भवन्ति अङ्गुष्ठमूले ब्रह्मतीर्थं कनिष्ठिकाङ्गुलिमूले प्रजापतितीर्थं तर्जन्यङ्गुष्ठमध्य- मूले पितृतीर्थमङ्गुल्यग्रे देवतीर्थं मध्येऽग्नितीर्थमित्येतानि तीर्थानि भवन्ति ।**

भावार्थः ब्राह्मणका दाहिने हातमा पाँच वटा तीर्थहरु हुन्छन् । बूढी औंलाका फेदमा ब्रह्मतीर्थ, कान्छी औंलाको फेदमा प्रजापति तीर्थ, बूढी र चोर औंलाको बीचमा पितृतीर्थ, औंलाको टुप्पामा देवतीर्थ र हत्केलाको बीचमा अग्नितीर्थ हुन्छ ।

**प्रथमं यत्पिबति तेन ऋग्वेदं प्रीणाति द्वितीयं यत्पिबति तेन यजुर्वेदं प्रीणाति तृतीयं यत्पिबति तेन सामवेदं प्रीणाति चतुर्थं यदि पिबेत् तेनाथर्ववेदेतिहासपुराणानि प्रीणाति यदङ्गुलिभ्यः स्रवति तेन नागयक्षाकुबेराः सर्वे वेदाः प्रीणन्ति यत्पादाभ्युक्षणं पितरस्तेन प्रीणन्ति ।**



भावार्थः आचमन गर्दा पहिलो पटक जुन पानी पिइन्छ त्यसबाट ऋग्वेद, दोश्रो पटककोले यजुर्वेद, तेश्रो पटककोले सामवेद र चौथो पटककोले अथर्ववेद, इतिहास र पुराण प्रसन्न हुन्छन् । औंलाबाट पानी चुआउनाले नाग, यक्ष, कुबेर र सबै वेद प्रसन्न हुन्छन् । गोडामा सेचन गर्नाले पितृ प्रसन्न हुन्छन् ।

**यन्मुखमुपस्पृशत्यग्निस्तेन प्रीणाति यन्नासिके उपस्पृशति वायुस्तेन प्रीणाति यच्चक्षुरुपस्पृशति सूर्यस्तेन प्रीणाति यच्छ्रोत्रमुपस्पृशति दिशस्तेन प्रीणन्ति यन्नाभिमुपस्पृशति ब्रह्मा तेन प्रीणाति यद्धृदयमुपस्पृशति तेन परमात्मा प्रीणाति यच्छिर उपस्पृशति रुद्रस्तेन प्रीणाति यद्बाहू उपस्पृशति विष्णुस्तेन प्रीणाति ।**

भावार्थः मुखस्पर्शले अग्नि प्रसन्न हुन्छन् । नाकका प्वाल छुनाले वायु प्रसन्न हुन्छन् । आँखाको स्पर्शले सूर्य प्रसन्न हुन्छन् । कानका स्पर्शले दिशाहरु प्रसन्न हुन्छन् । नाइटो छुनाले ब्रह्मा, हृदयको स्पर्शले परमात्मा, शिरको स्पर्शले रुद्र र पाखुराको स्पर्शले विष्णु प्रसन्न हुन्छन् ।

**मध्यमानामिकया मुखं तर्जन्यङ्गुष्ठेन नासिकां मध्यमाङ्गुष्ठेन चक्षुषी अनामिकाङ्गुष्ठेन श्रोत्रं कनिष्ठिकाङ्गुष्ठेन नाभिं हस्तेन हृदयं सर्वाङ्गुलिभिः शिर इत्यसौ सर्वदेवमयो ब्राह्मणो देहिनामित्याह इत्येवं शौचविधिं कृत्वा ब्रह्मलोके महीयते इत्याह भगवान् कात्यायनः ।**

भावार्थः माझी र साहिँली औँलाले मुख, चोर र बूढी औँलाले नाक, माझी र बूढी औँलाले आँखा, साहिँली र बूढी औँलाले कान, कान्छी र बूढी औँलाले नाइटो, हातले हृदय र सबै औँलाले शिरलाई छुनु पर्दछ । सबै देहधारीहरुमध्ये ब्राह्मणलाई सर्वदेवमय बताइएको छ । कात्यायनका विचारमा जुन ब्राह्मणले यो शौच विधिलाई नियमानुसार पालना गर्दछ उसको महिमा ब्रह्मलोकमा प्रतिस्थापित हुन्छ ।

इति कात्यायनकृतं परिशिष्टशौचसूत्रं समाप्तम्

✷

शौचविधि आदि बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत दोश्रो परिशिष्टको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# श्रीकात्यायनोक्तं त्रिकण्डिकस्नानसूत्रम्

## अथ नित्यस्नानसूत्रम्

**अथातो नित्यस्नानं नद्यादौ मृद्गोमयकुशतिलसुमनस आहृत्योदकान्तं गत्वा शुचौ देशे स्थाप्य प्रक्षाल्य पाणिपादं कुशोपग्रहो बद्धशिखी यज्ञोपवित्याचम्योरुꣳहीति तोयमामन्त्र्यावर्तयेद्येतेशतमिति सुमित्रियान इत्यपोऽञ्जलिनादाय दुर्मित्रिया इति द्वेष्यं प्रति निषिञ्चेत्कटिं बस्त्यूरू जङ्घे चरणौ करौ मृदा त्रिस्त्रिः प्रक्षाल्याचम्य नमस्योदकमालभेदङ्गानि मृदेदं विष्णुरिति सूर्याभिमुखो निमज्जेदापो अस्मानिति स्नात्वोदिदाभ्य इत्युन्मज्य निमज्योन्मज्याचम्य गोमयेन विलिम्पेन्मानस्तोक इति ततोऽभिषिञ्चदिमम्मे वरुणेति चतसृभिर्माप तदुत्तमं मुञ्चन्त्ववभृथेत्यन्ते चैतन्निमज्योन्मज्याचम्य दर्भैः पावयेदापो हिष्ठेति तिसृभिरिदमापो हविष्मतीर्द्देवीराप इति द्वाभ्यामपोदेवा द्रुपदादिवशन्नो देवीरपाꣳ रसमपोदेवीः पुनन्तुमेति नवभिश्चित्पतिर्मेत्योङ्कारेण व्याहृतिभिर्गायत्र्या चादावन्ते चान्तर्जलेऽघमर्षणं त्रिरावर्त्तयेद् द्रुपदादिव आयङ्गौरिति वा तृचं प्राणायामं वा सशिरसमोमिति वा विष्णोर्वा स्मरणम्॥**



भावार्थः अब नित्यस्नानको विधि बताइन्छ । कुनै नदीमा कुश, तिल, फूल, गोबर र माटो लिएर त्यसका नजिकै गई ती वस्तु तीरको कुनै पवित्र स्थानमा राखी, पानीले हातगोडा धोई, पवित्र धारण गरी, टुपी बाँधी, सव्य भई, आचमन गरी, 'ॐ उरुꣳहि...' ऋचाले जल मन्त्री 'ॐ ये ते शतम्...' ऋचा पढ्दै दाहिने हातले प्रदक्षिणा विधिले पानी चलाउनू । 'ॐ सुमित्रियान...' मन्त्रले अँजुलीमा जल लिई 'ॐ दुर्मित्रिया...' मन्त्रले मनमनै आफ्नो शत्रुलाई सम्झी अँजुलीको जललाई भुईंतिर छर्कनू । त्यसपछि कम्मर, पेट, घुँडा, तिघ्रा, गोडा र हातमा माटो लगाएर तीन पटक धोई आचमन गरी 'ॐ उदकाय नमः' भनी जललाई प्रणाम गर्नू । 'ॐ इदं विष्णु...' ऋचा पढ्दै निधारदेखि गोडासम्म (दाहिने हातले) माटो दल्नु । (विस्तारै विस्तारै पानीमा पस्नु) । (मन्त्रमा स्वाहा भए पनि माटो दल्दा यो शब्द प्रयोग नगर्नु-शिवराज आचार्य) । 'ॐ आपोअऽस्मान्...' मन्त्र पढ्दै सूर्यतिर फर्केर माडीमाडी नुहाउनू । 'ॐ उदिदाभ्यः...' मन्त्र पढ्दै पानीबाट बाहिर आउनू । त्यसपछि बिनामन्त्र चाहे अनुसार नुहाउनू । आचमन गर्नू । त्यसपछि दुबै हातमा गोबर लिई दाहिने हातको गोबरले कम्मरभन्दा माथि र देब्रे हातको गोबरले कम्मरभन्दा मुनि सबै अङ्गमा दल्नू । दल्दा 'ॐ मानस्तोके...' मन्त्र पढ्नू । अनि पसरमा जल लिई 'ॐ इमं मे वरुण...' आदि चार मन्त्र, 'ॐ मापो... ', 'ॐ उदुत्तमं... ', 'ॐ मुञ्चन्तु... ' र अवभृथ मन्त्रले जल सेचन गर्नू र विधिपूर्वक नुहाएर बाहिर आउनू । फेरी आचमन गरी नबोली नुहाएर तीन वटा कुश लिई पहिले नाइटो मुनि र पछि नाइटो माथि

आपोहिष्ठा आदि गरिएका तीन मन्त्र, इदमापः, हविष्मतीः, देवीरापः आदि दुई मन्त्र, अपो देवा, द्रुपदादिव, शन्नो देवीः, अपाꣳरसम्, अपो देवीः, पुनन्तु मा आदि नौ मन्त्र र चित्पति मन्त्रहरु शुरु र अन्तमा ॐ कार र व्याहृति सहित गायत्री मन्त्र समेत पढ्नू र शरीर पवित्र पार्नू । जलको बीचमा अघमर्षण सूक्त तीन आवृत्ति पाठ गर्नू अथवा 'ॐ द्रुपदादिव...' वा 'ॐ आयं गौः... ' आदि तीन ऋचा पढ्नू । अनि प्राणायाम गर्नू वा तीनपटक केवल ॐ को मात्र जप गर्नू । अथवा परमपिता परमात्मा विष्णुको 'ॐ तद्विष्णोः...' मन्त्रले ध्यान गर्नू ।

नित्यस्नानविधि-समाप्त

✷

नित्यस्नानविधिसम्बन्धी कुरा बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत तेश्रो परिशिष्टको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## अथ ब्रह्मयज्ञविधिः

**उत्तीर्य धौते वाससौ परिधाय मृदोरू करौ प्रक्षाल्याचम्य त्रिराचम्यासून् पुष्पाण्यम्बुमिश्राण्यूर्द्ध्वं क्षिप्त्वोर्ध्वबाहुः सूर्यमुदीक्षन्नुद्वयमुदुत्यं चित्रं तच्चक्षुरिति गायत्र्या च यथाशक्ति बिभ्राडित्यनुवाकपुरुषसूक्तशिवसङ्कल्पमण्डलब्राह्मणै-रित्युपस्थाय प्रदक्षिणीकृत्य नमस्कृत्योपविशेत् दर्भेषु दर्भपाणिः स्वाध्यायञ्च यथाशक्त्यादाभारभ्य वेदम्॥२॥**

भावार्थः नुहाएर पानीबाट बाहिर आई धोइएको धोती र गम्छा लगाउनू । माटो लगाएर फेरी हातगोडा धुनू । तीन पटक आचमन र तीन प्राणायाम गर्नू । अँजुलीमा जल र फूल लिई अर्पण विधिले सूर्यदर्शन गरी हातको त्यो जल र फूल जमिनमा खसाल्नू । त्यसपछि दुवै हात माथि उठाई भगवान् आदित्यलाई हेर्दै 'उद्वयन्त...', 'उदुत्यम्...', चित्रं द्यावा...', 'तच्चक्षु...' आदि चार ऋचा पाठ गर्नू । यसपछि यथेच्छ गायत्री जप गर्नू । त्यसपछि 'विभ्राड्...' अनुवाक्, पुरुषसूक्त, शिवसङ्कल्पसूक्त तथा यदेतन्मण्डलं तपति, आदि मन्त्र पढ्दै सूर्यको स्तुति गर्नू । त्यसपछि सूर्यको प्रदक्षिणा र प्रणाम गर्नू । अनि पूर्व वा उत्तर मुख गरी कुशासनमा बस्नू र हातमा कुशको औँठी लगाई वेदाध्ययनले यथाशक्ति निज-स्वाध्याय अर्थात् ब्रह्मयज्ञ गर्नू ।



~ ब्रह्मयज्ञ-विधि समाप्त ~

~ ब्रह्मयज्ञ-विधि बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत चौथो परिशिष्टको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो ~

# अथ तर्पणविधिः

**ततस्तर्पयेद् ब्रह्माणं पूर्वं विष्णुꣳरुद्रं प्रजापतिं देवाँश्छन्दाꣳसि वेदानृषीन् पुराणाचार्यान् गन्धर्वानितराचार्यान्संवत्सरञ्च सावयवं देवीरप्सरसो देवानुगान्नागान्सागरान्पर्वतान्सरितो मनुष्यान् यक्षान् रक्षाꣳसि पिशाचान्त्सुपर्णान् भूतानि पशून् वनस्पतीनोषधीर्भूतग्रामश्चतुर्विधस्तृप्यतामिति ॐकारपूर्वम् ।**

भावार्थः ब्रह्मयज्ञ सकेर तर्पण गर्नू । ब्रह्माबाट तर्पण दिन शुरु गर्नू । त्यसपछि विष्णु, रुद्र, प्रजापतिलाई तर्पण दिनू । अनि देवता, छन्द, वेद, ऋषि, पुराणाचार्य, गन्धर्व, अन्य आचार्य, साङ्ग संवत्सर, देवी, अप्सरा, देवानुयायी, नाग, सागर, पर्वत, नदी, मनुष्य, यक्ष, राक्षस, पिशाच, सुपर्ण, भूत, पशु, वनस्पति, औषधी र बाह्र प्रकारका भूत-समूहलाई ॐ पहिले भन्दै तर्पण गर्नु पर्दछ ।

**ततो निवीती मनुष्यान् । सनकञ्च सनन्दनं तृतीयञ्च सनातनम् । कपिलभासुरिञ्चैव वोढुं पञ्चशिखं तथा ।**



भावार्थः यसपछि (देवतालाई तर्पण गरे पछि) जनैलाई माला बनाई दिव्य मानवलाई तर्पण गर्नु पर्दछ । यी दिव्य मानव सनक, सनन्दन, सनातन, कपिल, आसुरि, बोढुं र पञ्चशिख हुन् ।

**ततोऽपसव्यं तिलमिश्रं कव्यवाडनलꣳसोमं यममर्यमणमग्निष्वात्तान् सोमपो बर्हिषदो यमाँश्चैके । यमाय धर्मराजाय मृत्यवे चान्तकाय च । वैवस्वताय कालाय सर्वभूतक्षयाय च । औदुम्बराय बध्नाय नीलाय परमेष्ठिने । वृकोदराय चित्राय चित्रगुप्ताय वै नम इति 'एकैकस्य तिलैर्मिश्राँस्त्रींस्त्रीन्दद्याज्जलाञ्जलीन् । यावज्जीवकृतं पापं तत्क्षणादेव नश्यति, जीवत्पितृकोऽप्येतानन्याँश्चेतर उदीरतामङ्गिरस आयन्तु न ऊर्ज्जं वहन्ती पितृभ्यो ये चेह मधुव्वाता इति तृचञ्जपन् प्रसिञ्चेत्तृप्यध्वमिति त्रिर्नमो व इत्युक्त्वा मातामहानाञ्चैवं गुरुशिष्यर्त्विग्ज्ञातिबान्धवानतर्पिता देहाद्रुधिरं पिबन्ति ।**

भावार्थः यसपछि अपसव्य भई तिलजल लिई पितृलाई हव्य पुऱ्याउने कव्यवाह, अग्नि, सोम, यम, अर्यमा, अग्निवात, पितृहरु, सोमरस पिउने पितृहरु तथा कुशमाथि सुत्ने पितृहरुलाई तर्पण गर्नू । केही आचार्यले 'यमाय नमः धर्मराजाय नमः...' मन्त्रमा पठित या परिगणित

यमलाई पनि तर्पण गर्नु भनेका छन् । प्रत्येकलाई तिल मिसिएको जलको तीन तीन अँजुली दिनु पर्दछ । यसो गर्नाले जन्मेदेखि तर्पण गर्ने बेलासम्म गरिएका अशुभ कर्मका अमङ्गलदायी फल तत्क्षण नष्ट हुन्छन् । जसका बाबु जीवित छन् तिनले पनि उपरोक्त अनुसार ब्रह्मा देखि चित्रगुप्त सम्मलाई तर्पण दिनू । जसका बाबु छैनन् तिनले ब्रह्मादेखि पिता आदिसम्म तर्पण गर्नू । उदीरताम् इत्यादि प्रतीकका रुपमा बताइएका छ ऋचाले तथा मधुव्वाता आदि तृचको उपांशु पाठ गर्दै प्रसेक अर्थात् अँजुलीमा जल लिई चोर र बूढी औँलाको फेदबाट तर्पणपात्रमा तृप्यध्वम् भनी तीन पटक खसाउनू । 'नमो वः पितरो रसाय' आदि आठ यजुष मन्त्र पाठ गर्दै मातका पिता, पितामह, प्रपितामहलाई पनि त्यसरी नै तीन अँजुलीले तर्पण गर्नू । एक-एक अँजुलीले गुरु, ऋत्विक्, सपिण्ड र सगोत्री, सम्बन्धी र बान्धवलाई तर्पण गर्नू । यदि यी माथिका ब्रह्मा आदिलाई तर्पण गरिँदैन भने उसले तिनको शरीरको रगत पिउँदछ । त्यसैले सबैले तर्पण अवश्य गर्नु पर्दछ ।

**वासो निष्पीड्याचम्य ब्राह्मवैष्णवरौद्रसावित्रमैत्रवारुणैस्तल्लिङ्गैरर्चयेददृश्रꣳ हꣳस इत्युपस्थाय प्रदक्षिणीकृत्य दिशश्च देवताश्च नमस्कृत्योपविश्य ब्रह्माग्निपृथिव्योषधिवाग्वाचस्पतिविष्णुमहद्भ्योऽद्भ्योऽपाम्पतये वरुणाय नम इति सर्वत्र संवर्चसेति मुखं विमृष्टे देवागातुविद इति विसर्जयेदेष स्नानविधिरेष स्नानविधि ॥**



भावार्थः यसपछि नुहाएको कपडा निचोरी आचमन गरी ब्रह्मा, विष्णु, रुद्र, सविता, मित्र र वरुणको तिनको लिङ्ग अनुसारको मन्त्रले आवाहन र पूजन गर्नू । यसपछि 'अदृश्यमस्य केतव' तथा 'हंसः शुचिषद्' आदि दुई ऋचाले भगवान् सूर्यको पूजा र प्रदक्षिणा गर्नू । यसपछि दिशाहरु र देवताको नाम चतुर्थी विभक्तिमा लिई (रामाय नमः) प्रणाम गर्नू । फेरी बसेर ब्रह्मादेखि वरुणसम्मका देवतालाई प्रणाम गर्नू । त्यसपछि 'संवर्चसा' मन्त्र पढी अँजुलीमा पानी लिई मुख धुनू । अनि 'देवागातुविद्' मन्त्र पढी स्नानकर्मका अङ्गभूत सबै देवताहरुको विसर्जन गर्नू ।

इति श्रीकात्यायनोक्तं त्रिकण्डिकस्नानसूत्रं समाप्तम्

✷

स्नान-विधि बताइएको पारस्करगृह्यसूत्र अन्तर्गत पाँचौं परिशिष्टको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

कात्यानोक्तं पारस्करगृह्यसूत्रस्य परिशिष्टम्

✷

पारस्करगृह्यसूत्र अन्तर्गत परिशिष्ट खण्डको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# अथ श्राद्धसूत्रम्
## आपरपक्षिकश्राद्धविधिः

**अपरपक्षे श्राद्धं कुर्वीतोदूर्ध्वं वा चतुर्थ्या यदहः सम्पद्येत तदहर्ब्राह्मणानामन्त्र्य पूर्वेद्युर्वा स्नातकानेके यतीन् गृहस्थान् साधून् वा श्रोत्रियान् वृद्धाननवद्यान्त्स्व-कर्मस्थानभावेऽपि शिष्यान्त्स्वाचारान् द्विर्नग्नशुक्लविक्लिधश्यावदन्तविद्ध-प्रजननव्याधितव्यङ्गिश्वित्रिकुष्ठिकुनखिवर्जमनिन्द्येनामन्त्रितो नापक्रामेदामन्त्रि-तो वाऽन्यदन्नं न प्रतिगृह्णीयात्स्नाताञ्च्छुचीनाचान्तान् प्राङ्मुखानुपवेश्य दैवे युग्मानयुग्मान्यथाशक्ति पित्र्ये एकैकस्योदङ्मुखान्द्वौ वा दैवे त्रीन् पित्र्य एकैकमुभयत्र वा मातामहानाञ्चैवं तन्त्रं वा वैश्वदेविकम् । श्रद्धान्वितः श्राद्धं कुर्वीत शाकेनापि नापरपक्षमतिक्रामेन्मासि मासि वोशनमिति श्रुतेस्तदहः शुचिरक्रोधनोऽत्वरितोऽप्रमत्तः सत्यवादी स्यादध्वमैथुनश्रमस्वाध्यायान्व-र्जयेदावाहनादि वाग्यत उपस्पर्शनादामन्त्रिताश्चैवम् ॥१॥**



भावार्थः कृष्णपक्षमा वा चतुर्थी माथिका तिथिमा वा द्रव्य एवं ब्राह्मणको उपलब्धतामा वा मृत तिथिमा वा त्यसको एक दिन अघि श्राद्ध गरियोस् । श्राद्धमा स्नातकहरुलाई वा कसैको मतमा सन्यासीहरु वा निर्दोष गृहस्थीहरु वा साधुहरु वा स्वकर्म निष्ठ तपोनिष्ठ वृद्धहरु र श्रोत्रियहरुलाई निम्ता गर्नू । यस्ता उपलब्ध नभए गुरुका सेवामा लागेका शिष्यहरुलाई बोलाउन सकिन्छ । श्राद्धमा माता र पिता दुबैका कुलमा वेदाध्ययन र अग्निहोत्र नहुने, धेरै गोरो, दाह्रे, परिवार नियोजन गरेको, रोगी, विकलाङ्गी, सेता दाग भएको, गलित कुष्ठको रोगी र नराम्रा नङ भएका बाहेकका ब्राह्मणलाई बोलाउनू । बोलाएर मर्यादा नपुऱ्याए वा नजिकका निर्दोष ब्राह्मणलाई नबोलाई परपरकालाई बोलाए दोष लाग्दछ । निम्तालु ब्राह्मणले अन्तको अन्न नखानु (श्राद्ध पछि पनि) । स्नान गरेका, शुद्ध पवित्र भएका र आचमन गरिसकेका जोर ब्राह्मणलाई देवकार्यका लागि पूवतिर्र फर्काएर बसाउनु र पितृकार्यमा पिता आदि तीनका लागि यथाशक्ति बिजोर ब्राह्मणलाई उत्तरतिर फर्काएर बसाउनू । अथवा देवकार्यका लागि दुई र पितृकार्यका लागि तीन वा दुवै कार्यमा एक-एक ब्राह्मण बसाई कर्म गर्नू । मातामह आदिका श्राद्धमा पनि यसै गर्नू । वैश्वदैविक श्राद्धको प्रक्रिया दुवै पक्षमा एउटै किसिमको हुनुपर्दछ । श्रद्धा राखी श्राद्ध गर्नु पर्दछ । अन्नको अभावमा सागपातले पनि श्राद्ध गर्नु कृष्णपक्षको उल्लङ्घन नगर्नू । वेदमा भनिएको छ 'प्रजापतिले पितृहरुलाई भनेका छन् तिम्रा लागि भोजनको व्यवस्था गरिएको छ' । श्राद्धका दिन बाहिरीभित्री दुवै रुपले पवित्र हुनु पर्दछ । रिसाउनु हुँदैन । हतार गर्नु हुँदैन । सावधान हुनु पर्दछ । साँचो बोल्नु पर्दछ । कतै आवतजावत गर्न हुँदैन । स्त्री-प्रसङ्ग गर्नु हुँदैन । परिश्रमपूर्ण कार्य गर्नु हुन्न । स्वाध्याय पनि गर्न हुन्न । श्राद्धकर्ताले

आवाहनदेखि खानका लागि आचमन गर्ने बेलासम्मका सबै कार्य बिनामन्त्र चुपचाप गर्नु पर्दछ । पवित्रता र सबै विधि र बार्नुपर्ने कुरा बार्नु पर्दछ । निम्तालु पनि श्राद्धकर्ताझैं पवित्र रहनु पर्दछ ।

**दैवपूर्वꣳ श्राद्धं पिण्डपितृयज्ञवदुपचारः पित्र्ये द्विगुणास्तु दर्भाः पवित्रपाणिर्दद्यादासीनः सर्वत्र प्रश्नेषु पङ्क्तिमूर्धन्यं पृच्छति सर्वान्वासनेषु दर्भानास्तीर्य विश्वान्देवानावाहयिष्य इति पृच्छत्यावाहयेत्यनुज्ञातो विश्वेदेवास आगतेत्यनयाऽऽवाह्यावकीर्य विश्वेदेवाः श्रृणुतेममिति जपित्वा पितृनावाहयिष्य इति पृच्छत्यावाहयेत्यनुज्ञात उशन्तस्त्वेत्यनयाऽऽवाह्यावकीर्यायन्तु न इति जपित्वा यज्ञियवृक्षचमसेषु पवित्रान्तर्हितेष्वेकैकस्मिन्नप आसिञ्चति शन्नोदेवीरित्येकैकस्मिन्नेव तिलानावपति तिलोऽसि सोमदैवत्यो गोसवो देवनिर्मितः । प्रत्नमद्भिः पृक्तः स्वधया पितॄँल्लोकान् प्रीणाहि नः स्वाहेति सौवर्णराजतौदुम्बरखङ्गमणिमयानां पात्राणामन्यतमेषु यानि वा विद्यन्ते पत्रपुटेषु वैकैकस्यैकेकेन ददाति सपवित्रेषु हस्तेषु या दिव्या आपः पयसा सम्बभूवुर्या अन्तरिक्षा उत पार्थवीर्याः । हिरण्यवर्णा यज्ञितास्ता न आपः शिवाः शꣳस्योनाः सुहवा भवन्त्वित्यसावेषतेऽर्घ इति प्रथमे पात्रे सꣳस्रवान्त्समवनीय पितृभ्यः स्थानमसीति न्युब्जं पात्रं निदधात्यत्र गन्धपुष्पधूपदीपवाससां च प्रदानम् ॥२॥**

भावार्थः वैश्वदेवपूर्वक श्राद्धजन्य पितृकर्ममा पिण्ड पितृयज्ञका समान नै अनुष्ठान हुन्छ । पितृकर्ममा त्यसको संख्या दोब्बर हुन्छ किनकि पितृकर्म वा देवकर्ममा जेजति दिइन्छ हातमा त्यो स्थितिमा पवित्र हुनु आवश्यक हुन्छ । आवाहन आदि प्रश्न पङ्क्तिमा अगाडि बसेका ब्राह्मणलाई वा कसै कसैको बिचारमा उपस्थित सबै ब्राह्मणलाई एकैपटक सोध्न सकिन्छ । आसनमा पहिले कुश फिँजाउनु पर्दछ अनि 'सबै देवताको आवाहन गरुँ ?' भनी सोध्नु पर्दछ । ब्राह्मणले "आवाहन गर" भनेपछि 'विश्वेदेवास आग्रतः' ऋचाले आवाहन गरी वैश्वदेव ब्राह्मण समक्ष प्रदक्षिणा विधिले जौ छर्नु पर्दछ । पुनः जजमानले ब्राह्मणलाई 'विश्वेदेवा श्रृणुते मम' यो मन्त्र पढ्दै सोध्नु कि 'म पितृहरुको आवाहन गरुँ ?' । ब्राह्मणबाट 'आवाहन गर' भन्ने आज्ञा लिई 'उशन्तस्त्वा' मन्त्रले पितृको आवाहन गर्नू । त्यसपछि पितृ र ब्राह्मणका अगिल्तिर तिल छरी 'आयन्तु नः पितरः' आदि मन्त्र पढ्नू । अनि पलाशको काठले बनेको चमस जसमा घिउ लागेको हुन्छ त्यसमा 'शन्नो देवीरभिष्टय' मन्त्र पढी जल हाल्नू । यसपछि 'तिलोऽसि' आदि मन्त्रले प्रत्येक पात्रमा अलिअलि तिल छर्कनू । पहिले देवपात्रमा तिल छर्की सकेपछि पितृपात्रमा सुन, चाँदी, तामा, शङ्ख, सीपी, स्फटिक आदिले बनेका भाँडामा नभए पातको दुनुमा एक-एकका लागि ब्राह्मणका पवित्र हातमा 'या दिव्या आपः' यो मन्त्र पढी 'अमुकशर्मन् एष ते अर्घः'

भनी अर्घ दिनू । पिताका लागि प्रथम अर्घपात्रमा राखिएका जलबिन्दु हाली 'पितृभ्यः स्थानमसि' यो मन्त्रले त्यसलाई उल्टाउनू । यसपछि ब्राह्मणलाई गन्ध, पुष्प, धूप, दीप, अन्न वस्त्र प्रदान गर्नु पर्दछ ।

**उद्धृत्य घृताक्तमन्नं पृच्छत्यग्नौ करिष्य इति कुरुष्वेत्यनुज्ञातः पिण्डपितृयज्ञबद्धुत्वा हुतशेषं दत्वा पात्रमालभ्य जपति पृथिवी ते पात्रं द्यौरपिधानं ब्राह्मणस्य मुखे अमृते अमृतं जुहोमि स्वाहेति वैष्णव्यर्चा यजुषा वाऽङ्गुष्ठमन्नेऽवगाह्यापहता इति तिलान्प्रकीर्योष्णꣳ स्विष्टमन्नं दद्याच्छक्त्या वाऽश्नत्सु जपेद्व्याहृतिपूर्वाङ्गायत्रीꣳ सप्रणवाꣳ सकृत्त्रिर्वा राक्षोघ्नीः पित्र्यमन्त्रान्पुरुषसूक्तमप्रतिरथमन्यानि च पवित्राणि तृप्तान् ज्ञात्वाऽन्नं प्रकीर्य सकृत्सकृदपो दत्वा पूर्ववद्गायत्रीञ्जपित्वा मधुमतीर्मधुमध्विति च तृप्ताः स्थेति पृच्छति तृप्ताः स्म इत्यनुज्ञातः शेषमन्नमनुज्ञाप्य सर्वमन्नमेकतोद्धृत्योच्छिष्टसमीपे दर्भेषु त्रींस्त्रीन् पिण्डानवनेज्य दद्यादाचान्तेष्वित्येक आचान्तेषूदकं पुष्पाण्यक्षतानक्षय्योदकं च दद्यादघोराः पितरः सन्तु सन्त्वित्युक्ते गोत्रं नो वर्धतां वर्धतामित्युक्ते दातारो नोऽभिवर्धन्तां वेदाः सन्ततिरेव च । श्रद्धा च नो माव्यगमद् बहुधेयञ्च नोऽस्त्वित्याशिषः प्रतिगृह्य स्वधावाचनीयान्त्सपवित्रान् कुशानास्तीर्य स्वधां वाचयिष्य इति पृच्छति वाच्यतामित्यनुज्ञातः पितृभ्यः पितामहेभ्यः प्रपितामहेभ्यो मातामहेभ्यः प्रमातामहेभ्यो वृद्धप्रमातामहेभ्यश्च स्वधोच्यतामित्यस्तु स्वधेत्युच्यमाने स्वधावाचनीयेष्वपो निषिञ्चति ऊर्ज्जमित्युत्तानं पात्रं कृत्वा यथाशक्ति दक्षिणां दद्याद् ब्राह्मणेभ्यो विश्वेदेवाः प्रीयन्तामिति दैवे वाचयित्वा वाजेवाजेवतेति विसृज्यामावाजस्येत्यनुव्रज्य प्रदक्षिणीकृत्योपविशेत्॥३॥**

भावार्थः घिउले भिजेका वैश्वदेव अन्नमध्येबाट केही अन्न अर्को भाँडोमा निकाली 'अग्नौ करिष्ये' आदि मन्त्र पढी पङ्क्ति-प्रमुख ब्राह्मणलाई सोध्नू । जब ब्राह्मणले गर्न अनुमति दिन्छन् तब पिण्डपितृयज्ञकोझैं होमगरी हवनबाट बचेको अन्नलाई ब्राह्मणपात्रमा हालिदिनू । पात्रलाई चारैतिरबाट छोएर 'पृथ्वी ते पात्रम्' यो मन्त्र जप्नू । यसपछि 'इदम् विष्णुः' मन्त्रले वा 'विष्णो अव्यं रक्षस्व' यो यजुर्मन्त्रले बूढी औंलो ब्राह्मणपात्रमा राखी 'अपहता' आदि मन्त्रले ब्राह्मणका सामु जमिनमा तिल छर्कनू । पुनः जस्तो ब्राह्मणलाई, मृतकलाई वा श्राद्धकर्तालाई रुच्दछ त्यही पक्वान्न तयार पारी तरिका पुर्‍याएर पस्किनू । रुचिकर अन्नको अभावमा जेजस्तो उपलब्ध हुन सक्छ त्यही पस्कनू । जब ब्राह्मणभोजन भइरहेको हुन्छ तब प्रणव र व्याहृति सहितको गायत्री मन्त्र एकपटक वा

तीन पटक पाठ गर्नू तथा पितृमन्त्र 'उदीरतामवर' आदि तेह्र ऋचा, पुरुषसूक्त, 'अप्रतिरथम् आसुः शिसान' आदि सत्र मन्त्र तथा शतरुद्री आदि पाठ गर्नु पर्दछ । जब ब्राह्मणहरु भोजनले सन्तुष्ट हुन्छन् तब तिनका अगिल्तिर अन्न फिँजाउनु पर्दछ । पहिलेभैँ गायत्री जप गरेर तथा 'मधुमती' वा 'मधुव्वाता ऋतायन्ते' आदि तीन ऋचा पाठ गरी ब्राह्मणहरुलाई सन्तुष्ट भए नभएको सोध्नु पर्दछ । सन्तुष्ट भएको जवाफ पाएपछि हरेक किसिमका अन्नहरु एउटा भाँडामा त्यति निकाल्नु जतिले एउटा पिण्ड बन्दछ । त्यसपछि उच्छिष्ट स्थानका नजिकै कुशमाथि अवनेजन पूर्वक पिण्डदान गर्नु पर्दछ । केही आचार्यले जब ब्राह्मणले आचमन गरि सक्दछन् तब पिण्डदान गर्नु पर्ने कुरा पनि बताएका छन् । आचमन गरिसकेका ब्राह्मणलाई जल, फूल, अक्षताले पूजा गरी अर्घ्यदान गर्नु पर्दछ । यसपछि जजमानले भन्नु-'अघोराः पितरः सन्तु' अर्थात् हाम्रा पितृ सन्तुष्ट (शिव) होऊन् । उत्तरमा ब्राह्मणले भन्नु-'हो तिम्रा पितृगण अघोर होऊन्' । यसपछि जजमानले भन्नु-'गोत्रं नो वर्धताम्' अर्थात् मेरा गोत्र बढून् । ब्राह्मणले भन्नु-'वर्धताम्' अर्थात तिम्रा गोत्र बढून् । फेरी जजमानले 'दातारो नो' आदि भन्नु र ब्राह्मणले उत्तरमा प्रत्येक पटक 'वर्धन्ताम्' भनी आशिर्वाद दिनू । ब्राह्मणबाट आशिर्वाद लिई सकेपछि पवित्र कुशलाई पिण्डका सामु जमिनमा फिँजाउनु र 'स्वधां वाचिष्ये' आदि मन्त्र पढी ब्राह्मणबाट आज्ञा लिनू । आज्ञा पाएपछि 'पितृभ्यः' आदि मन्त्र पढ्नू । यसपछि जब ब्राह्मणले 'अस्तु स्वधा' भन्दछन् तब जजमानले 'उर्जम्' आदि मन्त्र पढी 'स्वधावाचनीय' कुशमाथि पात्रलाई माथि उठाएर जल छर्कनू । अनि यथाशक्ति ब्राह्मणलाई दक्षिणा दिनु । त्यसपछि दैव ब्राह्मणले भन्नु 'विश्वेदेवाः प्रीयन्ताम्' अर्थात् सबै देवगण प्रसन्न हुन् । यसपछि 'वाजेवाजेवत' आदि मन्त्र पढी ब्राह्मणलाई बिदा गर्दै 'अमावाजस्य' आदि मन्त्र पढी तिनलाई सीमान्तसम्म पुऱ्याएर त्यसपछि जजमानले आफ्नो घरमा छिर्नु पर्दछ ।



इति आपरपक्षिकश्राद्धविधिः

✷

श्राद्धसूत्र अन्तर्गत आपरपक्षिकश्राद्ध विधिको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## एकोद्दिष्टविधिः

**अथैकोद्दिष्टमेकोऽर्घ एकं पवित्रमेकः पिण्डो नावाहनं नाग्नौकरणं नात्र विश्वेदेवाः स्वदितमिति तृप्तिप्रश्नः । सुस्वदितमितीतरे ब्रूयुरुपतिष्ठतामित्यक्षय्यस्थानेऽभि-रम्यतामिति विसर्गोऽभिरताः स्म इतीतरे ॥४॥**

भावार्थः एकोद्दिष्ट श्राद्धमा कुनै एकका उद्देश्य मानी एक अर्घ्य, एक पवित्र र एउटै पिण्ड हुनु पर्दछ । यसमा न आवाहन हुन्छ न त अग्नौकरण । यसमा 'विश्वेदेवाः स्वदित्तम्' यस किसिमका तृप्ति प्रश्न पनि गर्दिैन । ब्राह्मणहरुले 'सुस्वदितम्' भन्नु पर्दछ । जजमानले 'उपतिष्ठताम्' भन्दा ब्राह्मणले 'अक्षय्यस्थाने' भन्नू । 'अभिरम्यताम्' भनेर जब ब्राह्मणको विसर्जन गरिन्छ तब ब्राह्मणले 'अभिरताः स्म' भन्नू ।

इति एकोद्दिष्टश्राद्धविधिः

✷

श्राद्धसूत्र अन्तर्गत एकोद्दिष्ट श्राद्धविधिको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# सपिण्डीकरणविधिः

**ततः संवत्सरे पूर्णे त्रिपक्षे द्वादशाहे वा यदहर्वा वृद्धिरापद्येत चत्वारि पात्राणि सतिलगन्धोदकानि पूरयित्वा त्रीणि पितृणामेकं प्रेतस्य । प्रेतपात्रं पितृपात्रेष्वासिञ्चति, ये समाना इति द्वाभ्याम् । एतेनैव पिण्डो व्याख्यातः । अत ऊद्ध्र्वꣳसंवत्सरे संवत्सरे प्रेतायान्नं दद्यात् यस्मिन्नहनि प्रेतः स्यात् ॥५॥**

भावार्थः यसपछि एक वर्ष बितेपछि सपिण्डीकरण गर्नु पर्दछ अथवा बाह्रौं दिन वा पैंतालीसौं दिन वा जुन दिन वृद्धिकर्म हुन्छ त्यो दिन सपिण्डीकरण गर्नु पर्दछ । चार अर्घ्यपात्रलाई तिल, जल र फूलले भरी तिमध्ये तीन पात्रले पिता, पितामह र प्रपितामह आदि गरिएका पितृलाई अर्घ्य दिइयोस् । एउटाले मृतकलाई 'ये समाना' मन्त्र पढी मृतकको अर्घ्यपात्रको पितृहरुको अर्घ्यपात्रसँग आसेक अर्थात् मृतकको पात्रको जलको चारौं भागले अर्घ्य दिई बाँकी जल पिता आदिको पात्रमा बँडेर हाली ब्राह्मणलाई सोध्नु-'प्रेतपात्रलाई म पितृहरुको पात्रमा मिलाउँदछु' । जब मिलाउ भनी ब्राह्मण आदेश दिन्छन् तब माथि बताइएको तरिकाले जल मिलाउनू । यसै गरी सपिण्डीकरण गरेपछि प्रत्येक वर्ष मृत तिथिमा मृतक पितृलाई अन्नदान गर्नु पर्दछ ।



इति सपिण्डीकरणविधिः

✷

श्राद्धसूत्र अन्तर्गत सपिण्डीकरणविधिको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## आभ्युदयिकश्राद्धप्रयोगः

**आभ्युदयिके प्रदक्षिणमुपचारः पूर्वाह्णे पित्र्यमन्त्रवर्जं जप ऋजवो दर्भा यवैस्तिलार्थाः सम्पन्नमिति तृप्तिप्रश्नः सुसम्पन्नमितीतरे ब्रूयुर्दधिबदराक्षतमिश्राः पिण्डा नान्दीमुखान् पितृनावाहयिष्य इति पृच्छत्यावाहयेत्यन्- ज्ञातो नान्दीमुखाः पितरः प्रीयन्तामित्यक्षय्यस्थाने नान्दीमुखान् पितृन्वाचयिष्य इति पृच्छति वाच्यतामित्यनुज्ञातो नान्दीमुखाः पितरः पितामहाः प्रपितामहा मातामहाः प्रमातामहा वृद्धप्रमातामहाश्च प्रीयन्तामिति न स्वधां प्रयुञ्जीत युग्मानाशयेदत्र ॥६॥**

भावार्थः आभ्युदयिक श्राद्धमा पूर्व वा उत्तर फर्की बस्नू । त्यो दिन पहिलो प्रहरमा पितृ मन्त्रका तेह्र ऋचालाई छोडी 'अयन्तु नः' आदि मन्त्रको जप हुन्छ । प्रयोगमा आउने कुश पितृकर्ममा जस्तो दोबरी पारेका नभई सामान्य हुन्छ । तिलको सट्टा यहाँ जौले श्राद्ध हुन्छ । तृप्ति प्रश्न पहिले जस्तो नभई 'सम्पन्नम्' भनेर राखिन्छ । श्राद्धमा निमन्त्रित अन्य ब्राह्मणले 'सुसम्पन्नम्' भन्नु पर्दछ । दही, बयर र अक्षताले सहित भएको पिण्डदान हुनु पर्दछ । जजमानले जब 'नान्दीमुखी पितृहरुको आवाहन गरुँ ?' भनी सोद्धछ र 'आवाहन गर' भन्ने अनुमति पाउँदछ तब 'अक्षय्योदक' का स्थानमा 'नान्दीमुखाः पितरः प्रियन्ताम्' प्रयोग गरिन्छ । जजमानले पुनः 'नान्दीमुखी पितृहरुको वाचन गरुँ ?' भनी सोध्नू । 'वाचन गर' भनी अनुमती पाए पछि 'नान्दीमुखा पितरः' यो ऋचाको पाठ गर्नू । स्वधाको उच्चारण नगर्नू । यो आभ्युदयिक श्राद्धमा दुई जना ब्राह्मणलाई भोजन गराउनु पर्दछ ।



इति आभ्युदयिकश्राद्धप्रयोगः

✷

श्राद्धसूत्र अन्तर्गत आभ्युदयिक श्राद्धविधिको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## द्रव्यविशेषेण तृप्तिविशेषः

**अथ तृप्तिर्ग्राम्याभिरोषधीभिर्मासं तृप्तिस्तदभाव आरण्याभिर्मूलफलैरोषधीभिर्वा सहान्नेनोत्तरास्तर्पयन्ति छागोस्रमेषानालभ्य क्रीत्वा लब्ध्वा वा न स्वयम्मृतानाहृत्य पचेन्मासद्वयं तु मत्स्यैर्मासत्रयं तु हारिणेन चतुरऽऔरभ्रेण पञ्च शाकुनेन षट् छागेन सप्त कौर्मेणाष्टौ वाराहेण नव मेषमाᳫंसेन दश माहिषेणैकादश पार्षतेन संवत्सरं तु गव्येन पयसा पायसेन वा वार्ध्रीणसमाᳫंसेन द्वादश वर्षाणि ॥७॥**

भावार्थः ग्रामिण औषधीहरु (जौ, चामल, तिल) फलफूल र जलले पितृहरु एक महिनासम्म तृप्त हुन्छन् । यसको अभावमा जङ्गली कन्दमूल, फलफूल वा औषधीले तृप्त पार्न सकिन्छ । पछि बताइने बोका आदि वस्तु अन्न, फलफूल, कन्दमूल र औषधीका साथमा जे दिइन्छ त्यो पनि तृप्तिकारक हुन्छ । बोको वा भेडो किनेर वा सित्तैंमा पाएर पितृका उद्देश्यले पकाउनु पर्दछ तर यो बिचार पुऱ्याउनु कि त्यो पशुलाई आफैंले नमार्नु र त्यो स्वाभाविक मरणले पनि नमरेको होस् । माछा र मासुले दुई महिना, हरिणको मासुले तीन महिना, जङ्गली भेडाको मासुले चार महिना, कुनै चराको मासुले पाँच महिना, बोकाको मासुले छ महिना,कछुवाको मासुले सात महिना, बँदेलको मासुले आठ महिना, घरपालुवा भेडाको मासुले नौ महिना, रौँगाको मासुले दश महिना, चित्रमृगको मासुले एघार महिना, दूध वा दूधले बनेका पदार्थले बाह्र महिना र वार्ध्रीणस (त्रिपिवं त्विन्द्रियक्षीणं श्वेतं वृद्धमजापतिम् । वार्ध्रीणसं तु तं प्राहुर्याज्ञिकाः श्राद्धकर्मणि । उदकपानसमये मुखं कर्णद्वयं चोदकमध्ये पततीति त्रिपिबः, रातो बोको) को मासुले बाह्र वर्षसम्म पितृ तृप्त हुन्छन् ।

## अक्षय्यतृप्त्युपायाः

**अथाक्षय्यतृप्तिः खड्गमाᳫंसं कालशाकं लोहच्छागमाᳫंसं मधु महाशल्को वर्षासु मघाश्राद्धᳫंहस्तिच्छायायाञ्च, मन्त्राध्यायिनः पूताः शाखाध्यायी षडङ्गविज्ज्येष्ठसामगो गायत्रीसारमात्रोऽपि पञ्चाग्निः स्नातकस्त्रिणाचिकेतस्त्रिसुपर्णी द्रोणपाठको ब्रह्मोढापुत्रो वागीश्वरो याज्ञिकश्च नियोज्या अभावेऽप्येकं वेदविदं पङ्क्तिमूर्धनि नियुञ्ज्यात्, आसहस्रात्पङ्क्तिं पुनातीति वचनात् ॥८॥**

भावार्थः गैंडाको मासु, कालशाक (नरिचो, नाडीकको साग) ?, रातो बोकाको मासु, मह र महाशल्क (माछा विशेषको मासु) ले वर्षा ऋतुमा, मघा नक्षत्रमा तथा गजच्छाया योगमा गरिएको श्राद्ध पितृका लागि अक्षय तृप्तिकारक हुन्छ । श्राद्धमा वेदमन्त्रका ज्ञाता, वेदको

कुनै शाखाको अध्ययन गर्ने, वेदका षडङ्गका ज्ञाता, ज्येष्ठ सामवेद गाउने, नित्य गायत्री जप गर्ने, अग्निहोत्री, स्नातक, तृणाचिकेत, अग्निचयन गर्ने, विद्या-जन्म-कर्म प्रसिद्ध, अनुवाक पढ्ने, धर्मशास्त्रका विद्वान्, ब्राह्म विधिको विवाहबाट जन्मिएको छोरो, व्याकरण जान्ने र याज्ञिक ब्राह्मणलाई श्राद्धकर्मका लागि नियुक्त गर्नु । यस्ता नभेटिए एउटा वेदको अर्थ जान्ने ब्राह्मणलाई पहिलो लाममा पहिले बसाउनु किनकि यस्तो वचन प्राप्त छ कि हजारौं ब्राह्मणका लामलाई केवल एउटा वेदको अर्थ जान्ने ब्राह्मणले पवित्र पार्दछ ।

## काम्यश्राद्धानि

**अथ काम्यानि भवन्ति स्त्रियोऽप्रतिरूपाः प्रतिपदि द्वितीयायाꣳ स्त्रीजन्माश्वास्तृतीयायां चतुर्थ्यां क्षुद्रपशवः पुत्राः पञ्चम्यां द्यूतर्द्धिः षष्ठ्यां कृषि सप्तम्यां वाणिज्यमष्टम्यामेकशफं नवम्यां दशम्यां गावः परिचारिका एकादश्यां धनधान्यानि द्वादश्यां कुप्यꣳ हिरण्यं ज्ञातिश्रैष्ठ्यं च त्रयोदश्यां युवानस्तत्र म्रियन्ते शस्त्रहतस्य चतुर्दश्याममावस्यायाꣳ सर्वमित्यमावास्यायाꣳ सर्वमिति ॥९॥**

भावार्थः परेवामा काम्यश्राद्ध गर्नाले अनुपम सुन्दरी पत्नी, द्वितीयामा कन्या, तृतीयामा अश्व, चतुर्थीमा सानातिना पशु, पञ्चमीमा पुत्र, षष्ठीमा द्यूतजन्य समृद्धि, सप्तमीमा कृषिफल, अष्टमीमा वाणिज्य फल, नवमीमा एक खुर हुने पशु, दशमीमा गाई, एकादशीमा नोकर, द्वादशीमा काम्यश्राद्ध गर्नाले धनधान्य एवं समाजमा श्रेष्ठता पाइन्छ । युवावस्थामा वा शस्त्रका कारण मर्नेको काम्यश्राद्ध चतुर्दशीमा गर्नु पर्दछ । औंसीमा श्राद्ध गर्नाले सबै कामना पूरा हुन्छन् ।

इति श्राद्धसूत्रम्

*

श्राद्धसूत्रको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

*

# भोजनसूत्रम्

अथातः श्रुतिस्मृतीरनुसृत्य भोजनविधिं व्याख्यास्यामः । आचान्तो धृतोत्तरीयवस्त्रो धृतश्रीखण्डगन्धपुण्ड्रो भोजनशालामागत्य गोमयेनोपलिप्य शुचौ देशे विहितपीठाधिष्ठितो नित्यं प्राङ्मुखो न दक्षिणामुखो न प्रत्यङ्मुखो न विदिङ्मुखः । श्रीकामश्चेत्प्रत्यङ्मुखः सत्यकामश्चेदुदङ्मुखो यशस्कामश्चेद्दक्षिणामुखो जीवन्मातृकवर्जं हस्तपादास्येषु पञ्चस्वार्द्रो नीवारचूर्णैर्गोमृदाभस्मनोदकेन वा मण्डलं कुर्यात् । चतुष्कोणं ब्राह्मणस्य त्रिकोणं क्षत्रियस्य मण्डलाकृति वैश्यस्याभ्युक्षणꣳ शूद्रस्य, यथा चक्रायुधो विष्णुस्त्रैलोक्यं परिरक्षति । एवं मण्डलभस्मैतत्सर्वभूतानि रक्षत्विति । तत्र भूमौ निहितपात्रेऽन्ने परिविष्टे पितुन्नुस्तोषमित्यन्नꣳ स्तुत्वा मानस्तोके नमोवः किरिकेभ्यो नमः शम्भवायेत्यभिमन्त्र्य प्रोक्षयेत्, सात्यन्त्वर्तेन परिषिञ्चामीति प्रातर्ऋतं त्वा सत्येन परिषिञ्चामीति सायम् । तेजोऽसि शुक्रमस्यमृतमसीति यजुषाऽन्नमभिमृश्याग्निरस्मीत्यात्मानमग्निं ध्यात्वा भूपतये भुवनपतये भूतानां पतय इति चित्राय चित्रगुप्ताय सर्वेभ्यो भूतेभ्यो नम इति दिवा प्रणवादिकैः स्वाहानमोन्तैर्मन्त्रैः प्रतिमन्त्रं बलीन् हरेत्, अन्तश्चरसि भूतेषु गुहायां विश्वतोमुखः । त्वं ब्रह्म त्वं यज्ञस्त्वं वषट्कारस्त्वमोङ्कारस्त्वं विष्णोः परमं पदम् । अमृतोपस्तरणमसि स्वाहेति विष्णुमन्त्रमभिध्यायन्नाचम्यान्नममृतं ध्यायन् मौनी हस्तचापल्यादिरहितो मुखे पञ्च प्राणाहुतीर्जुहोति ॥१॥



भावार्थः अब श्रुतिस्मृति अनुसरण गरी भोजनविधि व्याख्या गर्दछु । पवित्र जलले आचमन गरेपछि शरीरमाथि कुनै गम्छा आदि राखी, श्रीखण्डचन्दन वा सुगन्धित कुनै तिलक लगाई भान्छामा आई पवित्र भूमिलाई गोबरले लिपी त्यो पवित्र स्थानमा तोकिएको आसनमा बस्नू । नित्य पूर्व फर्की बस्नू । पश्चिम फर्केर नबस्नू । दुईवटा दिशाको बीचतिर मुख फर्काएर पनि नबस्नू । सम्पत्ति चाहनेले पश्चिम, सत्यको कामना गर्नेले उत्तर र यश चाहनेले दक्षिण फर्केर बस्नु । जीवन्मातृक (अन्य अङ्ग) लाई छोडी हातगोडा र मुख यी पाँच अङ्ग धुनू (नपुछ्नु चिसै राख्नू) । नाभो धानको धुलो, गाईको गोबरको खरानी वा पानीले मण्डल बनाउनू (औशानी हाल्नू) । ब्राह्मणले चारकुने, क्षत्रियले तीनकुने र वैश्यले गोलो मण्डल बनाउनु पर्दछ भने शूद्रले जल छर्के हुन्छ । जसरी चक्रधारी विष्णु आफ्नो चक्रले त्रिलोकको रक्षा गर्दछन् यो मण्डल भष्मले सबै प्राणीको रक्षा गरोस् भनी प्रार्थना गर्नू । जलको घेरो बनाइएको भूमिमा राखिएको अन्नलाई 'पितुन्नुस्तोषमित्यन्नꣳ' आदि मन्त्रले स्तुति गर्नू । 'मानस्तोके नमोवः किरिकेभ्यो नमः शम्भवाय' मन्त्रले

पस्किएको अन्नलाई अभिमन्त्रित गरी त्यसमा जल छर्कनू । 'सत्यन्त्वर्तेन परिषिञ्चामि' यो मन्त्र पढी पूर्वाह्नमा र ऋतं त्वा सत्येन परिषिञ्चामि' पढी साँझमा त्यो भोजनार्थ राखिएको अन्नलाई जलले शेचन गर्नू । (खानु अघि) ''तेजोऽसि शुक्रमस्यमृतमसीति यजुषान्नमभिमृश्या- ग्निरस्मि' मन्त्रले आफूमा अग्नि देवताको ध्यान गर्नू । आफूमा अग्निको ध्यान गरेपछि दैनिक पञ्च महायज्ञमध्येको एक वैश्वदेव यज्ञ गर्नू । अर्थात् भोजनपूर्व आहारको केही भाग यि मन्त्रका साथ बलि दिनू-ॐ भूपतये स्वाहा नमः, ॐ भुवनपतये स्वाहा नमः, ॐ भूतानां पतये स्वाहा नमः, ॐ चित्राय नमः स्वाहा, ॐ चित्रगुप्ताय नमः स्वाहा, सर्वेभ्यो भूतेभ्यो नमः स्वाहा । बलि वैश्वदेव पछि 'अन्तश्चरसि भूतेषु गुहायां विश्वतो मुखः । त्वं ब्रह्म त्वं यज्ञस्त्वं वषट्कारस्त्वमोङ्कारस्त्वं विष्णोः परमं पदम् ।' मन्त्रले विष्णुको ध्यान गर्दै 'अमृतोपस्तरणमसि स्वाहा' भनी आचमन गर्नू । आचमन गरेपछि पस्किएको खानामा अमृतको ध्यान गर्दै हात आदिको चञ्चलता नगरी मौन रही मुखमा पाँच प्राणाहुति हाल्नू ।

**प्राणाय स्वाहाऽपानाय स्वाहा व्यानाय स्वाहा समानाय स्वाहोदानाय स्वाहेति क्रमं याज्ञवल्क्यो मन्यत उदानाय स्वाहेति शौनकबौधायनौ । याज्ञवल्क्योदितक्रमो वाजसनेयिनाम् । दन्तैर्नोपस्पृशेत् । जिह्वया प्रसेदङ्गुष्ठप्रदेशिनीमध्यमाभिः प्रथमाङ्गुष्ठमध्यमानामिकाभिर्द्वितीयामङ्गुष्ठानामिका कनिष्ठिकाभिस्तृतीयां कनिष्ठिकातर्जन्यङ्गुष्ठैश्चतुर्थीं॑ सर्वाभिरङ्गुलीभिः साङ्गुष्ठाभिः पञ्चमीम् । अङ्गुष्ठानामिकाग्राह्यान्ने नैता आहुतय इति हारीतव्याख्यातारः । सर्वाभिरेता इति बौधायनः । मौनं त्यक्त्वा प्राग्द्रवरूपमश्नीयान्मध्ये कठिनमन्ते पुनर्द्रवाशी स्यान्मधुरं पूर्वं लवणाम्लौ मध्ये कटुतिक्तादिकान् पश्चाद्यथासुखं भुञ्जीत भुञ्जानो वामहस्तेनान्नं न स्पृशेन्न पादौ न शिरो न बस्ति न पराभोजनं॑ स्पृशेदेवं यथारुचि भुक्त्वा भुक्तशेषमन्नमादाय "मद्भुक्तोच्छिष्टशेषं ये भुञ्जते पितरोऽधमाः । तेषामन्नं मया दत्तमक्षय्यमुपतिष्ठतु ॥" इति पितृतीर्थेन दत्वाऽमृतापिधानमसि स्वाहेति हस्तगृहीतानामपामर्धं पीत्वाऽर्धं भूमौ निक्षिपेत् । रौरवे पूयनिलये पद्मार्बुदनिवासिनाम् । अर्थिनां॑ सर्वभूतानामक्षय्यमुपतिष्ठत्विति, तस्माद्देशादपसृत्य गण्डूषशलाका- दिभिस्तर्जनीवर्जमास्यं॑ शोधयेत् ॥२॥**

भावार्थः प्राणाहुतिका पाँच मन्त्र हुन्-प्राणाय स्वाहा, अपानाय स्वाहा, व्यानाय स्वाहा, समानाय स्वाहा र उदानाय स्वाहा । यो क्रमलाई याज्ञवल्क्य मान्दछन् । शौनक र बौधायनले उदानाय स्वाहा मात्र भने पुग्छ भन्दछन् । याज्ञवल्क्यले प्रतिपादन गरेको क्रम केवल

वाजसनेयिका लागि हो । यि प्राणाहुतिलाई दाँतले नचपाउनु जिब्रोले चाटेरै ग्रहण गर्नू । बूढी औँला समानका ति गाँस माझी औँलाले लिनू । पहिलो गाँस बूढी-माझी र साँहिली औँलाले, दोश्रो गाँस बूढी-साँहिली र कान्छी औँलाले, तेश्रो गाँस कान्छी-चोर र बूढी औँलाले, चौथो गाँस बूढी औँला बाहेकका चारै औँलाले र पाँचौं गाँस पाँचै औँलाको सहयोगले ग्रहण गर्नू । हारितका व्यख्याकारहरुले बूढी र साँहिली औँलाले पाँच गाँस लिने बताएका छन् । यी सबैले आहुति दिने भनी वौधायनले भनेका छन् । मौनता छोडी पहिले रसिला पदार्थ खानू । बीचमा कडा पदार्थ र अन्तमा फेरी रसिला पदार्थ खाएर नै भोजन समाप्त गर्नु पर्दछ । पहिले मीठो, त्यसपछि नुनिलो, तीक्खर आदि, बीचमा तीतो, अमिलो आदि र अन्तमा इच्छानुसार खानू । भोजन गर्दा देब्रे हातले अन्न नछुनू । गोडाले, टाउकाले, पेटले र पछिल्तिर राखिएको भोजन नछुनू । यसरि रुचि अनुसार खाएर (खानु) भोजन पछि बचेको अन्न लिई 'मद्भुक्तोच्छिष्टशेषं ये भुञ्जते पितरोऽधमाः । 'तेषामन्नं मयादत्तमक्षय्यमुपतिष्ठतु' पढ्दै पितृतीर्थबाट जल खसाली हातमा जल लिएर 'अमृतोपिधानमसि स्वाहा' पढी आधा जल पिएर आधा जमिनमा खसाल्नू । फेरी 'रौरवे पूयनिलये पद्मार्बुदनिवासिनाम् । अर्थिनां सर्वभूतानामक्षय्यमुपतिष्ठत्विति' मन्त्र पढी भोजनस्थलबाट केही पर हटेर चोर औँलो बाहेक गरी मुख र नाक सफा गर्नू ।

**न भार्यादर्शनेऽश्नीयान्न भार्यया सह न सन्ध्ययोर्न मध्याह्ने नार्धरात्रे नायज्ञोपवीती नाऽऽर्द्रशिरा नार्द्रवासा नैकवासा न शयानो न ताम्रभाजने न भिन्ने न राजतसौवर्णशङ्खस्फाटिककाँस्यभाजनवर्जं न लौहे न मृन्मये न सन्धिसꣳस्थिते न भुवि न पाणौ न सर्वभोजी स्यात्किञ्चिद्भोज्यं परित्यजेदन्यत्र घृतपायसदधिसक्तुपललमधुभ्यः, साध्वाचान्तो दक्षिणपादाङ्गुष्ठे पाणिं निःस्रावयेदङ्गुष्ठमात्रः पुरुषो अङ्गुष्ठं च समाश्रितः । ईशः सर्वस्य जगतः प्रभुः प्रीणातु विश्वभुगिति श्वात्राः पीता इति नाभिमालभेत, अमृता इत्यतः प्राग्-'अगस्त्यं वैनतेयं च शनिं च वडवानलम् । आहारपरिणामार्थं स्मरेद्भीमं च पञ्चमम्' ॥ इत्युदरमालभ्य-'शर्यातिं च सुकन्यां च च्यवनं शक्रमश्विनौ । भोजनान्ते स्मरेन्नित्यं तस्य चक्षुर्न हीयते' ॥ इति स्मृत्वा मुखशुद्धिं कुर्यान्नमो भगवते वाजसनेयाय याज्ञवल्क्याय नमो भगवते वाजसनेयाय याज्ञवल्क्याय ॥३॥**



भावार्थः पत्नीको सामु र पत्नी सँगै पनि नखानू । दुबै सन्ध्यामा, मध्याह्नमा, आधा रातमा, जनै नलगाई, भिजेको कपाल लिएर, चिसा लुगा लगाएर, एउटा मात्र वस्त्र लगाएर र सुतेर नखानू । तामाको भाँडामा र टुटेफुटेका भाँडामा खाना नखानू । चाँदी, सुन, शङ्ख, स्फटिक र काँसका भाँडा छोडी अरु कुनै पनि भाँडामा नखानू । फलाम, माटो र टालटुल गरिएका भाँडामा भोजन नगर्नू । जमिनमै राखेर वा हातमै लिएर भोजन नगर्नू । थाल पुछेर सबै नखानु, केही खानेकुरा अवश्य छोड्नू । अन्यत्र घिउ, खीर, दही, सातु, मासु र

महको शेष छोड्नु नपर्ने कुरा पनि बताइएको पाइन्छ । फेरी राम्ररी कुला र आचमन गरी दाहिने गोडाको बुढी औँलामा अङ्गुष्ठमात्र पुरुषका भावनाले यी मन्त्र पढ्दै हातले जलधारा खसाल्नू-'ईशः सर्वस्य जगतः प्रभुः प्रीणातु विश्वभुगिति, श्वात्राः पीता इति नाभिमालभेत, अमृता इत्यतः प्राग्-अगस्त्यं वैनतेयं च शनिं च बडवानलम् । आहारपरिणामार्थं स्मरेद्भीमं च पञ्चमम्' । अनि पेट मुसार्दै पढ्नू-'शर्यातिञ्च सुकन्याञ्च च्यवनं शक्रमश्विनौ । भोजनान्ते स्मरेन्नित्यं तस्य चक्षुर्न हीयत ।'

यसपछि नमो भगवते वाजसनेयाय याज्ञवल्क्याय, नमो भगवते वाजसनेयाय याज्ञवल्क्याय भन्दै मुख शुद्धि गर्नू ।

इति भोजनसूत्रम्

✷

भोजनसूत्रको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुभं भूयात् ।

✷

सबैको कल्याण होस् !